# डोग्री साहित्यको इतिहास

लेखक

**शिवनाथ**

अनुवादक

**हस्त नेचाली**




साहित्य अकादेमी

*Dogri Sahityako Itihas* : Nepali translation by Hasta Nechali of Shivanath's *History of Dogri Literature* in English. Sahitya Akademi, New Delhi (1984), Rs. 20.



प्रथम संस्करण : १९८४

साहित्य अकादेमी

प्रधान कार्यालय

रवीन्द्र भवन, ३५, फ़ीरोजशाह रोड, नई दिल्ली ११०००१

क्षेत्रीय कार्यालय

ब्लाक V-बी, रवीन्द्र सरोवर स्टेडियम, कलकत्ता ७०००२९

२९, एल्डाम्स रोड (द्वितीय मंजिल), तेनामपेट, मद्रास ६०००१८

१७२, मुम्बई मराठी ग्रन्थ संग्रहालय मार्ग, दादर, बम्बई ४०००१४

मूल्य :
बीस रुपये

मुद्रक :
भारती प्रिण्टर्स,
दिल्ली ११००३२

# भूमिका

म तीस वर्षभन्दा बढी समयसम्म रीडर र प्रेक्षक को रूपमा डोग्री साहित्यसित सम्बन्धित रहेको छु। यस अवधिमा, अंग्रेजी जान्ने पाठकहरूलाई डोग्री साहित्य परिचय गराउन मैले केही रचनाहरू लेखेको छु। यीमध्ये पहिलो 'डोग्री लोक साहित्य' दिल्लीबाट 'काश्मिर एफियर्स' को १९५९ को नोभेम्बर-दिसम्बरको अंकमा प्रकाशित भएथ्यो। यसपछि 'केस्ट' को जुलाई-सितम्बर १९७२ को अंकमा एउटा निबन्ध 'कन्टेम्परेरी डोग्री राइटिंग' प्रकाशित भयो। त्यसपछि भारत सरकारको शिक्षा मंत्रालयद्वारा प्रकाशित पत्रिका 'कल्चरल फोरम' को १९६५ को अप्रिल अंकमा मैले 'डोग्री पोएट्री टुडे' लेखें। १९६० को अन्ततिर 'इण्डियन राइटिंग टुडे' ले आफ्नो तेस्रो अंकमा 'ए ब्रीफ सर्भे अन डोग्री ल्यांग्वुएज एण्ड लिटरेचर' प्रकाशित गरयो। पछि यो सर्वेक्षणलाई डोग्री संस्था, जम्मुले 'डोग्री मान्यता दिवस' अर्थात् साहित्य अकादमीले डोग्रीलाई भारतको एउटा स्वतन्त्र साहित्यिक भाषाको रूपमा मान्यता प्रदान गरेको उपलक्षमा, १० सितम्बर १९६९ को दिन एउटा पुस्तिकाको रूपमा प्रकाशित गरयो। १९७२ पछि साहित्य अकादमीको त्रय मासिक 'इण्डियन लिटरेचर' ले पनि आफ्ना केही अंकहरूमा मेरा रचनाहरू प्रकाशित गरयो।

१९६७ मा 'प्रथम डोग्री लेखक सम्मेलन' मा एउटा लेख 'डोग्री कविता' पठन गर्न जम्मु गएको समयमा डोग्री संस्था, जम्मुका सचिव प्रो० रामनाथ शास्त्रीबाट मैले यो डोग्री साहित्यको इतिहास लेख्ने प्रेरणा पाएँ। १९७० सम्मको अवधिलाई लेखिएको प्रथम पाण्डुलिपि तयार पार्न मलाई प्रायः तीन वर्ष लाग्यो। साहित्य अकादमीका अध्यक्ष, डा० सुनिति कुमार च्याटर्जीले यो पाण्डुलिपि हेरि दिनु भई यसको शीघ्र प्रकाशनको निम्ति प्रेरणा दिई अनुग्रह गर्नुभएथ्यो। डोग्रीको निम्ति सल्लाहकार परिषदले आफ्नो प्रथम बैठकमा डोग्री साहित्यको इतिहास प्रकाशित गर्ने निर्णय लिंदा यो पाण्डुलिपिलाई प्रकाशनको निम्ति सर्वसम्मतद्वारा सिफारिश गरिएको थियो। दिसम्बर १९७४ सम्म ढाक्नलाई यो पाण्डुलिपिलाई अद्यावधिक बनाइएको छ। त्यसर्थ, त्यस पछिका डोग्री साहित्य क्षेत्रका गतिविधिलाई यसले ढाकेको छैन।

समय समयमा डोग्री प्रकाशन सम्बन्धी प्रकाशनकै निम्ति जानकारी प्रदान गर्नु हुने डोग्री संस्था, जम्मुका प्रा० रामनाथ शास्त्री र श्री रामलाल शर्माप्रति; पाण्डुलिपि हेरेर आफ्ना बहुमूल्य सुझाव प्रदान गर्नु हुने डोग्री सल्लाहकार परिषद्का सदस्यवर्ग श्री नीलाम्बर देव शर्मा, श्री अनन्त राम शास्त्री र डा० वेद कुमारी घाइ र पाण्डुलिपिमा स्वरका विशिष्ट चिह्न प्रदान गरिदिनु भएको निम्ति डा० वेद कुमारी घाइप्रति म आभार व्यक्त गर्दछु।

**शिवनाथ**

नयाँ दिल्ली
१ जनवरी १९७६

# विषय-सूची

अध्याय एक

# परिचायिका

डोग्राहरू, युद्ध भूमिमा तिनीहरूका साहस र तिनीहरूका प्रसिद्ध पहाड़ी चित्रकला शैलीका निम्ति प्रख्यात छन्, तर तिनीहरूका वासभूमि डुग्गर, तिनीहरू का भाषा डोग्री र तिनीहरूका साहित्यका विषयमा बाहिरी जगतलाई उति केही थाहा छैन।

## डुग्गर

भारतको त्यो भागलाई डुग्गर भनिन्छ, जुन डोग्राहरू द्वारा बसोबसो गरिएको छ र जहां डोग्री र संयुक्त उपभाषाहरू बोलिन्छन्। तैपनि यसलाई भारतका मानचित्रहरूमा त्यस्तो देखाइएको छैन अथवा इतिहासका पुस्तकहरूमा पनि त्यसरी जानिएको छैन। काश्मिर र यसका वरीपरीका इलाकाका इतिहास संबंधी सर्वप्रथम कृति कल्हणको 'राजतरंगिणी' मा 'डुग्गर' व 'डोग्रा' शब्द पाइन्दैन। प्राचीन मुद्राहरू, शिलालेखहरू, यात्रा विवरणीहरू, वा धेरै अधिका साहित्यमा पनि यसको वर्णन पाइन्दैन। ख्रीष्टाब्द एग्घारहौं शताब्दीको छम्ब ताम्रथालीमा 'डुग्गर' लेखिएको पाइन्छ अनि यसले डोग्राहरूका परंपरागत वासस्थान रावी र चेनावको बीचको अञ्चलका बसोबासो गर्ने सम्प्रदायलाई बुझाउँछ। कालान्तरमा 'डुग्गर' मा परिवर्तन आएको देखिन्छ अनि १९ सौं शताब्दीमा यी भूभागमा ब्रिटिशरूहरूका आगमनपछि, सतलज र चेनावको बीचको सम्पूर्ण पहाड़ी र उप-पहाड़ी अञ्चललाई 'डुग्गर' र यसका वासिन्दालाई 'डोग्रा' भनिए। दशौं र उनाइसौं शताब्दीको बीचमा डोग्राहरूले सम्पूर्ण क्षेत्रमा आपना प्रभाव विस्तार गरेको देखिन्छ अनि इतिहासको वृत्तान्त वर्णित त्यो समुदायको सामरिक प्रतिबिम्ब 'अजेय' लाई यस अञ्चलका सबै जन समुदायले अपनाए। डोग्राहरूलाई सेनामा भर्ना गर्ने उद्देश्यले यो अञ्चललाई निम्न दुइ उप-अञ्चलमा सीमास्थिर गरिएको थियो।

पूर्वीय अञ्चल, कांगड़ा, होशियारपुर र गुरदासपुरका जिल्लाहरू र पहिलेको सुकेतका राज्यहरू, पश्चिमतिर रावीसित मण्डी र विलासपुर, उत्तरमा धवलाधर र उच्चतर हिमालयहरू, पूर्वतिर सतलज, दक्षिणमा रूपारदेखि होशियारपुर हुंदै

गुरदासपुरसम्मका सीमा रेखा द्वारा गठित छ; अनि पश्चिमाञ्चल, जम्मुको पहिलेको प्रान्त र छम्ब राज्य र रावीको पश्चिमसम्म शियालकोट र गुरदासपुर जिल्लाका अंशहरू, पश्चिमतिर मनवर तावी, उत्तरमा पीरपञ्जल र दक्षिणमा गुरदासपुर देखि शियालकोटसम्मको सीमा रेखाद्वारा गठित छ।

प्रा० गौरी शंकरको मतानुसार, पहाड़ (उच्च पर्वत), काण्डी (निम्न पहाड़हरू) अनि शिवलिकको फेदीको समतल भूमि थी तीन भूखण्डले डोग्रा भूमि गठित छ। पर्वतीय क्षेत्रका केही भाग शुष्क र अनुर्वर छ, कहीं हरिया छन्, बीच-बीचमा नदीहरू तलावहरू र चउरहरू छन्, यस क्षेत्रका केही प्रसिद्ध शहरहरू, उधामपुर, रियासि, रामनगर, रामवन, छम्बा, धर्मशाला, कुध र कुल्लू हुन्। काण्डीको भूभाग विषम पहाड़हरू, असम चट्टानहरू र होंचा पहाड़हरूद्वारा गठित छ अनि कूपहरू, बाउलिस ढक्किस र साधारणतः पानीको अभाव यहांको विशेषता हुन्; कांगड़ा, बसोहली, नुरपुर, साम्बा, जम्मु, अरठनूर काण्डीका केही शहरहरू हुन्। नदीहरू र नहरहरूले उर्वरा भएको डुग्गरको समतलभूमि शिवलिक पहाड़को फेदीमा पर्छ; अन्दरवाह, वजवात, रणबीर सिंगपुरा, गुरदासपुर, पठानकोट, होशियारपुर समतलका शहरहरू हुन्।

## डोग्राहरू

यद्यपि ती तीनै भूखण्डका मानिसहरूका एउटा साझा संस्कृति र सामान्य मूल्यका पृष्ठभूमि र परंपरा छ तथापि तिनीहरूका विशेषताहरू र विविध जीवन-यापन विधि भिन्नाभिन्नै छन्। तुलनात्मक रूपमा पहाड़ी क्षेत्रका मानिसहरू सरल, आतिथ्यकारी, स्वतन्त्रताप्रिय, प्रकृतिको काखमा आनन्दित र साधारणतः आफ्ना जीवन-व्यवस्थासित सन्तुष्ट छन्। तर समतल क्षेत्रका मानिसहरू कम सरल, कम सरल प्रकृतिका, अधिक संसारज्ञानी, चतुर र तिनीहरूका जीवन यापन, कमलाई क्षिमेकी पजाबी जीवन-व्यवस्थाले प्रभावित पारेको छ। कठोर, परिश्रमी, आत्म-सम्मानी, आफ्ना नारीहरूका सम्मान र आफ्ना जाति र देशका निम्ति मर्न तत्पर झुकनभन्दा मर्न रूचाउने आदर्शरूपी डोग्राहरू, काण्डीका मानिसहरू डुग्गरका असल मानिसहरू हुन्। गुरिल्ला युद्धको निम्ति उपयुक्त रहेको काण्डी क्षेत्रले महान डोग्रा जवानहरु र सेनापतिहरु प्रादुर्भाव गरेको छ। धेरै समयसम्म समतल क्षेत्रका राजनैतिक विपरीत प्रवाहदेखि पृथक रहेको र प्राकृतिक, सुन्दरतामा प्राचुर्य्य रहेको यस क्षेत्रले वशोली, कांगड़ा, पून्च, गुलेर र जम्मुमा भारतीय चित्रकलाका महान सम्प्रदायलाई आश्रय दिएको छ।

भारतको उत्तर-पश्चिम सीमान्तका अन्य समुदायका मानिसहरू, काश्मिरी र पंजाबी जस्तै डोग्राहरू, आर्य परिवारका हुन्। तिनीहरू सुडौल शरीर, सफा र वृत्तअर्द्ध आंखी-भौंहरू, सोझो असल नाक, स-साना नासिका-क्षिद्रहरू, एक निश्चित

ग्रामिण र स्पष्ट रूपका, मझौला कद र सरल स्वभावका हुन्छन् । तिनीहरू मानव-कल्याणलाई आदर गर्छन् अनि पारिवारिक गर्व र व्यक्तिगत सम्मान प्रति दृढ़ भावना राख्छन् । तिनीहरू वीर, साहसी, निडर र ठूला-ठूला कठिनाइहरूलाई सामना गर्ने; साधारणतः सत्यवादी, आज्ञाकारी, र परम्परानिष्ठ हुन्छन्, तिनीहरू कहिले काहीं कम बुद्धिमान, आझ केही मन्द र तीव्र आक्रमक हुन्छन् । तिनीहरूका चरित्रका गुणहरूले तिनीहरूलाई आदर्श सैनिक मानिन्छन्—डुग्गरमा सैनिक सेवा सम्मानीय पेशा हो ।

विविध धर्ममतका अनुयायीहरू डुग्गरमा बस्छन् । त्यहां, हिन्दु, मुस्लिम, सिख र ईशाईहरानहरू छन् । तर, त्यहांका बहुसंख्यक वासिन्दाहरू हिन्दुहरू छन्, जो अनेक जात र उप-जातहरूमा विभक्त छन् । धेरै वर्षसम्म देशको अन्य भाग देखि पृथक रहेकोले, डुग्गरलाई पौराणिक हिन्दुमतद्वारा स्थिर पछौटे र रूढ़ीवादी भन्न सकिन्छ; अस्पृश्यता, शास्त्रोक्त पद्धति र जातिवादका विकारहरू व्यवहृत छन् । राष्ट्रिय स्वाधीनता पश्चात् डुग्गरका शहर र नगरहरूमा कट्टर जात-व्यवस्थामा शनैः शनैः शिथिलता आएको छ र उपनगरीय र ग्रामिण क्षेत्रहरूमा एउटा द्रवण शनैः शनैः विस्तारित हुंदैछ । १९०१ मा, डोग्राहरू प्रायः २५ लाख थिए । आज तिनीहरूका संख्या प्रायः ५० लाख हुनु पर्छ ।

## डोग्री

धेरै राम्रा राम्रा टालाहरूद्वारा बनाइएको सिरक जस्तै हो डोग्री, उपभाषा-हरूका यो एउटा पच्चीकारी हो । आज बोलिने यस ले युगौंको श्रोतमा अनेकौं ऐतिहासिक तत्वहरू र डुग्गरको पहाड़हरू र उपत्यकाहरूमा सुरक्षित इतिहासका अवशेषहरूद्वारा स्वरूप प्राप्त गरेको छ । त्यहां संस्कृत, खश, यवन, टक्का, गुर्जर, टर्क र मोगलहरूका प्राचीन भाषाको पदछाप छन्, जो भारतमा क्रमबद्ध रूपमा आए अनि स्थानीय जनसाधारणका जीवन विधि र बोलीमा आफ्ना प्रभाव छाड़ेर गए ।

अमीर खुशरोले ख्रीष्टाब्द १३१७ मा तयार पारेको भारतीय भाषाहरूका गणनामा डोग्री भाषाको सर्वप्रथम चर्चा पाइन्छ । यो सूचीमा दिल्ली या बोलिएको एउटा भाषाको लगतैपछि डुग्गर भाषाको चर्चा गरिएको छ । त्यसपछि, उनाइसौं शताब्दीको प्रारम्भमा, ठीक ख्रीο १८१६ मा, रेभं केरेले भारतीय भाषाहरूका आफ्ना सूचीमा डोग्रीको चर्चा गरेका छन् । १८६७ मा, आधुनिक भारोपेली-आर्य भाषिका प्रतिष्ठाता, जोहन बीम्सले, आफ्ना निबन्ध 'आउटलाइन्स आफ इण्डियन फिलोलजी' मा डोग्रीलाई भारोपेली-जर्मन भाषिक परिवारका आर्य शाखाका एग्घारहमध्ये एउटा हो भनी वर्णन गरेका छन् । यी ११ भाषाहरू थिए हिन्दी, बंगाली, पंजाबी, सिन्धी, मराठी, गुजराती, नेपाली, उड़िया, आसमिया, काश्मीरी

र डोग्रा । तिनले डोग्रा भाषा र यसको उप-भाषाहरूका क्षेत्र पंजाब र काश्मिर उपत्यकाको बीचको पहाड़ी क्षेत्र बताएका छन् । यो भाषाको आफ्नै लिपि थियो जसलाई टकारी भनिन्थ्यो, जुन दशौं शताब्दीमा पंजाब, डुग्गर र काश्मिरमा रहेको टकारी लिपिको सन्तान हो र जसले पछिबाट काश्मिरीका शारदा लिपि र पंजाबीका गुरुमुखी लिपिलाई जन्म दियो ।

ग्रियर्सनको 'लिंग्वोस्टीक सर्वे आफ इण्डिया' मा डुग्गर क्षेत्रमा बोलिने निम्न भाषाहरूका सूची छ :

१. डोग्री : जम्मु र यसको वरीपरी, शियालकोटको जफरवाल (यसको ११६ गाउंहरू) सम्म, बाजवात र निम्न पहाड़हरू र गुरदासपुर जिल्लाको वरीपरीका समतल क्षेत्र र पहिलेको छम्ब राज्यका केही भागहरूमा बोलिने ।

२. कण्डेली : गुरदासपुरको पहाड़ी क्षेत्र, उत्तर-पूर्व र शाहपुर कण्डीको क्षेत्रमा बोलिने ।

३. कांगड़ी : यो काश्मिरीको छिटा परेको डोग्री, पंजाबी र पहाड़ीको मिश्रित बोली हो । यो छम्बको टकारी लिपिमा लेखिन्छ ।

४. भाटियाली : जम्मु र काश्मिर राज्यमा जोड़िएको छम्बको पश्चिमी भागमा बोलिन्छ । यो पनि डोग्री जस्तै टकारीमा लेखिन्छ ।

५. शिरमौरी : शिरमाउर र जुब्बलको बोली हो । यसको लिपि पनि टकारीको एउटा रूप हो ।

६. बघती : बघत र शिमलाको दक्षिण-पश्चिममा बोलिने उप-भाषा हो ।

७. कितुंथली : यो किउंथल र शिमलाको वरीपरी बोलिने उप-भाषा हो ।

८. कुल्लूइ : कुल्लूमा बोलिने उप-भाषा ।

९. मन्डेली : मण्डी र सुकेतमा बोलिने उप-भाषा । यो पश्चिमी पहाड़ी भन्दा कांगड़ीसित बढ़ी मिल्छ । यसको लिपि पनि टकारीको एक प्रकार हो ।

१०. छमेली : यो जम्मुको भद्रवाही, कुल्लूइ र डोग्री को मिश्रणबाट बनिएको छम्बको बोली हो । यसका चारवटा उप-भाषाहरू छन्—(क) छम्ब वजारतमा बोलिने स्तरीय छम्बेली, (ख) भरमौरी वा गद्दी जुन भरमाउर वजारतमा विद्यमान छ (ग) चुराह् वजारतमा बोलिने चुरावी (घ) पंगी उपत्यकामा बोलिने पंगवाली र पंगवाली छमेलीभन्दा भिन्नै हुन्छ ।

११. कल्हूरी : उत्तर-पूर्वी होशियारपुरको पहाड़ीमा, विलासपुर कल्हूर र मंगलमा विद्यमान बोली हो । यसलाई विलासपुरी पनि भनिन्छ ।

१२. भद्रवाही : यो भद्रवाहमा बोलिने उपभाषा हो ।

१३. गुजरी : डुग्गरका पहाड़वासी गुजरहरूद्वारा बोलिने भाषा हो ।

१४-१५ रामपुरी र पोंग्ली : यी दुइ उप-भाषाहरूका डोग्री र काश्मिरीसित मिल्दा-जुल्दा तत्वहरू छन् ।

१६. होशियारपुर पहाड़ी : यो होशियारपुरको पहाड़ी अञ्चलमा बोलिने उप-भाषा हो अनि कांगड़ी र जलन्धरको द्वाबीको मिश्रणको नमुना हो।

१७. लहन्द : यो पून्छ, रजौरी, भिम्बर र नौसेरा क्षेत्रमा बोलिन्छ।

डोग्री, कण्डयावली, कांगड़ी र भटियाली धेरै मिल्छन् अनि ग्रियर्सनले पछिल्ला तीनलाई डोग्रीको उप-भाषाको श्रेणीमा राखेका छन्। जम्मु डोग्री टकारी लिपिमा लेखिन्थ्यो। कण्डयालीको आफ्नो लिपि थिएन अनि यसको लेखनको निम्ति टकारी लिपि प्रयोग गरिन्थ्यो। कांगड़ीको निम्ति चमेवाली लिपि प्रयोग गरिन्थ्यो अनि भटियालीको निम्ति जम्मु डोग्री प्रयोग गरिन्थ्यो।

पश्चिमी पहाड़ीका तीनपटा उपभाषाहरू, अर्थात्, चमेयाली, कुल्लूइ र मण्डियालीका टकारी लिपि थिए। यस्तो देखिन्छ कि अन्य उप-भाषाहरू कि त लेखिएनन् वात लेखिए ता पनि छिमेकी क्षेत्रमा विद्यमान रहेको लिपिमा लेखिए।

यदि एउटा असमतल जमीनमा फैलिएको एउटा ठूलो तलाव सुकाइयो भने त्यहाँ धेरै कुवाहरू रहन्छन्। डुग्गरका उप-भाषाहरू आज त्यस्तै स-साना कुवाहरू झैं देखिन्छन्। जे भए पनि यी कुवाहरूका पानीमा ठूलो तलावको अवशेष रहन्छ, जसले टक्काहरूका समयमा, अनि तिनीहरूका अघि र पछि सिन्धु र यमुनाका बीचको सम्पूर्ण अञ्चललाई ढाकेको थियो। यो तलावको छालहरू समय समयमा शारदा, लुण्डे र टकारीका विभिन्न लिपिहरूका रूपमा देखा परे जुन यो क्षेत्रमा मौलेर गए अनि भरखरै उनाइसौं शताब्दीमा सम्पूर्ण क्षेत्रमा टकारी प्रयोगमा छ भनी कनिंगहामले लेखे। तर, आज टकारी वास्तवमा मृत छ। जे भए पनि यसमा अभिव्यक्ति प्राप्त डोग्री पहाड़ी उप-भाषाहरू भने जीवित र वर्तमान छन्, अनि तिनीहरूमा डोग्रा जनताका भाषिक, ऐतिहासिक, भाषा-विज्ञान सम्बन्धी र सामाजिक पृष्ठभूमिमा शोधकार्यको निम्ति वृतान्तपूर्ण, उपयोगी अमूल्य कोष निहित छ। यो शताब्दीका डोग्री लेखकहरूले आफ्ना मातृभाषामा लेखनलाई देवनागरी र फारसी लिपिहरू अपनाएका छन्। यसको मुख्य कारण यस शताब्दीको अग्रदूत लेखकहरू टकारीको विशेषताहरूसित अपरिचित रहनु लेखन उद्देश्यको निम्ति टकारीको अपूर्णता र अपर्याप्तता हुनु र मुद्रण सुयोगहरूका अभाव हुनु। टकारीका स्वरवर्णहरू अस्पष्टतासित लेखिन्थे, धेरै जोड़िन्थे अनि दीर्घ र लघु स्वरवर्णहरु बारम्बार परस्परमा परिवर्त्तन गरिन्थे अनि प्रारम्भिक स्वरवर्णहरू अप्रारम्भिक स्वरवर्णका सट्टामा लेखिन्थे। तर, टकारी लिपिका गुणहरू पनि छन्। यो डोग्रा पहाड़ी उप-भाषाहरूका प्रकृति र उच्चारणका साँचालाई बढ़ी उपयुक्त हुन्छ। यो लेखन र टंकनार्थं सहज छ। यसको ध्वनि नियम वैज्ञानिक छ किनकि यसको लेखन ध्वनिमा आधारित छ। उपयुक्त संशोधन भएको भए डोग्री लेखनको निम्ति टकारी बढ़ी उपयुक्त साधन हुनेथ्यो। देवनागरीमा लेखिएको डोग्रीले लेखक र पाठक दुवैलाई कतिपय कठिनाइहरू उपस्थित गरिदिन्छ। सत्य के छ भने आज प्रत्येक लेखक-

द्वारा आ-आफ्नै ढंगमा डोग्री-पहाड़ी लेखिइन्दैछ र 'स्तरीय डोग्री' को विकासतर्फ कुनै गम्भीर प्रयत्न गरिएको छैन ।

## डोग्री साहित्य

वर्षौं पछि प्रस्फुटित, लोक र लिखित दुवै, डोग्री साहित्यको संक्षिप्त विवरण निम्न पृष्ठहरूमा निहित छ । कैयौं वर्षमा विभिन्न साहित्यिक विधाहरू र व्यक्तिगत लेखकहरूका विकास वर्णन गर्ने प्रयासमा कालक्रम पद्धति अपनाइएको छ । एकातिर डोग्री लोक साहित्य अत्यधिक सम्पदा र विविधताले पूर्ण विकसित छ भने लिखित डोग्री साहित्य अन्य भारतीय भाषाहरूका साहित्यका तुलनामा एउटा शिशु सदृश्य देखिन्छ । अनि यसको धेरै जसो अंश लोक स्तरभन्दा उच्च छैन । आकार, विषय र श्रेणी मासीमित यो एउटा आञ्चलिक साहित्य हो । तर, यो एक निश्चित ग्रामिण सुगन्ध, चहकीलो रंगीन चित्र र सरल तत्वपूर्ण डोग्रा समुदायको एउटा प्रतिरूप हो । भूमिबाट स्वतः स्फूरित यसको पुष्टता र शक्ति, आफ्नो वास्तविक आञ्चलिक विशेषता कायम गर्ने, यसका प्रबुद्धवर्गका हालैका अनुवादहरूया देखिए झैं अन्य भाषाका सर्वोत्तमलाई संविलीन गर्ने यसको सामर्थ्य र जम्मु र काश्मिर अकादमीद्वारा प्रकाशित लोक कथा संकलनमा देखिएका शब्द बाहुल्यता र भाषा सूक्ष्मान्तरको विविधताले यसको भविष्यको निम्ति उज्ज्वल संकल्प राखछ ।

अध्याय दुई

# डोग्री लोक साहित्य

१

डोग्री लोक साहित्यलाई आफैंमा एउटा पूर्ण साहित्य भन्न सकिन्छ। आमोद, शिक्षा र स्व-अभिव्यक्ति को निम्ति साधन प्रदान गर्दै, जनसाधारणका अनुभव, मान्यताहरू, विश्वासहरू, र आदर्शहरू, सुरक्षित राख्दै अनि भाषाको रचनात्मक उपयोगको निम्ति अवसर प्रदान गर्दै यसले डोग्राहरूका निम्ति पुस्तौं देखि, सैकड़ौं वर्षसम्म एउटा जीवित साहित्यको कार्य सम्पादन पूर्ण गरेको छ। निरन्तरको रूपान्तर नै यो मौखिक साहित्यको जीवन भएको हुनाले, यसको केही द्रवता र बोधगम्यता पनि छन जो जीवनसित नै सम्बद्ध भएको छ। माटोसित घनिष्ट रहेको हुनाले यो लोक साहित्य स्वस्थ र सुदृढ़ छ। जीवनको निकट हुनाले यो गतिशील र चिर-परिवर्त्तनशील छ—बहावपूर्ण, परिवर्त्तनशील, संचयी र परित्यागी—सदैव नूतन। जनसाधारणका मन र हृदयबाट सोझै बहने हुनाले स्वाभाविकै यो शुद्ध र खोला जस्तै सारपूर्ण छ। यो आडम्बरी र कृत्रिम साहित्यको अस्थायी आधारबाट मुक्त छ र संक्षिप्ततम शब्दमा प्रत्यक्ष भावाभिव्यक्ति ले सन्तुष्ट छ जुन भूमिको जीवन हुन्। संसारका धेरै जसो लोक-साहित्यहरूका जस्तै यो साहित्यको पनि प्रमुख लक्षणहरू विश्वव्यापकता, सम्पदा, विविधता, प्रतिरूपी प्रकृति र शोधकार्य सम्भाव्य हुन।

डोग्री लोक साहित्य दुई कारणहरूले सर्वव्यापी छ: प्रथमत: यसका विषयहरू सर्वव्यापी छन र यी विषयहरू गुँथिएका धागाहरू पनि सामान्य छन् र द्वितीयत: यो सम्पूर्ण डुग्गरमा एउटै रूपमा देखिन्छ—चाहे अख्नूर होस वा जम्मु, उधामपुर वा बशोली, चम्बा वा कांगड़ा, मण्डी वा विलासपुर। प्रणय र विछोड़, जन्म र मृत्यु, सुख र दु:ख, प्रकृतिको पृष्ठभूमि को विरुद्धमा मानव अस्तित्वका समस्याहरू, आ-आफना जटिलतामा मानवको पारस्परिक सम्बन्ध—यी नै संसारभरका लोक साहित्यका विषय हुन्। केवल प्रस्तुतिकरणको विधि मात्र विभिन्न स्थानमा भिन्ना-भिन्नै हुन्छ र आफना लोक साहित्यलाई रूप र रंग प्रदान गर्ने विभिन्न सम्प्रदायहरू र राष्ट्रका जनसाधरणका आ-आफ्नै भाषागत साँचा र नमूना हुन्छन्,

तिनीहरूका आ-आफ्नै स्थानीय, आञ्चलिक र प्राकृतिक पृष्ठभूमि हुन्छन्, तिनी-हरूका विचित्र आस्था र प्रथाहरूअनि तिनीहरूका विश्वास र विचारहरू हुन्छन् । गीतहरू प्रत्यक्ष रूप ले हृदयबाट प्रवाहित हुन्छ तर कथाहरू जीवनका केही नैतिकता र सदाचार अनि समुदायको मान्यता र अनुभवहरूलाई स्वयंमा साकार गर्ने केही विवेचना र प्रतिभाका कामहरू हुन् । केही लोक कथाहरु एउटा राष्ट्रदेखि अर्कामा पुग्छन् र त्यहांको स्थानीयताको प्रभावमा स्थानीय हृदयको अंश बन्छन् । केही स-साना परिवर्त्तनलाई छाड़ेर डोग्री लोक-गीतहरू सम्पूर्ण डुग्गरभरी एउटै रूपमा देखिन्छन् र एकै रागमा गाइन्छन्, जस्तै "छम्बे दिया धारां ··," "हरिपुर नूरपूर थंदियां नि छाउवां," 'अज्जइ दी रती रङ मरै गद्दिया···' जस्ता गीतहरू अनि कञ्जु र चइंचलोका प्रणय गाथा र गोपाल भगवान कृष्णका प्रणय-कथाहरू वर्णित र सासु-बुहारी र सिपाही र तिनकी पत्नी बीचका वार्तालाप वर्णित गीतहरू । यी गीतहरूमा परेका केही स्थानका नामहरू जस्तै शिमला, सुबाथु, छम्ब, जम्मु, रामवन, रजौरी र भीम्बरले सम्पूर्ण डुग्गरलाई अंगाल्छ । कांगड़ा, नूरपूर र जम्मुमा रामसिंहको बार [Bar] प्रसिद्ध छ । त्यस्तै प्रकारले, शिव र पार्वतीका कथाहरू र 'वन्डर अफ द सोयल' शीर्षक कथाहरू जहींतहीं वर्तमान छन् । डुग्गरका पवित्र स्थानहरूसित सम्बद्ध युद्धभूमिमा पराक्रमका परम्परा र उत्सर्ग प्रेरक कथाहरू पनि सर्वत्र प्रसिद्ध छन् ।

डोग्री लोक साहित्य धनी छ । असंख्य गीतहरू, हजारौं लोक गीतहरू र वाग्धाराहरू र सैकड़ौं करुण कविताहरू यतिञ्जेल सैकड़ौंमा संकलित भए तापनि यो केवल एउटा सानो अंश मात्र हो । आजसम्म, एक सीमित सूत्रबाट अर्थात् उधामपुर, जम्मु, अख्नूर, छम्ब, कांगड़ा र भद्रवाहबाट सोह सय गीतहरू र केही विरही कविताहरू संकलन गरिएका छन् । यदि सम्पूर्ण डुग्गरबाट लोक गीतहरु संग्रह गरिए भने ती लाखौंका संख्यामा हुनेछन् । सम्ब र जम्मु वरीपरी-बाट संग्रह गरिएका लोकोक्ति र वाग्धाराहरु प्राय: एग्घारहदेखि बारह हजार छन् । यदि यस संग्रहलाई सम्पूर्ण डुग्गर भरी विस्तार गराइयो भने तिनीहरूका संख्या लाखौं हुनेछन् । कैयौं वर्षअघि, प्रिन्स अफ वेल्स कालेज, जम्मुमा अंग्रेजी शिक्षकको रूपमा कार्यरत रहँदा पेन्सिलभानिया विश्वविद्यालयका डा० ब्राउनले प्राय: एक सय डोग्री लोक कथाहरू संकलन गरेका थिए । १९६० को प्रारम्भिक कालमा तिनकी एउटी शिष्य श्रीमती नरिको माइढ़ा अमेरिकाबाट जम्मुमा आएर आफ्ना शोधकार्य को निम्ति अख्नूर, जम्मु, उधामपुर र काटराबाट प्राय: ४०० डोग्री लोक कथाहरू संग्रह गरिन् । यदि सारा डुग्गरबाट लोक कथाहरू संग्रह गरियो भने तिनीहरू हजारौंका संख्यामा हुनेछन् ।

यो साहित्यले स्वयंलाई विशेष गरी यसका गीतहरूमा ठूलो विविधता पाइन्छ । व्यक्तिको जन्मदेखि मृत्यु पर्यन्त प्रत्येक गतिविधि को विषयमा लोक

गीत छन् । डुग्गरमा कम्तीको तीस प्रकारका लोक गीतहरू छन् जसका उदाहरण अघिल्ला पृष्ठहरूमा दिइनेछन् । त्यसरी नै डोग्री लोक-कथाहरू अतिविविधतापूर्ण छन् ।

डोग्री साहित्य पूर्णरूपले जन साधारणका जीवनका प्रतिरूप हो। यसमा समुदायको आदर्श, परम्परा, र आस्थादेखि लिए र घरेलु र सामाजिक जीवनको दिन दैन्यको सुन्दर चित्रण निहित छ। यिनीहरूमा संचित पौराणिक कथाहरू र उपाख्यानहरूमा समुदायको ऐतिहासिक सूत्रहरू अनि सांस्कृतिक बपौती निहित छन् ।

डोग्री लोक साहित्यमा शब्दहरूका यस्ता रूप र प्रयोग छन्, जसले भाषाविद्, भाषा विज्ञानविद्, इतिहासकार र समाजवेत्ताहरूलाई अध्ययनको निम्ति वैभवपूर्ण क्षेत्र प्रदान गर्दछ। इतिहासकारहरूले तिनीहरूमा सम्भवतः विजेताको रूपमा वा स्थायी वासिन्दा बन्न आएका अन्य सम्प्रदायका भाषाका अवशेषहरू अनि स्थानीय जनसाधारण र प्राचीन संस्कृतिका लहरमाथि तिनीहरू-का प्रभाव पाउन सक्छन् । भाषा विज्ञानविद र भाषाविदहरूले तिनीहरूमा विदेशी मूलका शब्द र वाग्धाराहरू अनि शब्दहरू र अभिव्यक्तिले अर्को स्थानमा सर्ने वर्णसंकरणका प्रक्रियामा कस्ता चाखलाग्दा परिवर्त्तन लिन्छन् सो खोज्न सक्छन् । लेखकहरूले तिनीहरूमा आफ्ना साहित्यिक सृजनाहरुका निम्ति शब्दहरू र अभि-व्यक्तिका विशाल कुंड पाउन सक्छन् । हाम्रा वैज्ञानिक युगको वैज्ञानिक पद र धारणाका निम्ति तकनीकी शब्दहरूत्यहां प्राप्य नहोलातर हिजसम्म भोगेका डोग्रा जीवनका सम्पूर्ण पक्षलाई पर्याप्तरूपले व्याख्या गर्ने शब्दहरू र अभिव्यक्तिका कमी छैनन् अर्कोतिर यो जीवनका केही धारणाहरू छन् जसले आफ्ना अभिव्यक्तिको निम्ति आधुनिक भाषाहरूमा पर्याप्त शब्दहरू पाउन नसकलान् । डोग्री लोक साहित्यमा प्रयोग गरिएको भाषा सरल, अर्थपूर्ण र शाब्दिक सम्पदापूर्ण र वाक्य संरचना विविधतापूर्ण छ।

२

डोग्री लोक साहित्य प्रकाशनको कुरा अति नयां हो। १९४० को अन्ततिर डोग्री संस्थाद्वारा प्रकाशित डोग्री कविताहरूका संकलन 'जागो डुग्गर' मा प्रथमपल्ट डोग्रीका लोक-गीतहरू छापामा देखिए; यीमध्ये दुइवाट प्रणय गीतहरू छन्, तेस्रोले डोग्रा गृहस्थी जीवनको झाँकी प्रस्तुत गर्छ अनि चौथी चाहिं प्रजातन्त्रको विषयमा भरखरै रचिएको लोक-गीत छ। प्रायः त्यही समयतिर, जम्मु प्रिन्स आफ वेल्स कालेजको पत्रिका 'तावी' मा प्रा० रामनाथ शास्त्रीको हिन्दी रचना 'डुग्गर देशका लोक गीतहरू'मा तीनवटा लोक गीतहरू छापिए। ती गीतहरूका शीर्षक थिए 'उस भूखियां धियां' (हामी भोका पुत्रीहरू), 'झूल वराइदेया पत्तरा' (हे, पीपल पात,

फर्फराऊ) अनि 'अज्ज बि इक्काली' (अकेला, आज र संधैंलाई)। यी तीनवटा गीतहरूले डोग्री लोक-गीतको सुन्दर र प्रतिरूप उदाहरण पेश गरेका छन्।

त्यसपछि १९५३-५४ मा 'नमीचेतना' का तीन अंकहरू प्रत्येकमा पाँचवटा लोक गीतहरू छापिए। प्रथम अंकमा छम्बा, कांगड़ा, बशोलि, कण्डी र सयोज-धारा प्रत्येकबाट एक-एकवटा लोक-गीत छापिए। दोस्रोमा कांगड़ा, कण्डी, अखनूर, जम्मु र भद्रवाह प्रत्येकबाट एक-एकवटा गीत छापिए; यीमध्ये प्रथम चार गीतहरू डोग्रा जवानका विषयमा थिए अनि पाँचौं वियोगी प्रेमीहरूका विषयमा थियो। तेस्रो अंकमा गद्दीको एउटा नृत्य-गीत, प्रीथि सिंह र इन्दरदीको एउटा युगल गीत, पहाड़ी जीवन विषयमा एउटा गीत नूरपूरबाट, युद्धमा गएको सिपाही पतिसित बिछोड़िएकी स्वास्नीमान्छेको एउटा गीत र शैशवकालको तीता-मीठा स्मृतिका छम्बाको एउटा गीत थिए। चौथो अंकमा छम्बका तीन गीतहरू, 'चम्बे दिया धारा', 'कुञ्जु र छइंचलो' र 'अल्गोजुआ', र भद्रवाहका दुइ गीतहरू, थिए। "नमीचेतना" मा पनि प्रथम पल्ट दुइवटा लोक कथाहरू प्रकाशित भए: 'परजा दे भाग' अनि 'कुब्बे गी लत्त'।

१९५४ मा, डोग्री मण्डल, जम्मुले डुग्गरको लोकप्रिय पौराणिक वीर बाबा जित्तोको जीवनका घटनाहरूमा वर्णित एउडा सानो पुस्तिका 'अमरकथा' प्रकाशित गरयो। त्यही वर्ष कांगड़ाका दुनिचाँद हमिरपुरीले लोक गीत विषयक दुइवटा रचनाहरू प्रकाशित गरे—एउटा दिल्लीको 'आजकल' मा "कांगड़ाका लोक गीतहरू" र दोस्रो धर्मशालाको 'डोग्रा सन्देश' मा 'लोक गीतहरूमा छनल' (छनल इन फोक संग्स)। पहिली रचनाले तेह्रवटा र दोस्रोले दुइवटा डोग्री लोक गीतहरूका नमूना दिए।

त्यस पछिका ६ वर्षहरूमा डोग्री लोक कथाका तीनपटा संकलन, डोग्री लोक-गीतका तीनवटा र उर्दू, हिन्दी र अंग्रेजीका पाठकहरूलाई डोग्री लोक साहित्यसित परिचय गराउनलाई पत्रिकाहरूमा विविध रचनामा केही गम्भीर प्रयासहरू देखिए। डोग्री संस्था, जम्मुद्वारा प्रकाशित लोक कथा संकलन 'एक हा राजा' (नौवटा कथाहरु), डोग्री साहित्य मण्डल, जम्मुद्वारा १९५५ मा प्रकाशित 'पौंगर' (चारवटा कथाहरू) र बंशीलाल गुप्तद्वारा सम्पादित १९५७ मा प्रकाशित 'डोग्री लोक कथां' (पन्द्रह कथाहरु) थिए। २५ वटा सुहाग र १८ वटा घोरिथां (विवाह विषयक गीतहरू) का डोग्री लोक गीत संकलन सुशीला सलाथियाको 'खरे मिट्ठे अथ्रूं' (आंसू—तीता र मीठा) मां छापिए अनि एम०एस० राण्डावाको २२० लोक गीतहरूका 'कांगड़ाका लोक गीतहरू' र यस्ता गीतका अंशहरू दुवै १९५६ मा प्रकाशित भए अनि हिमाचल प्रदेश सरकारको जन सम्पर्क विभागद्वारा १९६० मा सरमौर, महशु, विलासपुर, मण्डी र छम्बमा प्रचलित ८७ लोक गीत संकलन 'हिमाचलका लोक गीतहरू' प्रकाशित गरियो। दुनिचन्द

हमिरपुरीले दिल्लीका पत्रिकाहरू 'आजकल', 'कारवां' र 'सैनिक समाचार', चण्डीगढ़को 'पासबां' र धर्मशालाको 'डोग्रा सन्देश' मा डोग्री लोक गीतहरूमा आधारित र सम्बन्धित केही रचनाहरू दिए। पछि जनवरी १९५८ मा यी रचनाहरूलाई 'कांगड़ाका लोक गीतहरू' नामक पुस्तकको रूपमा कांगड़ा मित्र मण्डल, बम्बईले प्रकाशित गरयो। गम्भीर राजाले दिल्लीको कांगड़ा सेवक सभाद्वारा प्रकाशित पत्रिकाको वार्षिक अंकमा कांगड़ा उपत्यका र लोक गीतहरू र यसका छिमेकी अञ्चलका उखानहरूमाथि हिन्दीमा एउटा रचना लेखे। शिवनाथ ले दिल्लीबाट प्रकाशित दुइ महीने 'काश्मिर एफियर्स' को नोभेम्बर-दिसम्बर अंकमा अंग्रेजी पाठकहरूलाई डोग्री साहित्यसित परिचय गराउने प्रयासले 'डोग्री लोक साहित्य' लेखे।

१९६२ मा एशिया पब्लिसिंग हाउस ले जम्मु र काश्मिरका तत्कालीन सरदार-ए-रियासत डा० करणसिंह द्वारा सम्पादित ३१ वटा डोग्री लोक गीतका संकलन प्रकाशित गरयो। यसलाई 'श्याडो एण्ड सनलाइट' भनिन्थ्यो र यसमा मौलिक डोग्री गीतहरू तिनीहरुका अंग्रेजी र हिन्दी अनुवादसहित रागसहित दिइन्थ्यो। त्यही वर्ष जम्मु एण्ड काश्मिर एकाडेमी आफ आर्ट्स, कल्चर एण्ड ल्यांग्वुएजेसले तारा समाइलपुरी द्वारा संकलित ५०० वटा लोकप्रिय उखानहरूका एउटा शब्दकोष प्रकाशित गरयो। १९६४ मा जे० एण्ड के० एकाडेमी ले १९५ वटा गीतका आफ्नो प्रथम लोकगीत संकलन प्रकाशित गरयो—१० बिहाइस, २० घोरियां, ८१ झन्झोन्तिस, २० विसनपता, १० स्वारिस, ५ गरलोहिस, ३० भक्स, १ छन्द र ५ धोलारस। १९६६ को प्रारम्भमा यसले ८ कारकस र बार, ७८ झन्झोति, ३१ भक र २२ पर्वगीत भएको डोग्री लोक गीतहरुका दोस्रो र तेस्रो पुस्तक अनि तारा समाइलपुरीद्वारा संकलित ६००० वाग्धाराका एउटा शब्दकोष प्रकाशित गरयो। १९६७ मा, जे० एण्ड के० एकाडेमीले 'फूल चमेली' नामक ३७ डोग्री लोक-कथाहरूका संकलन र त्यस पछि १९६८ मा पुत्रको जन्म र विवाह जस्ता पर्वहरुमा गाइने १५५ वटा डोग्री लोक-गीतहरूका चौथो संकलन प्रकाशित गरयो। त्यस पछि यसले डोग्री लोक-गीतका पांचवटा र डोग्री लोक कथाहरू का छवटा पुस्तकरुरू थप्यो। हिमाचल प्रदेशको गौतम व्यथितले लोक साहित्य मा दुइवटापुस्तकहरू, 'पहरं दे अथ्रु' नामक लोक कथाका एउटा संकलन र अर्को 'कांगड़ी लोक गीत' थपे।

३

संसारभरका लोक कथाहरूमा जीवनका केही नीति वा आस्था वा सत्यलाई स्पष्ट गराउंदै, जीवनको अनुभवहरू र मानव हृदयको कार्यशीलताको पद्धतिलाई अभिव्यक्ति दिने सरल तर प्रभावशाली र रोचक पद्धति हुन्छ। डोग्री लोक

कथाहरूमा, यो घटना डोग्रा जन साधारणका जीवन र समस्याहरू अनि वैचारिक पद्धति र मानव जीवनमा नियतिको भूमिकाप्रतिको तिनीहरूका आस्थाका वर्णन लाई आञ्चलिक आभा व्याप्त स्थानीय बोलीमा देखिन्छ । यी लोककथाहरूका संसारमा असम्भव घटना केही हुंदैन । यी कथाहरूका रस्वादन गर्नलाई आफ्ना अविश्वासलाई निलम्बित गर्नुपर्छ । देवता-देवीहरू मानव स्वरूप लिएर तिनीहरूका क्रीड़ामा संलग्न बन्छन्; पक्षीहरू र पशुहरू, खोलाहरू र नदीहरू, वृक्षहरू र सर्पहरू बात-चीत गर्छन्; तिनीहरूका ब्राह्मण पुरोहितका घरमा सिंहहरू गएर भोजन गर्छन्; मृत व्यक्तिको भष्ममा अमृत छर्कदा उ बौरन्छ, दफनाइएका शिशुहरू आफ्ना वृक्ष र जवाकुसुमका लताहरूका रूपमा उम्रन्छन् र फुल्छन्; जादुले मान्छे भालेमा परिणत हुन्छ, काठको घोड़ा आकाशमा उड़न थाल्छ अनि वृक्षहरूले फलको सट्टामा बब्बरस (शुद्ध घिउमा पकाइएका मीठा रोटी) फला- उंछन् । सब सम्भव छ तर ती कथाहरूमा निहित मान्यताहरू र समाजको स्थिरता स्पष्ट छन् । यी मान्यताहरू: मानव प्रतिभाभन्दा प्रारब्ध बढ़ी शक्तिशाली हुन्छ; सत्यलाई रूधैं गोप्य राख्न सकिंदैन; त्यागले सुयश प्रदान गर्छ; कामेच्छा, आकांक्षा र घृणाका अन्त छैन अनि तिनीहरूले दुष्परिणाम ल्याउंछ; आफूले खनेको खाड़लमा आफै परिन्छ; मृत्युले विभिन्न रूपमा आफ्नो काम फत्ते गर्छ; प्रत्येकले आफ्नो कर्मको फल भोग्नुपर्छ; अयोग्य पात्रलाई दिइएको दानले लाभ को सट्टा हानि पुरयाउंछ; विवेक र साहसले अद्‌भुत कार्य गर्न सकिन्छ अनि कुनै पनि मानिसको जात उसको जन्मद्वारा होइन तर उसको कृत्यहरूबाट चिनिइनु पर्छ ।

धेरै जसो डोग्री लोक-कथाहरूका मुख्य पात्र-पात्रा राजकुमार वा राजकुमारी हुन्छन् । डुग्गर सधैं नै राजाहरू, राजकुमारहरू र जमीन्दारहरूका देश रही आएको थियो, जहां जन-साधरण घाँस-पात जस्ता अनि राजकुमारहरू र जमीन्दारहरू तिनीहरूका माझमा वृक्षहरू झैं थिए । जन साधरणका जीवनका घटनाहरू महत्वहीन हुन्छन् तर राजकुमारहरू र सम्पन्नवर्गका जीवनका घटनाहरू महत्वपूर्ण बन्थे । त्यसर्थ, तिनीहरूका जीवन विषयक कथाहरूले एकातिर उच्च वर्गका जीवन विषयमा जन-साधरणको कौतूहललाई सन्तुष्ट पार्दै अर्कोतिर जन साधरणका निम्ति शिक्षा बन्दै साधरण जनतालाई आकर्षित गर्छन् । कारण र प्रभावको निष्ठूर र अपरिवर्त्तनीय चक्रवद्ध प्रारब्धको समक्ष राजकुमारहरू र राजाहरू केवल खेलौना बन्छन् तिनीहरूका शक्ति र वैभव अर्थहीन बन्छन् । यदि मानिसका शक्तिशाली शासकको नै यस्तो अवस्था हो भने जन-साधारणका अवस्था कस्तो होला सो स्वीकारगर्न सकिन्छ ।

१९७० सम्म प्राप्त प्रकाशित सामग्रीका आधारमा, डोग्री लोक कथाहरूलाई निम्न अनुच्छेदहरूमा दश प्रमुख प्रकारमा वर्गीकरण गर्न सकिन्छ ।

(१) देवताहरू र देवीहरूका भूमिका सम्बन्धमा: यीमध्ये अधिकांश शिव

र पार्वतीका लीलासित सम्बद्ध छन् अनि कोही कृष्ण र हनुमानका विषयमा छन् । 'शिव मेहमा,' 'परजा दे भाग', 'असली भगत' र 'मने दा खोट' शिवलीला विषयक हुन् । कृष्णलीला विषयक एउटा 'भरुवा' हो, अनि हनुमानको विषयमा 'भले लइने दे देने पे' भनिन्छ । 'परजा दे भाग' डुग्गरको एउटा अति प्रसिद्ध कथा हो । एक दिन शिव र पार्वती बारह वर्षीय खड़ेरीले अभिशप्त भूमि भएर जांदै थिए, तिनीहरूले शुष्क भूमिमां मानिसहरू, पशु-पक्षीहरू, भोक-र तिर्खाले मरिरहेका अनि तीन वर्षसम्म दृष्टि शून्य बांझो जमीनमा हलोभा नारिएका दुइ दुर्बल गोरूहरूलाई हांकिरहेको एकलो दुब्लो कृषक देखे । पार्वतीको करुणाले शिवको कठोर उपेक्षालाई विजय गरयो र उसले प्रश्न गरी, "केही पनि हरिया नभएको यो कस्तो भूमि हो र त्यो एकलो दासरूपी वस्तु के हो, स्वामी ?"

शिवले उत्तर दिए, "यो अभिशप्त भूमि हो अनि यहां १२ वर्षसम्म वृष्टि हुने छैन । उत्तरजीवीहरूले खेत जोत्न नभूलोस भनी त्यो मान्छेले खेत जोत्ने क्रम जारी राखेको हो ।"

पार्वतीले आफ्ना स्वामीलाई स्मरण गराईं कि यदि उनले पनि १२ वर्षसम्म आफ्ना नाद (तुरही) बजाएनन् भने बजाउनभुल्न सक्नेछन् । "कतै यी तीन वर्ष-सम्ममा मैले बजाउनभूलें कि हेर्नु परयो," भनेर शिवले नाद ओंठमा राखेर फुके अनि हेर ! चारैतिरबाट काला बादलहरू मड़ारिन थाले र चारैतिर वृष्टि र जलाम्मे भयो । पार्वतीले शिवलाई मुस्कुराएर हेरी अनि उनी पनि मुस्कुराए, "मानिसको प्रारब्ध विचित्र छ" , उनले भने ।

(२) पौराणिक लोक-कथाहरू : यिनीहरूका पात्र हिन्दू पुराणका व्यक्तिहरू छन् जस्तै रावण विरामी हुंदा एउटा वैद्यलाई बोलाइएको कथा, वा अहिले ध्वंशावशेष रहेको डोग्राका प्राचीन राजधानी जगर बब्भोरसित सम्बद्ध बभ्रुवाहन अर्जुन र उलुपिका कथा, वा शुद्ध राक्षसको हत्याका कथा छन् ।

(३) स्थानीय देव-देवीहरू, सन्तहरू र तीर्थस्थान विषयक कथाहरू: वर्षैनि *लाखौं तीर्थ यात्रीहरू आकर्षित गर्ने भैरों,* सिद्ध गोरिया, बादा सरगल भैर, पुरमण्डल र वैष्णो देवी जस्तै (कांगड़ाको ज्वाला भगवती मन्दिर, जम्मुको वैष्णो देवीको मन्दिर दुर्गाको पूजाको निम्ति प्रमुख केन्द्र हो)

(४) सामाजिक असमानताहरू, पुराना लड़खड़ाउंदा सामाजिक मान्यताहरू र प्रथाहरू अन्धविश्वासहरू इत्यादिसित सम्बन्धित चातुरी र व्यंग्यात्मक कथाहरू: 'सत्त मूरख', 'जहट मशान', 'दर्शों आनें दी फीम', 'मर्जाद', 'खोटे दी चोरि', 'नक्के दी सेध जायां ते साग सत्तुं खायां', 'डुमका लारा', 'आल्सी टब्बर', 'लेखा घूल', 'भैमी राजा', र 'रानी खां दा साला', 'जहट मशान' र 'रानी खां दा साला' जस्ता सहजै फॅस्नेहरूप्रतिका व्यंगका कथाहरू 'वाहमी राजा' अन्धविश्वासमाथि,' 'दासें आनें दी फीम' भ्रष्टाचार र घुसरयोरीमाथि अनि 'आल्सी टब्बर' आलस्यता-

माथिका व्यंग हुन् । एउटा यात्रीले एउटा फलको वृक्षमनि एउटा केटालाई गतिहीन सुतिरहेको देख्यो। उसले त्यो केटा मरेको हो भन्ने सोच्यो तर जब उसले त्यो केटोलाई बोलायो त्यो केटोले आफ्नो देहमाथिको फललाई आंखाको ईशाराले देखाउंदै उसको मुखमा लगाइदिन त्यो यात्रीलाई इशारा गर्दै थियो। केटोविरामी होला भन्ठानेर उसले त्यसको कुरा मान्यो; तर त्यो केटोले, तिमी कस्तो मूर्ख रहे छौ! तिमीले त्यो फल मुखको देब्रेतिर पो राखिदियौ भन्दा त्यो यात्री स्तम्भित बन्यो। त्यो केटो जिब्रो चलाउने कष्टसम्म गर्न चाहदैनथ्यो। त्यो पथिक अर्को वृक्षमनि सुतिरहेको त्यो केटोको बाबुलाई उसको विरुद्धमा प्रतिवाद गर्न गयो, तर उसलाई त्यो मान्छेले भन्यो, 'हिज राती मैले मेरो दाही खांदै गरेको बाछोलाई धपाइदेऊ भनेर मेरा परिवारका अस्सी सदस्यहरूलाई दर्जनौं पल्ट, बिन्ती गरें, तर कोही आएनन् ।"

(५) जीवन देखि केही नीति या शिक्षा प्रमुख विषयक कथाहरू जस्तै 'चुम्म, दुम्म ते हिर्दा' मा शारीरिक सुन्दरता को निम्ति विवाह गर्दा एउटा मान्छेले दुःख पाउंछ, तर अर्कोले गुणको निम्ति विवाह गर्दा सुख प्राप्त गर्छ। 'काल देवता' मा मृत्युले विभिन्न प्रकारले आफ्ना काम फत्ते गरेको देखिन्छ। प्रत्येकले आफ्ना पूर्व कर्मका फलहरु प्राप्त गर्छ र यो जीवन त्यसको प्रतिफल हो भनी 'कर्मफल' मा पाइन्छ। वातावरणले कसरी एउटा व्यक्तिको स्वभावमा प्रभाव पार्छ सो 'मिट्टि दि करामात' ले दर्शाउँछ अनि प्रारब्ध अवस्यम्भावी छभनी 'भाग करनी-कर', 'साड़सती' र 'लेखें दे लखियान्त' ले बताउंछ। 'चार श्लोक', 'पराश्चित', 'कल्पसुन्दरि', 'पूम्बा', 'चण्डाल कुं', 'माउती दा डर', 'लालसा दी हद्दों', 'सतजुग', 'जालोखाला', चार शयाने चोर', 'पापमहाबल', पनि यही श्रेणीका कथाहरू हुन् ।

(६) साहसिक कार्यका कथाहरू यी कल्पनापूर्ण कथाहरू हुन् जहाँ एउटा राजकुमार ले भूतहरू र राक्षसहरूसित युद्ध गरेर आफ्नो जीवन संकटमा पार्छ, अनि एउटी परीलाई विवाह गर्छ, वा एउटा राजकुमार आफ्ना सालीको तिरस्कार ले घर त्यागेर लामो साहसिक अभियानमा जान्छ र त्यसपछि उसले राजकुमारी ललन वा खुशजादीलाई विवाह गर्छ र घर ल्याउँछ, वा एउटी बुद्धिमती केटीले सुनियोजित षड्यन्त्रद्वारा एउटा राजकुमारलाई पाउँछे। केही कथाहरूमा नायक या नायिकालाई सहायता पुरयाउन सुगा वा मैना सहायक बन्छन् ।

(७) सासू र बहुरीका बीचमा वा सौताहरूका बीचमा वा नन्द-भाउज्यूका बीचमा हुने शत्रुता र कलह विषयक घरेलु कथाहरू जस्तै 'ओडनूँ' र 'चमेली दा फूल ।' एउटा राजाको सातवटी पत्नीहरू हुन्छन् अनि उसले तीमध्ये सबैभन्दा सुन्दरी र प्रिय कान्छीलाई मन पराउँछ। उसले पनि एउटो छोरो उसलाई दिने प्रतिज्ञा गर्छे। शिशुहीन अरूहरू उसित ईर्ष्या गर्छन् र उसलाई अपमानित

गराउने उपाय गर्छन्। कान्छी रानीले जम्ल्याहा नानीहरू जन्माउँछे—एउटा छोरो र एउटी छोरी—तर अरु रानीहरूले तिनीहरूलाई जन्मनासाथ मृत मुसाहरूसित साटिदिन्छन् र राजालाई भन्छन् कि तिनकी प्रिया रानीले केवल मृत मुसाहरूलाई जन्म दिइन्। राजा रिसाउँछ र आफ्ना प्रेयसीलाई अपमानित गराइन्छे र राजादेखि विछोड़ गराइन्छे।

(८) पशुहरू र पक्षीहरू पात्र भएका नीति कथाहरू जस्तै 'मृग ते गिध', 'रोटाइ दा दिल', 'पखारू दि सिख', 'मित्तरता', महाबली' र 'अमर पताको।' 'पखारू दि सिख' एउटा अनुरागी राजा र तिनकी चपला रानीको कथा हो जसमा रानी राजाद्वारा प्वांखको एउटा महल चाहन्छे। त्यसो गर्दा हजारौं पक्षीका हत्या हुनेछ र कोपभवनमा प्रवेश हुनुपर्छ भन्ने राजाको प्रतिवादलाई उसले सुन्दिन। राजा पक्षीहरूका राजालाई बोलाई पठाउँछन्, जसले [पक्षीराज] आपत्तिको आशंकाले, पूर्व व्यस्तताले आफू उपस्थित हुन असमर्थ भएकोमा खेद प्रकट गर्दै सदभावनासहित आफ्ना वजिर [मंत्री] लाई राजाकां पठाउँछ। राजा विलम्ब सहन सक्तैनन् र पक्षीराजको उपस्थिति झट्ट चाहन्छन्। पक्षीराज आएर राजालाई प्रणाम गर्छ, जसले उसलाई प्रश्न गर्छ, "तँ के काममा व्यस्त थिइस्?" "हे महाराज! सबै पक्षीहरूका मदतले म हजुरको राज्यका मनुष्यका गणना गर्दै थिएँ। काम भरखर मात्र पूर्ण भयो र म हतारसाथ यहाँ आएको छु।" "त्यसको परिणाम के भयो?" पक्षीराजले भन्यो, "हजुर! हजुरको राज्यमा लोग्ने मानिसभन्दा स्वास्नी मानिसहरू बढ़ता रहेछन्।" "त्यो कसरी हुन सक्छ? गत वर्ष मात्र, हामीले गणना गर्दा स्त्रीभन्दा पुरुषको संख्या बढ़ता थियो।" "हजुर, हामीले जोइटिंग्रे पुरुषलाई पनि स्त्रीमै गणना गरेका छौं। त्यही नै गणनाको भिन्नताको कारण हुन सक्छ।"

"अच्छा।"

यो गुप्ति प्रसंग राजाको मनमा बिझ्यो र तिनले कुरा बुझे अनि प्वाँखको विषयमा केही पनि नभनी पक्षीराजलाई छोड़ि दिए।

(९) कुनै नीति वा कुनै गम्भीर रोचकता नभएका खिचड़ी कथाहरू जस्तै 'नाजोरनी', 'सुख', बब्रुएँ दा बूता' नामक कथाहरू। यी केवल समय काटने बुनाइका कामहरू जस्ता मात्र हुन्। कुनै केटाको एउटी बहिनी थिई, तिनीहरू एउटा भोजमा गए जहां तिनीहरूलाई बब्बरस [एक प्रकारको मीठो रोटी] दिइए। त्यो केटीले बब्बरस खाई तर केटोले बब्बरस ल्याएर घरपछाड़ि एउटा खाड़ल खनेर त्यहाँ राख्यो। कालान्तरमा त्यो खाड्ला बाट एउटा उद्भिद् उम्रियो र ठूलो वृक्ष भयो, पछि त्यसमा फलको रूपमा बब्बरस फल्यो। त्यहाँ एउटी वृद्धा बोक्सी थिई जो विशेषत: बब्बरसले मोटिएका केटा-केटीका मासु खान रूचाउँथी, त्यसर्थ, त्यसले त्यो केटोलाई पक्रने जाल गरी। कथामा त्यो केटो बोक्सीको

घरमापुगेको, त्यसकी छोरीले उसलाई प्रेम गरेकी, बोक्सी मरेकी र बोक्सीकी छोरी मरेकी वर्णन छ।

(१०) शहीदहरूका बलिदान र तिनीहरूसित सम्बन्धित स्थानहरू जुन स्थानीय वीरहरूका विषयका दन्त्यकथा बनेका छन् : 'बावाजित्ती', 'दाता रनु', 'रानी-रूल्ल', 'गुग्ग सलो', 'बाबा ध्योत सिंह्', 'सती शीलवन्ती', र 'महादेवी' यो श्रेणीका कथाहरू हुन्। जितो एउटा ब्राह्मण थियो, जो आफ्ना अधिकारको निम्ति र जमीन्दार मुखियाको शोषणको विरुद्धमा लड्यो। प्रतिवादमा उसले उठाइएको फसलमाथि आत्म हत्या गरयो अनि उसको आत्माले जमीन्दार र उसको परिवारलाई दिक दिइरह्यो। प्रति वर्ष बावा जितीको मन्दिरमा झिरी नामक मेला लगाइन्छ जहाँ मानिसको ठूलो भीड़ लाग्छ।

४

डोग्री उखानहरू र वाग्धाराहरू डोग्री लोक कथाको अति मुख्य तत्व हुन्, त्यस बाहेक भाषा प्रयोगको निम्ति मर्मज्ञ र प्रभावकारी निधि हुन्। यी समुदायका डोग्रा जीवन र अनुभवहरू, व्यवहारिक ज्ञान, विचार र धर्मगत विषयक वृत्तान्त-भण्डार हुन्। ती डुग्गरका खोला, नदी, नहर र खादका बगरमा चम्कीला रोड़ाहरू हुन्। जीवन बग्दै जान्छ अनि यी उक्ति र वाग्धाराहरूलाई जीवन र इतिहासको प्रवाहले फ्यांकिदिन्छ। तिनीहरू दैनिक जीवनवृत्तिबाट प्राप्त जीवनको सरल दर्शन पवित्र मान्छन्। अनुभव सार प्रस्तुत गर्दै, प्रभावपूर्ण शिक्षा सहित ठीक मर्ममा पारेर कम्ती शब्दमा धेरै कुरा भनिन सकिने गुण तिनीहरूमा छ।

## उखानहरू

डोग्री उखानहरूलाई निम्न रूपमा वर्गीकरण गर्न सकिन्छ :

१. मानिसका दैनिक जीवनसित धर्म र पुराणको घनिष्ट सम्बन्ध प्रकट गर्ने :

खाने गि चतुर्भुज
कामे गि जगन्नाथ
खानलाई चतुर्भुज, चार हात-युक्त देवता
अनि काम गर्न जगन्नाथ, पाखुराहीन देवता।
आगे हाथ, पिछे हाथ,
आये मेरे भगीरथ।
आफ्ना हातहरू हल्लाउँदै मेरो भगीरथ आउँछ।
बेले दी नमाज़, कबेले दियां टक्करां
केवल ठीक समय को प्रार्थनाले मात्र फल पाउँछ।

कुट्टे दी माउत आवइ तां आसीती चढ़ी मुत्तरदा
मृत्यु आएणहि, मस्जिदमा पिसाब गर्न कुकुर पस्छ ।

२. मानिसको जीवनको दर्शन प्रकट गर्ने :

मन भांदा खाचइ
जग भांदा लाचइ
आफ्लाई मन पर्ने चीज खाऊ
संसारलाई मन पर्ने वस्त्र लगाऊ ।

बद्धा मरइ ते खुल्ला चरइ
स्वतन्त्रतामा जीवन हुन्छ
दासत्वमा मृत्यु हुन्छ ।
पहिले आत्मा पिच्छूँ परमात्मा
पहिले आफू, पछि भगवान ।
उत्तम खेती, मद्धम बपार
निरिवद्ध चाकरी, भिक्खा दुहार
खेती उत्तम हो, व्यापार मध्यम हो
ढिडर नेइ पेइयाँ रूट्टियां
तां सारियां गल्लां खुट्टियां
भोकाएको मान्छेलाई कुनै कुरोले आकर्षित गर्दैन ।

३. केही नीतिहरु प्रतिपादक :

सियाने दि सिक्ख ते
अमले दा स्वाद पिछुवां
चेतई औंदा अइ
ज्ञानीको अर्ती र अमला फलको स्वाद पछिबाट मात्र बुझिन्छ ।
कर मजूरी खा चूरी
कठोर परिश्रम गर्नेले सदैव मीठो खान पाउँछ ।

४. अनुभव का सारनिहित :

आपुं मोए विना
सर्ग नेइं लबदा
केही जान्नलाई अनुभव हुनुपर्छ ।
युम्मनूं गइ उड्डुरेड
नां रूम्बल फरोल्दे

घुनले खाएको पुरानो कम्बल छोयो भने,ससाना झुत्रा मात्र उड्छ ।
जिन्ने तल्ले उन्ना पाला
जिन्ना टब्बर उन्ना जाला
जति धेरै लुगा, उति जाड़ो
जति धेरै परिवार, उति दुःख ।
वरसान्ती दी धूप
मातरेयां दि झिड़क
वर्षाकालको प्रखर सूर्य सानीमाको गाली जस्तै हुन्छ ।
दाने मुक्की गे जराने त्रुट्टिगे
धन-सम्पत्ती शेष भएमछि, साथी संगतले पनि छोड़छन् ।
जिन्दे कोहले दाने उंदे कमले बि सियाने
मूर्ख भए पनि ठूला-ठालूका नानीहरू ज्ञानी कहलाइन्छन् ।
झूठा गुढ़ ते सचा पिप्पली
मिथ्या गुड़ जस्तै मीठो हुन्छ,
सत्य पीपलको पौधा जस्तै तीतो हुन्छ ।

५. विषय बुझाउन रसिक व्यंग्यात्मक र प्रभावशाली उद्देश्यका :

जीन्देगि दांगा
मोएंगि बंगां

[जीवित छँदा कुनै व्यक्ति लाई निन्दा र दुर्व्यवहार गरिने र उसको मृत्यु पश्चात् ठूला ठूला प्रशंसा गरिएको सम्बन्धमा भनिएको]

दिन चर्चे तां अत्तां-भत्तां
रात पवइतां चर्खा कत्तां

[समय छँदा काम नगर्ने तर असमयमा काम गर्छु भन्ने व्यक्तिको विषयमा भनिएको]

कुक्कड़ बांग नेइं
देग तां लो गइ नेइं होग

[भाले नबासे बिहान हुँदैन ?]

जाति दी कोड़-किराली ते शतीरें गी जपहे

[कम आयको मानिसले उच्चाशा राखेको विषयमा भनिएको]

घर नेइं कुट्टी ते गभा दी सोह

[घरमा कुकुर पनि नभएको स्रीले गाईको कसम खान्छे, भन्ने अर्थमा]

अन्ना कुत्ता बाउ गि भौंकाइ
अन्धा कुकुर हावालाई भुक्छ ।
बब्बइ नेइं मारी पिद्दाड़ी ते पुत्तर तीर-अन्दाज

[दम्भी व्यक्तिको विषयमा भनिएको]

भिक्खा दे टुगाड़े ते लाउंगे दे डकार

*[आपन्नो वास्तविकता लुकाएर व्यर्थको अहं गर्ने मानिसको विषयमा भनिएको]*

६. जात-प्रथा र विभिन्न जातका विशेषतासित सम्बन्धित :

जट्ट मुहूशल ब्राह्मण शाह्
बनिया, हाकम, लक्का फाह्

[जाट कर-संग्रहकर्त्ता, ब्राह्मण व्यापारी, र बनिया अधिकारी भए भने तिनीहरू ले झमेला सृष्टि गर्छन् ।]

आपुन गले ब्राह्मणा कन्ने
जजमां बि गाले

[पुरोहितले आफू स्वयं र आफ्ना जजमानलाई पनि नोकसान पुरयायो ।]

कुत्ति मरइ चाइं
दी मारी ते मींए चा शकारे दा

[शिकारमा गएर चिलाउने रोग-ग्रसित कुकुरलाई मार्ने राजपुतको विषयमा व्यंगतात्मक भनाइ]

डुमकी कुड़ी ते
श्रा गी छग्गियाँ

[सानो जातको उच्च आकांक्षा विषय भनिएको]

पुत्तर जम्माँ खत्रइनियाँ
ते बिच बिच ब्राह्मणियां
इक्क दे इक्कि माउ दा दुधा
आहदे थमां वद्ध
अपानि वुद्ध

[खत्रीका पुत्रहरू जन्मँदै चतुर हुन्छन् । एकलाई एकाइस बनाउन तिनीहरूका वंश गुण हो र स्वचेष्टाले तिनीहरू अझ बढी बनाउन सक्छन् । कोही ब्राह्मण पुत्रहरू पनि चलाक हुन्छन् ।]

७. ऋतु परिवर्त्तन र समुदायमाथि तिनीहरूका प्रभावसित सम्बन्धित :

दशहरा फकोआ आए शीत
लोहरी फकोइ गे शीत
आएआ वसन्त, पाले उड़न्त ।

[शीत ऋतु दशैंसित आउँछ र लोहरीसित जान्छ, वसन्त ऋतुको आगमनमा जाड़ो लुप्त हुन्छ ।]

सोइ साउना ते वसन्ती न्हाउना

[ग्रीष्ममा सुत्नु अनि वर्षामा नुहाउनु असल हो।]

जेठ हाड़ कुखें, साउन भाद्रों रूखें

जेठ र आषाढ़ महीनामा घरभित्र, साउन र भाद्र महीनामा वृक्षमनि। वरहै माघेर कनकें दे ढेर

माघ महीनाको वर्षाले गहूँको फसल राम्रो हुन्छ।

पाला बचें दा साला
ज्यानें दा भाइ ते बुढ्ढें दा ज्वाई

नानीहरूका निम्ति जाड़ो भेना जस्तै हो, युवाको निम्ति भाइ र वृद्धको निम्ति जुवाइं जस्तै हो।

डोग्रा जीवनको प्रतिरूप दर्शाउने शीत ऋतुको विषयमा पद्यमा एउटा उखान छ—शिशु जन्मन्छ, जवान हुन्छ र युद्धमा जान्छ र मारिन्छ।

अस्सू सायाला जम्मेया, कत्तक होआ तियार
मध्घर फौजां चाड़हियां, पोह लड़ाई हो
मघ स्थत मरेया, फाउगन पेदा सोग।

जाड़ो अशोजमा जन्म्यो, कार्तिकमा तरूण बन्यो, मंगसरिमा युद्धमा गयो अनि पुषमा युद्ध लड्यो। यो माघमा मारियो त्यसैले फागुनमा सबैले शोक मनाए।

८. कृषि सम्बन्धका :

कनकइ उप्पर बी, माउ उप्पर धी।

असल बीजको असल अन्न जस्तै आमालाई छोरीले अनुकरण गर्छे।

खेती खसमइ सेनि

खेतीको निम्ति असल कृषिकर्मको आवश्यकता पर्छ।

जिथे पैलि खब्बल
उठें फसल अब्बल
जिथे पैलि दीला उठें फसल पीला
जिथे पैलि रोड़ उथें फसल चौड़

[भूमिको प्रकारसित सम्बन्धित फसलको विषयमा]

केही उक्तिहरू सर्वव्यापी छन् अनि ती स्थानीय बोलीमा विश्वका विभिन्न भागमा देखिन्छन्, केही ग्रामिण परम्परावद्ध छन् अनि प्राय: एउटै रूपमा भारतका विभिन्न भाषामा पाइन्छन् र केही पूर्णरूपमा आञ्चलिक छन्। यीमध्ये तीन प्रकार का उदाहरण तल दिइन्छ :

(१) अंखि ओल्हइ परदेश [डोग्री]
आखों से दूर दिल से दूर [हिन्दी]
आंख ओझल पहार ओझल [उर्दू]

आउट अफ साइट आउट अफ माइन्ड [अंग्रेजी]

(२) कुज राजा भोज कुजा गंगु तेली [डोग्री]

कहाँ राजा भोज कहाँ गंगु तेली [हिन्दी]

अथवा

आप कचज्जी ते देहड़े अलेंगी दोस [डोग्री]

नाच न जानें आँगन तेरहा [हिन्दी]

[अर्थ, नाच्न जान्दैन आँगन टेड़ो]

अथवा

पानी पीचइ पुनियाइ गुरु बनाचइ चुनियइ [डोग्री]

गुरु कबें जेने, जल खबे चेने [बंगाली]

[अर्थ, पिउनअघि पानी राम्ररी छान, आफ्ना गुरु राम्ररी चुन]

पइरें नेइं फुट्टि बिआइ केह जनइ पीर पराइ [डोग्री]

जाके पाइ नां जाए बिवइ

सो क्या जने पीर परइ [ब्रज]

[अर्थ, अचानाको पीर खुकुरीले जान्दैन]

३. जात सम्बन्धका—राजपूतका विषयमा, वंशगत व्यापारीको विषयमा र पुरोहितको विषयमा, जसका उदाहरण अघि दिइएको छ। अर्को उदाहरण तल दिइन्छ :

पिंदै आ बिगाड़े दा पलटनी च सौरदा

बिग्रेको गांउले ठिटो सेनामा सप्रन्छ।

## वाग्धाराहरू

तारा समाइल्पुरीद्वारा संकलित ६,००० वाग्धाराहरूमध्ये मनन गरिएका केही विशेषताहरू निम्न हुन् :

(१) तीमध्ये धेरै जसो मानव शरीरांगसित सम्बन्धित केही आधारभूत शब्दहरूले, केही दैनिक प्रयोगका वा प्रकृति वा धारणाका वस्तुहरूद्वारा गठित छन्। १२५ वटा हृदयसित, ११५ वटा गलासित, १०७ शिरसित मन र आँखा प्रत्येकसित ६८ वटा वाग्धाराहरू छन्।

(२) केही वाग्धारा का धेरै अर्थ हुन्छन्, उदाहरणको निम्ति :

गल्ल लानि अर्थ कुनै एउटा विषय शुरू गर्नु वा निन्दा गर्नु

(३) केही वाग्धाराहरू, प्रायः मिल्दा-जुल्दा छन् एउटा वा दुइवटा शब्दहरू परिवर्तन गर्दा अर्थ परिवर्तन हुन्छ :

नां रक्खनां अर्थ 'कोल राख्नु।'

नां रक्खी लइनां अर्थ 'सम्मान राख्नु'
नां रेइ जाना अर्थ 'नाम मात्र रहनु'

(४) केही वाग्धाराहरू एक वा दुइ शब्द परिवर्त्तनमा पनि त्यही अर्थ हुन्छ :

नाश करना
नाश पुट्टन
नाश मारना यी तीनैवटाका अर्थ 'नाश गर्नु' हुन्छ ।

(५) केही वाग्धाराहरूका वहुवचनमा अर्थ परिवर्त्तन हुन्छ :

नजर फटनी अर्थ 'अग्लो स्थानबाट हेर्दा भाउन्न छुटनु ।'
नजरां फटि जनियां अर्थ

यी र यस्ता धेरै वाग्धाराहरू हालमा मौखिक रूपमा मात्र सुनिन्छ जसले भाषाको वाहुल्यता, अभिण्यक्तिपन र प्रभावशाली पन दर्शाउँछ।

## पहेलीरू

फलौनि वा पहेलीहरूले पनि डोग्रा समुदायको जीवनमा महत्वपूर्ण स्थान ओगटेको छ। नानीहरूलाई कथा वर्णन गर्दा ठूलाहरू पहेली प्रयोग गर्छन् र नानीहरू तो पहेलीका अर्थ बुझ्ने चेष्टा गर्छन् । भाषाको संक्षेप र कलात्मक प्रयोग यी पहेलीहरूका अक्षुण्ण लक्षण हुन् जसले मानिसलाई आनन्द दिंदै सम्भागीलाई ज्ञान वृद्धि (कल्पना संचय गर्न) गर्ने सहायता गर्छ।

डोग्री प्रहेलीका केही नमुनाहरू यस्ता छन्न् :

अक्खनी-मक-खनी
दिनें भरोची
रतीं सक-खनी

[विलंग वर्णन गर्छ—शिलिंगमुनि एक कुनामा डोरी बांधिएको छ जसमा सिरक, तन्ना, कम्बलहरू इत्यादि कोक्रो हटाउंदा झुण्डिन्छन् । रातमा यो खालि हुन्छ, दिउंसो यो पूर्ण हुन्छ । ]

धारा उप्पर कुपा
अद-धा छांवां
अद्धा धूप्पा

[गोइत्रे वर्णन गर्छ—उकाली घाममा आधा घाम आधा छाया ।]

निक्की नेई कुड़ी
गज भर परांदा

[सियो—धागोको वर्णन गर्छ, सियो एउटी दुर्बल केटीको रूपमा अनि धागो एक

गज लामो लाछाको रूपमा ।]

म जम्मी नेइं

पुत्तर कोथे उप्पर

[आगो र धागो वर्णन गर्छ । आमा जन्मनभन्दा अघि अर्थात् आगो जल्नभन्दा अघि, यसको छोरो, छानुमा पुग्छ ।]

ओलनू-मोलनू

भित्तै पिछे खोलनू

[जुत्ता वर्णन गर्छ, सदैव घरभित्र पस्दा जुत्ता संघारमा फुकालिछ र ढोका पछिल्तिर नदेख्ने गरी राखिन्छ ।]

यी र यस्ता पहेलीहरूद्वारा असल रसिकता, सृजनात्मक कल्पना र डोग्रा जीवनका झाँकीहरू प्रकट हुन्छन् ।

५

डोग्री लोक साहित्यमा तीन प्रकारका सामान्य वर्णनात्मक गीत वा लामा वर्णनात्मक कविताहरू पाइन्छन् । ती भेत, कारक र बारहरू हुन् ।

**भेतहरू**

भेतहरू साधरणत. मन्दिरहरू, र तीर्थस्थानहरूतिर गाइन्छन् अनि तीहरूमा प्रार्थना, देवी-देवताका स्तुतिहरू र तिनीहरूका अद्भुत कार्यहरू र वरदानका विवरण छन् । देवीहरूका भेतहरूमध्ये, शक्तिको रूप, कांगड़ाको ज्वाला भगवती, कात्राको वैष्णोदेवी, भद्दुको शुक्रलादेवी, जम्मुको महामाया, बाहुको कालिका, सम्बाको चिचीदेवी र रामनगरको मनसा देवी प्रसिद्ध छन् । देवताहरूका भेतहरू-मध्ये चनईनामा सुद्ध महादेवमा, कांगड़ामा वैजनाथ, भद्रवाहमा वासुसि कुण्ड र कुल्लुको मन महेशमा गाइएकाहरू प्रसिद्ध छन् । ज्वाला देवीको एउटा भेत यस्तो छ :

माता, हजुरले वैकुण्ठ सृष्टि गर्नु भएको छ,
मेरो प्रथम अर्घ्य, पान, सुपारी, ध्वजा र एउटा नरिवल हजुरलाई
माता,
हजुरले वैकुण्ठ सृष्टि गर्नु भएको छ, माता ।
रातो पोशाक हजुरको देहमा सुहाउंछ,
अनि हजुरको ललाटमा गेरूवा टीका छ, माता !
हजुरले वैकुण्ठ सृष्टि गर्नु भएको छ, माता
अकबर हजुरको दरवारमा, खाली-पाउ आए, देवी,
अनि एउटा स्वर्ण-छत अर्पण गरे, माता
हजुरले वैकुण्ठ सृष्टि गर्नु भएको छ, माता ।

यो भेत राण्डावाको संकलनमा प्रकाशित भएको छ। जम्मु र काश्मिर अकादमीले प्रकाशित गरेको लोक-गीत संकलनमा वैष्णो र काल्काका भेतहरू अन्तर्मुक्त छन्।

## कारकहरू

कारकहरू देवगण, देवीगण, सन्तहरू र शहीदहरूका जीवनमा घटित घटनाहरूका वर्णन हुन्। यी साधरणत: सम्बन्धित देवता र देवीहरूका मन्दिरहरू अनि शहीदहरूका देहरीहरू (वेदी) मा गाइन्छन्। डुग्गरमा बावा जित्तो, दत रनु, राजा बहु रल्लका कारकहरू खुबै लोकप्रिय छन्। बावा भैर बावा सुरगल, बावा सिद्ध गोरिया, विप्रनाथ, बावा कुर, माइ मोलि, बावा नहर सिंग र अन्य शहीदहरूका केही कम लोकप्रिय छन्। जित्तोले आफ्ना अधिकारको रक्षाको निम्ति आफ्ना प्राण बलि चढाए तिनीगाउंको मुखिया मेहता बिर सिंहको अत्याचार र जबर्जस्त शोषणको विरुद्धमा लड़े। आफ्ना परिश्रमको पसिनाले फलाएको अन्नको राशमाथि चढ़ेर तिनले आफ्नो मुटुमा छुरीले रोपे। (पछि तिनकी सानी छोरी स्वयं मृत पिताको चितामा जली)

हे मेहता, रोटीसित खानलाई यहां तिम्रो निम्ति केही मासु छ ·
'राम ! राम' भन्दै तिनले आफ्ना मुटुमा छोरी रोपे।

आफ्ना प्रजाको भलाइको निम्ति ससुराले खनाएका नहरमा पानी आएको देखन सकून भनो राजा बहु रूलले आफूलाई जिउंदै दफनाइन्। ससुराले बोलाइ पठाएका कारण पूर्णरूपले जानेर तिनी पालकीमा गइन्। आफ्ना सासूको पाउमा ढोगेर तिनी मर्नलाई तयार भइन्। जसै श्रमिकहरूले तिनको वरीपरी पर्खाल उठाउन थाले, तिनले गाइन् :

सुन, हे मानिसहरू, मेरा अघि र पछि इंटा थुपार
तर, मेरा छाती नछोपिदेऊ !
सुन, हे मानिसहर, हो ! अर्जन र सर्जन यही बाटो आउनेछन्
अनि म तिनीहदरूलाई दूध दिनेछु।
सुन, हे मानिसहरू हो ! मेरा वरीपरी इंटा जोड़
तर, मेरा पाखुराहरू मुक्त राखिदेऊ।
सुन, हे मानिसहसू हो, मेरो भाइ यही बाटो आउनेछ
अनि म उसलाई मेरो अंगालोभा बांध्मेछु।
सुन, हे मानिसहरू हो ! मेरा वरीवरी इंटाहरू सजाऊ।
तर, मेरा नयनहरू नछोपिदेऊ !
सुन, हे मानिसहरू हो ! मेरा कैंता यही बाटो आउनेछन्
अनि म तिनलो स्वरूप नयनहरूमा भर्नेछु।

## बारहरू

प्रसिद्ध वीरहरूका युद्ध भूमिका त्याग, वीरता, साहस र निपुणतालाई उत्तेजक चरणहरूमा वर्णन गरिएका वीरताका वर्णणात्मक कविताहरू हुन्। ती मेला वा पर्वका उपलक्षमा र राजाका दरबारमा वा जन-समूहमा गाइन्छन्। डुग्गरमा खुबै प्रसिद्धमध्ये मुग्ग, रामसिंह पठानिया, राजा गोपीचन्द राजा भर्तृहरिका बारहरू हुन्। जयमल फत्ता र कालिबरीका बारहरू पनि प्रसिद्ध छन्। जम्मुका अञ्चलमा मियाँ दिदो, वाजिर जोरवार र तिनका सेनापतिहरू बस्ति राम, वाजिर रत्नु, होशियारा र राजसिंहका बारहरू पनि गाइन्छन्। कोही स्थानहरूमा, मीर दास चौहानको बार पनि गाइन्छ। शिरमाउरमा 'बार' लाई 'हार' मनिन्छ अनि त्यहाँका मानिसहरूका माँझमा र बखर मदन, कमन, होकु, सम र नोएंदीका 'हारहरू' वर्त्तमान छन्।

जम्मु र काश्मिर एकाडेमी आफ आर्ट, कल्चर एण्ड ल्यांग्वुएजेसले प्रकाशित गरेको लोक गीतका दोस्रो पुस्तकमा गुग्ग र मिरदास चौहानका बारहरू प्रकाशित छन्। अघिल्लो राण्डावाको लोकगीतमा पनि छ। दुनिचन्दको संकलनमा रामसिंह पठानिया र राजा गोपीचन्दका बारहरू छन् अनि राण्धावाका संकलनमा भर्तृहरिको बारहद आंशिक रूपमा छन्। पछिल्लो संवेदन र उत्कण्ठापूर्ण छ (करुण रस)। यी दुइ बारहरूका उदाहरण निम्न हुन् :

म योगी हुनुमा तिमी जिम्मादार छौ,
अहिले किन दुःखित हुन्छयौ, आमा ?
छोराहरू टाढ़ा गएका आमाहरूका हृदय-विदीर्ण हुन्छ।
गोपीचन्दको बार

केद्वारा यो देह-पिञ्जरा निर्मित छ ?
केद्वारा यो संसार-जाल निर्मित छ ?
यसलाई बुझ राजा भर्तृहरि।
झूठो छ यो देह-पिञ्जरा अनि झूठो छ यो संसार।
भर्तृहरि बार

रामसिंहको बार बीरता (वीर रस) को भावनामा चुर्लुम्म डुबेको छ

रामसिंह एउटा अवतारी राजा थिए
तरवार तिनको जन्म-वरदान थियो
आफ्ना बाहुबलले तिनी लड़े
चार बटालियनलाई तिनले तरवारले काटे
तिनले रक्तको खोलो बगाए
पठानिया किल्ला भित्र र बाहिरबाट लड़े

कहिले नजीक-नजीक र कहिले टाढ़ा-टाढ़ा थिए
थोपा थोपा रहिञ्जेल तिनले बारूद बाँड़े,
हातभरी तिनले वाणहरू बाँड़े
अनि दलको पहाड़बाट डाफलाहरूका आवाज आयो
अनि वरको स्तम्भबाट तम्बुरको आवाज आयो
रामसिंह किल्लाबाट लड़े
रामसिंह अवतारी राजा थिए ।

डोग्रीमा प्रणय कविताहरू किन छैनन् भन्ने प्रश्न बारम्बार गरिन्छ, विशेषतः जबकि छिमेकी पंजाबमा हीर-राँझा र सोहनी-महिवाल जस्ता उत्तम उदाहरणहरू प्रस्तुत गर्न सकिन्छ। असंख्य लोक-गीतका विषय बनिने प्रणय-भावना वा प्रणय-कथाहरूका कमीले यसो भएको होइन। एउटी गद्दी स्त्रीको निम्ति नगरकोटका राजा संसारचन्दका प्रणय निहित 'बाँकि गद्दन' यस्तै एउटा कथा हो। तर, यो लोक-गीत को रूपमा बढ़ी प्रचलित छ र यसलाई पेशादार गायकहरूले बारको निम्ति विषयको रूपमा लिएका छैनन्। डुग्गरमा सामाजिक मान्यताहरू र सामाजिक व्यवहारका सिद्धान्तहरूलाई खुबै आदर गरिन्छ अनि यी सिद्धान्तका लेशमात्र पनि अतिक्रमलाई घृणा गरिन्छ मात्र होइन तर यसको प्रसंग मात्रलाई पनि निरुत्साहित गरिन्छ। विशेषगरी यस्ता अतिक्रमलाई प्रशंसा वा स्तुति गर्ने कुनै पनि विषयलाई बारहरूमा स्थान दिइंदैन। बलिदान, आत्म त्याग, रणक्षेत्रमा वीरता, प्राणको मूल्यमा प्रतिष्ठा संरक्षण, धर्ममा कट्टर विश्वास—यी केही मान्यताहरू हुन्, जुन डुग्गरमा लोकप्रिय रहेका बारहरूद्वारा प्रचार गरिएका छन्। सामाजिक व्यवहारका स्थापित र स्वीकृत विधिका क्षेत्र बाहिर प्रेम नहुनाले ती बारहरूमा संलग्न गरिएनन्। रूप-वसन्तका कथाले डोग्री बारको रूप लिन्छ किनकि या दुइ दाज्यूभाइका बीचको प्रेम कथा हो। राजा हंसाको निम्ति राजकुमारी मोरनीको प्रेम-विपर्यन वर्णित हंसा-मोरनीका बारले पनि पिताको विरोधमा पनि मोरनीको प्रेम-सफलतामन्दा बढ़ी तिनका पिता राजा चिलमाइले आपना वचन पूर्ण गर्न नसकेको विषयलाई बढ़ी जोड़ दिन्छ।

दरेश, गार्डी, र योगीहरू कहलाइने पेशादार अनुवांशिक गायकहरूले डोग्री बारहरू किंग र चकर कहलाइने तारे साज र ढोलक बजाउंदै गाउंछन्। ढोलकको मन्द बजाइमा आवृत्तिको विधिले, ध्वनिको आरोह-अवरोह, लयको रूपान्तर र चापको अन्तरले आवेगमय वातावरण सृष्टि गर्छ। डोग्री कारक र बारहरूमा धार्मिक तत्व हुन्छन् र तिनीहरूले प्राचीन कालका ग्रीक नाटकहरूले दर्शकहरूलाई प्रभावित पारे जस्तै प्रभाव पार्छन्। वर्णन र वृत्तान्त प्रत्यक्ष हुन्छन्, भाषा सरल हुन्छ, तर प्रस्तुतिकरणको विधि यस्तो हुन्छ कि वीर रसपूर्ण गीत सुनेपछि श्रोताहरूका हृदयमा 'गरौं वा मरौं' भन्ने भावना जागृत हुन्छ अनि करुणा विषयक

बार सुनेपछि श्रोताको हृदय करुणाले आर्द्र हुन्छ र नयन अश्रुपूर्ण बन्छन् ।

६

डोग्री लोक गीतहरू रंगीन फूलहरू जस्तै हुन् जसले डोग्रा जीवनलाई आफ्ना सब पक्षमा प्रस्तुत गर्छन्—यसका सरल हर्षहरू, दु:ख-कष्ट, र समस्याहरू । गीतहरू असंख्य छन् र तिनका स्वरूप धरै छन् । विभिन्न उपलक्षमा गाइने गीतहरूका विभिन्न नामहरू छन् ।

## विहइहरू

शिशु जन्मोत्सवमा गाइने गीतहरूलाई विहइहरू भनिन्छन् । यी गीतहरू शिशु वृद्धिसित सम्बन्धित रीत र सुत्तरा जस्ता जन्मदिवस र उत्सवहरूमा पनि गाइन्छन् । विहइहरूका केही उदाहरणहरू तल दिईन्छन् :

१. महीना अंध्यारो छ, रातहरू अँध्वारा छन्
जन्मे कृष्ण मुरारी···
२. वासुदेव र जशुदाका एउटा पुत्र जन्मे,
सिंगहरू सुरले सिंगारेर
नन्दले ब्राह्मणकलाई गाइहरू दिए ।
"दीर्घायू बन कृष्ण",—भाटहरू, ब्राह्मणहरू आशिष दिन्छन्
सोह्र कलायुक्त ब्रजका नारीहरू
उनका दर्शन गर्न आउँछन् ।
३. अति भाग्यशाली छु म, आज
गणपति मेरा आंगनमा आएका छन्
यो जन्मलाई अध्यक्षता गर्न
ब्रह्मा स्वयं आएका छन्
इनीसित सती सावित्री पनि आएकी छन्
अति भाग्यशाली छु म, आज
उनको शिक्षा-दीक्षाको निम्ति विष्णु आएका छन्
उनीसित सती लक्ष्मी आएकी छन्
अति भाग्यशाली छु म, आज
सीता आएकी छन् अनि रामचन्द्र आएका छन्
तिनीहरूसित जती लक्ष्मण आएका छन्
अति भाग्यशाली छु म, आज
साँढ़मा चढ़ेर शम्भु आएका छन्
उनीसित पार्वती आएकी छन्

अति भाग्यशाली छु म, आज
वीणा बजाउंदै नारद आएका छन्
उनसित जती भैरों आएका छन्
अति भाग्यशाली छु म, आज।

## लोरी गीतहरू

नानीलाई सुताउंदा र नानीलाई फकाउँदा लोरीहरू गाइन्छन्। यी गीत-हरूमा नानीसित सम्बन्धित घरका आमाहरू, बज्यूहरू र अन्य स्त्रीहरू का स्नेह, आशा र भयहरू अभिव्यक्त हुन्छन्।

दिन्नियां लोरी, मन्नुआ, सेइ जायं, ओ !

## थल अनि नरत्ते

थल र नरात्ते स-साना बालिकाहरूले नवरात्रका समयमा, बिउ रोप्दा अनि आफ्ना थालका वरीपरी रंगिन वृत्तहरू कोर्दा अथवा पौधाहरू नदीतिर लैजाँदा गाउँछन्। यीमध्ये केहीमा देवीको स्तुति वा कृष्णलीलाको वर्णन हुन्छ। राम र कृष्णका जीवन विषयक गीतहरू डोग्राहरूमा साह्रै लोकप्रिय छन् अनि धनु भाँचेर रामले सीतालाई विवाह गरेको, कालिय नागको फणामा कृष्ण चढेको विषयहरू यस्ता गीतहरूमा हुन्छन्। तल दुइवटा उदाहरणहरू दिइन्छन्

१. पिताले घोषणा गरेका छन्—
धनु भाँच्नेलाई म मेरी छोरी दिनेछु
धनु भाँचिएन भने, म कुमारी नै रहनेछु
दिदी-बहिनीहरू हो !
धनु कसरी भाँचिन्छ,
दशरथका पुत्रहरू कलिला छन्
दिदी-बहिनीहरू हो !

२. "हाम्रा हातका चुरीहरू लैजाऊ
लाखौं रुपियापूर्ण थैला हामी दिनेछौं।"
"जशुदा आमाले दही पार्नेछिन्
उसित नागको डोरी छ।"

## गुजरी

गुजरीहरू पनि प्रायः जसो गोपाल कृष्णका लीलासित सम्बन्धित गीतहरू हुन्। यीमध्ये कोही कृष्ण र गोपिनीहरूका युगल गीत छन् अनि केहीमा गुजरीहरू र कृष्णाका वर्णन छ :

मथुराकी सुन्दरी गुजरी जान्छे
गोकुलको गोठालो बालक आउंछ
मथुराकी गुजरी सुन्दरी छे
यो गोठालो केटो खुबै काले छ !
हे गुजरी ! तिम्रो हृदय लुटने को हो ?
फूलहरूका मुस्कानसित मुस्काउने को हो ?
गाईहरूका गोठालो गर्ने को हो ?
हे गुजरी, तिम्रो हृदयमा रहने को हो ?

## आरती

देवी-देवताका स्तुति अनि सन्तानको सुख, समृद्धि र वरदानको निम्ति प्रार्थनाका गीतहरू आरती हुन् । शिव, देवी भगवती र लक्ष्मीनारायणका आरती-हरू छन् । नवरात्रका उपलक्षमा गाइएको एउटा आरतीको उदाहरण यस्तो छ :

हरे नारायण गोविन्द,
म हजुरको प्रतिमालाई पुज्छु
म माला जप्छु
म स्वर्गको द्वारमा जान्छु ।

## बिसनपत

बिसनपतहरू हिन्दी भजन जस्तै हुन् ।

## छिंजा र धोलरू

छिंजा, रित्तड़ी र ढोलरूहरू ऋतु परिवर्त्तन को समयमा गाइन्छन् । घुमन्ते गाइनेहरू ढोलक बजाएर गाउँदै घर-घर जान्छन् र नयाँ महीनाको नाम घोषणा गर्छन् । ढोलरूको एउटा उदाहरण तल दिइन्छ :

सर्वप्रथम यो सारा संसारको स्रष्टा रामलाई स्मरण गर
त्यसपछि यो संसारमा तिमीलाई प्रवेश गराउने
तिम्रा माता-पितालाई स्मरण गर ।
त्यसपछि चैत्रपछि आउने वैशाखलाई पुकार
अनि धार्मिक पथ समाऊ
बाह्र महीनापछि ढोलरू गुञ्जन्छ
बाह्र महीनामा एक चोटि यी दिन आउँछन्
सबै ऋतुहरू बारम्बार आउँछन्
तर, मानिस एक पल्ट मरेपछि कहिल्यै आउँदैन ।

## बारां माह

बारह महीनाका ऋतुहरूका वर्णन गरिएका अनि बारह महीनाभरि पति-वियोगले उत्पन्न एउटी स्त्रीकी सन्तापको स्थिति वर्णित गीतहरू बारां माह हुन् :

सिपाहीहरू—राज-सेवक यात्रीहरू हुन्
ती जानलाई घोड़ामा चढ्छन्
जांदैछौ टाढ़ा तिमी, मेरा प्रियतम !
मेरो हृदय क्षुब्ध छ, म वेहोश बन्छु।
चैत्र महीनामा, लिन्छु व्रत देवीको नाममा
तिमी टाढ़ा गयौ र मैले व्रत पालन गरिनँ
वैशाख महीनामा, अंगुरहरू पाकेका हुन्छन्
तिमी रह्यौ टाढ़ा, अनि ती मैले चाखिनै
जेठ महीनामा, सूर्य बढ़ी तीव्र हुन्छ
तिमी रह्यौ टाढ़ा, उदांगो आकाशमनि म सुतें
असार महीनामा, आंपहरू पाकेका हुन्छन्
आएनौ तिमी, एउटै पनि मैले टिपिनँ
झरीको साउन महीनामा, पिंग बनाइन्छन् वृक्षहरूमा
तिमी रह्यौ टाढ़ा, मैले पिंग खेलिनँ
अंध्यारो महीनामा, अंध्यारा हुन्छन् रातहरू
ती, घरमा पति हुनेहरूले, जलाए बत्तीहरू
तिमी रह्यौ परदेशमा, मैले अंध्यारामा बिताएं।
अशोज महीनामा, पुर्खाहरूलाई पूजा गर्छु,
तिमी रह्यौ टाढ़ा, मलाई पूजामा इच्छा भएन
कार्तिकमा दिवाली आयो, पतिसित हुनेहरूले
घरमा आनन्द मनाए
तिमी रह्यौ टाढ़ा, मैले पर्व मानिनँ।
माघमा, रूइका नयां सिरकहरू सबैले बनाए
घरमा पतिसित हुनेहरूले ती प्रयोग गरे
आएनौ तिमी, मेरो मैले खुट्टिमा रहन दिएँ
फाल्गुनको पनि यस्तै आदि···

## पर्व गीतहरू

मेला र पर्वहरूसित सम्बन्धित धेरै गीतहरू छन्। होली, लोड़ही, झिड़ि, चैत्र

चौदास, हरिपुरको मेला र कुल्लूको दशहरा विषयक गीतहरू छन्। होलीको एउटा गीत यस्तो छ :

हे रंगीन मनोहर राजकुमार, होली खेलौं,
हे महाराजा, होली खेलौं हामी,
एकतिरबाट आए श्याम कन्हैया
अर्कोतिरबाट आइन् राधा गोरी
रंग भरिएको पिचकारी, उनले हाने मतिर
अंग मेरा सबै भिजे
हे महाराजा, होली खेलौं हामी।

लोड़हीका गीतहरू पर्व मनाउनलाई तेल र पैसा संग्रह गर्ने केटाहरू अनि केटीहरूका दलले घर-घरमा गएर गाउँछन्।

## स्वादि र लद्दिहरू

रोपाइं गर्दा, खेत जोत्दा र फसल उठाउँदा दलबद्द भएर स्वादि गीत गाइन्छ। घरको छानु बनाउँदा गरलोड्डीहरू र दाउरा बोक्दा लद्दि गीतहरू गाइन्छन्।

## नृत्य गीतहरू

कुड्ड, फुमनी वा भांगड़ा जस्ता केही गीतहरू नृत्यसित गाइन्छन्। तीमध्ये कोही वेअर्थका शब्दका झुण्ड मात्र छन्। यी शब्दहरू गतिको सहायताको निम्ति मात्र प्रयोग गरिन्छन्।

झाक्का, म्झाक्का—झक्कालु !

## सुहाग र घोरि

डोग्रीमा विवाह विषयक धेरै गीतहरू छन्। बेहुलीको घरमा गाइने गीतलाई 'सुहाग' अनि बेहुलाको घरमा गाइने गीतलाई 'घोरि' भनिन्छन्। बोली, सीथनि र छन्द पनि बिहेको उपलक्षमा गाइन्छन्।

'सुहाग' हरूमा हुनेवाली बेहुली वा बेहुलीकी, आफ्ना माता-पिता र दाज्यू-भाइका स्नेह, माता-पिताका घरबट बेहुलीको विदाइ समयको वातावरणका भावनाहरूका र ससुराली घरमा बेहुलीको स्वागत वर्णन हुन्छन्। बेहुली आफ्ना पितालाई भन्छे :

पिता, खोजिदिनु होस मेरो निम्ति एउटा दुलहा
............

ताराहरूका माझमा एउटा चन्द्र जस्तै होस् उनी
देवताहरूका माझमा कृष्ण जस्तै होस् उनी
कन्हैया जस्तै बेहुला खोजिदिनु होस, पिता

विवाहको समयमा यज्ञाग्निको वरीपरी बेहुला-बेहुली घुम्दा स्त्रीहरू गाउँछन् :

को ब्यूँझेका छन् अहिले ?
राजा, अहिले त धर्मको समय हो ।
............
बेहुलीका पिता ब्यूँझेका छन् अहिले
सून, चाँदी दिन्छन् उनी
उनी आफ्ना छोरी दिन्छन्
राजा, अहिले त धर्मको समय हो ।

आफ्ना माता-पिताका घरबाट विदा भएर बेहुली जाँदा तिनकी सखीहरू गाउँछन् :

चिर्बिर् गरिहेछन् गौंथलीहरू
ढोकाबाट पाल्की जांदैन, बुबा,
पाल्की लैजान केही ईंटहरू हामी हटाउँछौं
जाऊ तिम्रा घरमा, छोरी ।

अनि ससुराका घर बेहुली पुग्दा स्त्रीहरू गाउँछन् :

नझन्काऊ तिम्रा बाईहरू, बेहुली
हाम्रा बेहुलालाई नतर्साऊ
दुलही सुन्दरी छे, दुलही सुन्दरी छे,
धन्य हो, तिनकी आमाले तिनलाई पठाई ।

घोरिमा साधारणतः सेहरा, छोड़ी, को बेहुलीका माता-पिता र बन्धु-बान्धव अनि बेहुलीको घर जानअघि बेहुला घोड़ामा चढ़्दाको विधि र स्तुति हुन्छ ।

## सिथनि र छन्द

सिठानि र बोलीमा दुलहीका सम्बन्धीहरूले दुलहा, तिनका सम्बन्धीहरूलाई गुनासो पोख्छन् र अवाधक प्रकारले निन्दा गर्छन् । त्यसरी नै दुलही र तिनका आफन्तहरूलाई तिरस्कार र दुवर्चनका गीतहरू छन् । जब बेहुला बेहुलीको घर जान्छ; बेहुलीका सखीहरू बेहुलाका वरीपरी भेला हुन्छन् र केही गाउन कर लाउँछन्, जसलाई छन्द भनिछ ।

## लोह्नी र पल्लहरू

डोग्रीमा केवल जन्म र विवाहको उपलक्षमा मात्र गीतहरू गाइन्दैनन् मृत्युमा गाइने लोक गीतहरू पनि छन् । यस्ता लोक-गीतहरू दुइ प्रकारका छन्, एउटालाई लोह्नी भनिन्छ, जुन द्रुत गतिमा छाती पिटाइको गतिसित गाइन्छन्, अनि अर्को पल्ल हो, जुन रूवाई-कराइको साथमा दुइ-दुइ शब्दमाथि जोड़ दिंदै शोक-गीत जस्तै धीमा चालमा गाइन्छन् ।

## विविध—पारिवारिक जीवन

संयुक्त परिवार डोगरा जीवनको आधारभूत एकाइ हो अनि बेहुलीको जीवनसित सम्बन्धित उसको ससुराली घर, उसको माइत घर, सासु-बुहारीका बीचमा, नन्द-देवरका बीचमा, बेहुला र उसकी बहिनीको बीचमा, भाइ-बहिनीको बीचमा, आमा र छोरा र पति-पत्नी विषयक धेरै लोक-गीतहरू छन् ।

ससुरालीबाट प्रथम चोटि घर फर्केकी दुलहीले आमालाई यसो भन्छे :

मेरा ससुराली शहरमा आगो लाइदेऊ, आमा,
म त्यहाँ बस्दिनं
आमा, त्यो मेरो घर होइन
मलाई तिनीहरू गोबर बीकाउंछन्, भांड़ा-बर्त्तनहरू माझन लाउँछन्
गाई-वस्तु चराउन लाउँछन्, खानेकुराहरू पकाउन लाउँछन्
इयासहरूमा आगो लाइदेऊ, आमा
बस्दिनं म त्यहां ।

एउटा घुमन्ते गाइनेलाई एउटी स्त्री आफ्ना माता-पिता र भाइको हाल-खबर सोह्छे :

बेड़ाइ बाउ जोगिया
बिन्ना लइ जोगिया
भिगी
प्योके दी गलिया सुना जोगिया
आएर बस मेरा आगनमा, हे जोगी
सबै भन मेरा माइत घरको विषयमा

सासू बाहिर गएकी समयमा बुहारी इच्छानुसार खानेकुरो पकाउँछे उ पूड़ा बनाउँछे, अनि यसरी गाउँछे :

सासू गएकी छिन् लाहोर
अनि मालिकनी हूं म यो घरकी, बहिनीहरू हो ?

थाह नदिई अचानक सासू फर्कन्छे, अनि भयको कारणले बुहारी पूड़ा खान सिक्तिन र उ गाउंछे :

खुट्टा ढोक्न निहुरिंदा
काखमा राखेको पूड़ा
बहिनी हो ! एउटा पूड़ा खस्छ ।

एउटी स्त्रीले आफ्ना देवरलाई यसो भन्छे :

हे मेरा देवर, हे प्रिय !
उड़ी गए पक्षीहरू मण्डीतिर
सेता भात पाकिरहेछन् हांड़ीमा
खाऊ अझ केही भात दूधसित, हे देवर !
हे मेरा प्रिय ।
पक्षी उड़ी गए जेयोततिर
मेरा चम्कीला दांतहरू र गुलाबी अधरलाई हेर
मलाई चूम, हे मेरा देवर
हे प्रिय !

भनी भएर उ पल्टन जान्छ, भाउज्यूको प्रेमलाई उ सांचिराख्छ अनि उसलाई पत्रहरू र उपहारहरू पठाउँछ :

मेरा निम्ति दु:खी नबन
नबन पीड़ित पनि

एउटी बहिनी आफ्ना ससुरालीमा भेट गर्न आफ्ना दाज्यूलाई समाचार पठाउँछे :

दाज्यू, हेर्न आऊ मलाई
............

आगनमा कसैको लौरोको आवाज सुनेर उ प्रत्याशाले उत्तेजित बन्छे :

पाहुना को आएको छ, आज ?
मेरा दाज्यू होला, मेरा दाज्यू पाहुना आएका छन्
चांड़ो पकाऊ, घ्यूर ।

अनि जब उ आउँछ, उसले दाज्यूलाई भन्छे :

मेरी-सासू रिसको अग्नि ज्वाला हुन्
अनि मेरी नन्द आकाशको विद्युत हो ।

दाज्यू आफ्नी बहिनीको असहनीय दुरवस्था बुझ्छ । फर्के पछि उसले आमा-

लाई सबै कुरो बताउँछ र सन्यास लिन्छ। आमा उसलाई अर्ती दिन्छे :

मेरा छोरो, जोगी बनेको छौ तिमी,
तर नजाऊ कहिल्यै
तिम्री बहिनीकां

आफ्ना नौकरीमा जाने सिपाही आफ्नो अनुपस्थितिमा पत्नीको देखरेखको निम्ति आमालाई सुझाव दिन्छ :

जाँदैछु सेवामा म, आमा,
बुहारीलाई सुखमा राखिदेऊ
आफ्नो निम्ति सुक्खा रोटी भए पनि
तर, तेलको पूरी होस, बुहारीलाई
भत्केको खाटमा पनि तिमी सुत्न सकौली
तर, पलंग होस बुहारीलाई
पुरानो फाटेको सिरक भए हुन्छ तिमीलाई
तर होस, नयां सिरक बुहारीलाई।

तर उसको अनुपस्थितिमा सासूले बुहारीलाई यति दुर्व्यवहार गर्छिन् कि उ मर्छे। घर फर्केपछि सिपाही आफ्नो अनुपस्थितिमा घटेका सबै घटना थाहा पाउंछ, र उसले सन्यास लिन्छ। यस प्रकारका अन्य विषयहरूमा एउटी पत्नीको आफ्ना पतिप्रतिको भावना, शिकायत, मांग र प्रश्नहरू छन्। केही गीतहरूमा पति टाढ़ा भएको समयमा उसको भावनाहरू व्यक्त गरिएका छन्। बाह्र वर्षपछि घर फर्केको सिपाहीले गाउँको कुवामा आफ्नी पत्नी भेटेको, पत्नीले उसलाई नचिनेको विषयमा बार्ताको रूपमा एउटा चाखलाग्दो लोक-गीत छ। सेनामा भर्ना हुन अघि उसले एउटी सानी केटीको रूपमा उसलाई विवाह गर्छ अनि बाह्र वर्षको यो लाभो अवधिमा उ एउटी सानी केटीदेखि तरुणी युवती भइसकेकी हुन्छे।

कुहे पर पानी भरौंदे कुड़ी

× × × ×

"कुवामा गाग्री भरिरहेकी, सुन्दरी,
कुनै राजाकी कन्या जस्ती देखिन्छयौ
देऊ पिउन मलाई पानी।"

"हे, राजाका सेवक !
जति भरिएकोबाट म पोखाउँदिन
आफै तृप्त बन, आफै पिऊ, हे !"

"म डोरी केको बनाऊं ?

अनि गाग्रो केको बनाऊं ?"
"तिम्रा पट्टीलाई डोरी बनाऊ, हे राज सेवक,
भर्नलाई तिम्रा नयनहरू गाग्रा बनाऊ,
हे राजाको सेवक।"

"तिमी जांदा तिम्रो गाग्रो फुट्न सक्छ
हे, राजकन्या !
तिम्रो गाग्रो मेरो हातमा जोगिन सक्छ
हे, राजकन्या !"

"तिमी जांदा तिम्रो आमा मर्न सकछे, हे राजसेवक !
तिमी तिम्रा भावीको वशमा पर्न सक्छौ
हे, राजसेवक !"

"हे, राजकन्या ! तिमी जांदा तिम्रो आमा गर्न सक्छे,
तिमी मेरो वशमा आउनेछौ, हे राजकन्या।"

कुवादेखि फर्किरहेकी कन्यालाई सासू प्रश्न गर्छे :

कुवामा यति अबेर किन गरयौ,
मेरी बुहारी ?

उसले उत्तर दिन्छे :

"मेरी सासू, एक जना यात्री थियो,
उ मसित बाझ्यो, मेरी सासू !"
"कस्ता थिए तिनका आंखाहरू, मेरी बुहारी ?
कस्तो थियो तिनको चाल ?"
"तिम्रा छोराका जस्ता थिए तिनका आंखाहरू,
मेरी सासू,
तिम्रा छोराको जस्तै थियो तिनका चाल,
मेरी सासू।"
"फर्की आएको छ घर बाह्र वर्षपछि मेरो छोरो,
हे, मेरी बुहारी !
उसलाई स्वागत गर्न वस्त्र लगाऊ
हे मेरी बुहारी।"

वियोगिनी पत्नीले काम छोड़ेर आउनु भनी आफ्ना पतिलाई पत्र लेखेकी विषयमा एउटा गीत छ :

काम छोड़ेर घर आऊ !

अनि नजानू भनी आग्रह गरिएको अर्को गीत :

तिम्रा घोड़ालाई म चाना खुवाउंछु
छाड़ि नजाऊ !
म लुगा बुन्छु, तिमी लगाऊ
छाड़ी नजाऊ
अरूको जभ्गाको काम तिमी जान्दैनौ
म पकाउनेछु अनि तिमी खानेछौ
छाड़ी नजाऊ !

उ जान्छ, गइसकेपछि उ गाउंछे :

पानीको अभावमा छटपटिएको माछा जस्तै
सेवारत व्यक्तिको पत्नी घरमा छटपटिन्छे।

## प्रणय-गीतहरू

बारहरूमा प्रणय, गीतहरू थोरै छन् तर गीतहरूमा भने प्रशस्त पाइन्छन् अनि डोग्री प्रैमका लोक गीतहरूमा कृत्रिमता र वाह्याडम्बर बहुनाले प्रणय श्रोतको मिठास र मनोहारिता हुन्छ। डुग्गरका भूमिबाट स्वस्थ र शक्तिमय झरना जस्तै प्रेम उद्‌भव हुन्छ। धौला धरको माथिल्लो प्रान्ततिर, कांगड़ाको माथिल्लो भागतिर, छम्बका केही भागहरूमा गद्दिका गीतहरू सुनिन्छन्। सज्जन र सजनीका प्रणय-गीतहरू रियासी, किस्तवाद, पादर र चेनाबको किनारतिर गाइन्छन्। त्यसरी नै भंवरा, गोरी, अल्बेलू, कुण्जु र चियांचलो, बञ्जाराका गीतहरू, छम्बी र राजा अमिरचन्दका, पान्नो गुजरो र राजा गुलेरका प्रेम, मियाँ र मोची स्त्रीको प्रेमका फुलमु, गंगी, लच्छीको प्रेमको, अनि प्रीथि सिंह र इन्दर देवी अनि गिल्मु र भागुका प्रेमका गीतहरू डुग्गरका विभिन्न भागहरूमा लोकप्रिय छन्। डुग्गरका प्रणय-गीतका केही टुक्राहरूका अशुद्ध तल दिइन्छन् :

नोइं कर गोरिए
मइलियां अखियां
कल्ल परदेशिएं टुरी बो जाना

नरूवाऊ तिम्रा नयनहरू, हे गोरी,
परदेशी हूं म त छोड़ी जानेछु भोलि।

छन्न माड़्हा चड़्हेया,
ओ चड़्हेया रजौरिया
बीन जाएयां पक्खरू

तें मिलि जाएयां चोरिया
चन्द्रमा उदाई मेरी, रजौरिमा
एउटा चरीको रूप लिएर
चरी भएर, भेट्न आउंछे मलाई, लुकी-छिपी ।
मने गि रखना नन्दा कन्ने
हृदयलाई आफ्नै खुशीमा रम्न देऊ प्रिय
शंकाले आफ्नो हृदय नबहकाऊ ।
हे भवंरा !
घुनुनु गर्वे, हे मेरी प्रिय भौरी !
अनुकम्पित र पीड़ित बनायौ मेरो हृदयलाई
मयुर पंखका कल्कीसित
रातो छ तिम्रो फेटा, प्रिय ।
माथिको पहाड़मा, मानिस मेरिना बेच्छन्
पंगीका मेरा प्रियवर, भन मलाई सत्य
कसरी बांच्न सकूँला म तिमी बिना ।
सुलिया टांगोइ गई जान
कण्टकमय छ मेरो जीवन
परिचय तिमीसित भएदेखि
वेदनाको सुस्केरा छ हरेक उच्छवासमा
घरद्वार भूलिसकेकी छु
पल प्रतिपल तिम्रो सम्झनाम बित्छ ।
तुसें जो प्यारियां, नौकरियां, कुम्हारवा
आशां जो प्यारियां सेजां ।
हे कुम्हारू, तिमीलाई तिम्रो नौकरी मन पर्छ
मलाई प्रियको विछ्यौना मन पर्छ ।
चन्ना बो तेरी चाननी
तारेआ बो तेरी लो ।
हे चन्द्रमा, तिम्रो चांदनी
हे तारा, तिम्रो ज्योति
गोरी सुटुक्कै उसको प्रेम-स्थानमा जान्छे
केही समयको निम्ति तिमीहरू पनि बादल पछि लुक ।
सोध्छौ किन तिमी मेरो जात अहिले ?
एउटै थालमा हामीले दूध-भात खाएका छौं
सोध्छौ किन तिमी मेरो जात अहिले ?

घरमा पत्नी छ तर तिमी यहाँ आएको छौ
एउटी गुजरीलाई तिमी प्रेम गर्छौ
हे गड्बी, एडटो गुजरीलाई तिमो प्रेम गर्छौ
महलहरू छाड़ेर तिमी यहाँ आएका छौ
तिमी यहाँको झोपड़ीलाई प्रेम गर्छौ,
हे गड्बी, एउटी गुजरीलाई तिमी प्रेम गर्छौ,
अज्जे दी रातीं, राउ, मेरे गदिया
अज्जे दी रातीं राउ !
पर्ख आजको रात, हे गद्दि
बस आजको रात !
शिकार खोज्न चितुवा रातमा मेरो खेतमा आउंछन्
अकेली, म भयभीत छु, हे गद्दि
बस आजको रात
मेरो घर यता र तिम्रो घर उता
अनि बीचमा बहन्छ नदी
मानिस भन्छन्, पन्नु काला छ,
तर, मेरा पन्नु हलुवा हो !
लुगा धुँदै आँसू बहाउंछु म, हे कुन्जु
सम्झनाले तिम्रो सताउँछ मलाई
हे मिया अल्बेलुआ,
हे मिया अल्बेलुआ, रतनियाको नाम लेख
धारानगढ़ीमा जब जान्छौ, मलाई एउटा लुगा ल्याइदेऊ !

## प्रचारका गीतहरू

केही डोग्री लोक गीतहरूमा समय काट्ने साधन, सिद्धान्त र प्रचारका गीतहरू पाइन्छन् । संचय प्रमाण-पत्रको विषयमा मत प्रचारको गीत पाइन्छ । एउटी स्वास्नी मान्छे अफ्ना लोग्नेलाई सेनामा सेवारत रहंदा आर्जन-गरेको रूपियाँले कानमा कुण्डल र नाकमा ढुंग्री किनि माग्छे । तर, पतिले उसलाई भन्छ कि यदि संचय प्रमाण पत्रमा ती रूपियाँ राखिए भने बाह्र वर्षमा त्यो धन डेढ़ गुणा ज्यादा हुन्छ ।

बारह महीनमा, यो डेढ़ गुणा हुन्छ
दश हुन्छ पन्द्रह
छोरालाई पढ़ाउन काम लाग्छ
उसको विवाह को निम्ति पनि

अनि एक टुक्रा जमीन किन्नलाई
हे फुलमु, मेरी पत्नी !

पहाड़मा रेलगाड़ी आएपछि, रेलगाड़ी को विषयमा गीतहरूकथिए :

गाउँ गाउँमा रेलगाड़ी जान्छ
............
इस्पातका बाटा बनाएका छन्

खादी प्रयोग र धूम्र पानले पुरयाउने हानिको विषयमा पनि गीतहरू छन्।

धोला, छोड़, छोड़ धुम्र पान
करारका यी पसलहरू सबै जलून्
ससुराका सारा धन उसैलाई भयो
कृपया, छोड़, छोड़ धुम्र पान
पसलेको कमाइ नहोस्
उसले मेरो दुंग्रीको इऊं बेच्न लगाएको छ
कृपया............

परिवार नियोजनको विषयका गीतहरू साधरण भइ सके अनि यी चांड़ै लोकप्रिय बन्छन्। तर, यस्ता गीतहरूले जन-साधारणमा स्थायीत्व प्राप्त गरेका छैनन् किनकि ती जन-हृदयबाट उत्पन्न होइनन्। हृदयबाट उद्भव भएका गीतहरू भिन्नै प्रकारका हुन्छन् र तिनीहरूका अर्थ गम्भीर र ग्राह्य हुंन्छन्, निम्न प्रकार जस्तै:

पतिको मृत्यु हुंदा, म केही गर्न सक्छु :
प्रेमीको मत्यु हुंदा, कसरी बांच्नु ?
लुगा च्यातिए सिउन सकिन्छ:
तर, आकाश च्यातिए कसरी टाल्न सकिन्छ ?

अथवा

पूनी शेष हुंदैन
धागो भाँचिदैन

अथवा

गोधूलीमा जब दिन र रात को मिलन हुन्छ,
बिहानीको शीत विन्दु,
गंगाको लहर,
कुम्भ मेला—
यस्तै हो तिमीसितको मेरो मिलन·
पूर्व नियोजित हो।

अध्याय तीन

# १९४० पूर्व डोग्री लेखक : अल्प-अन्वेषित क्षेत्र

डोग्री लेखनका प्रारम्भिक नमूनाहरू चट्टान र मन्दिरका लिपिहरू, ताम्र-थालका लिपिहरू, राजाहरूका स्तुतिका काव्य पठन र तिनीहरूका वंशावली सम्बन्धी तालिकाहरू, कबुलियतनामाहरू, सनदहरू नियमपत्र र केही ईसाइ साहित्यहरूमा पाइन्छन् । ती अधिकांशत: यस शताब्दी को शुरूसम्म डुग्गरमा प्रचलित टकारी लिपिमा छन् । यस अञ्चलमा विद्यमान र छरिएका अभिलेख र प्रलेखक निम्ति क्रमवद्धरूपमा खोजी भएको छैन, तर छम्ब राज्यमा भने छम्बका राजा भूरे सिंहको चासो र जनरल कनिंगहाम, डॉ० जे० हटचिसन र डा० जे० फ० भोगेलका कृतिका प्राप्त सामग्रीका विवरण सूची बनाइएको छ ।

## शिलालेखहरू

आजसम्म डुग्गरमा प्राप्त प्राचीनतम शिलालेखहरूमध्ये पथियार (धर्मशाला-देखि १२ माइल टाढो एउटा सानो गाउँ) अनि कनियारा (निम्न धर्मशालाको चार माइल पूर्व) का हुन् । अघिल्लो ख्री० पू० तेस्रो शताब्दीमा मौर्यहरूका समयको हो र बघैंचा र तलाव समर्पणको वर्णन छ; पछिल्लो ख्रीष्टाब्द दोस्रो शताब्दीमा कुषाणका समयको हो अनि दुइ बड़े-बड़े ढुंगामा 'कृष्णका बघैंचा' को नाम खोपिएको छ । दुवैमा दुइ लिपिहरूमा पौराणिक कथाहरू लेखिएका छन्— उत्तर र मध्य भारतका सबै जसो वर्णमालाहरूका स्रष्टा ब्राह्मी र दाहिनेबाट देब्रेतिर लेखिइने खरोष्ठी जुन भारतको उत्तर-पश्चिममा आकेमेनिडहरूले प्रचलनमा ल्याएका थिए । जम्मुको पहाड़मा भएको शुध महादेवकोलौह-स्तम्भ लिपि पनि ब्राह्मी लिपिमा छ ।

ख्रीष्टाब्द छैटौं शताब्दीको पनाली नाला चटान लिपि (लिलपरगनामा गुन नजीक) ख्री० ७०० को मेरू वर्मनको लिपिहरू, ख्रीष्टाब्द ८०४ को वैजनाथ मन्दिरका लिपिहरू, ख्रीष्टाब्द दशौं शताब्दीको युगकर परमनको ब्रह्माउरमा नरसिंह मन्दिरको पक्षमा ताम्र-थलिया करारनामाहरू, ख्रीष्टाब्द ११६० को देवीकोठी फव्वाराको लिपि, ख्रीष्टाब्द १३ शताब्दीको प्रारम्भिक कालको मुल-खिहर फव्वाराको लिपि अनि कांगड़ामा स्थित भवनमा वज्रेश्वरी देवी मन्दिरका

ख्रीष्टाब्द १४३३ र १४४६ को बीचका लिपिहरू सबै संस्कृतमा छन् ।

डुग्गरमा बोलिने भाषा, डोग्रीको परिचय, सर्वप्रथम ख्रीष्टाब्द ११७० मा सेचू नालामा स्थित सल्ही पत्थर लिपिमा देखिएको थियो। डा० जे० फ० भोगेलको शब्दमा, "आफ्नै प्रकारको सबभन्दा बृहत् सल्ही शिला (६ फी० ६ इ० अग्लो र ९ फी० चौड़ा) मा विभिन्न देवी-देवताका चित्र खीदाइ छ तीन लहरमा शृंखलाबद्ध छन्, पहाड़मा बोलिने भाषामा प्रत्येक चित्रलाई चिह्न दिई देवताका नाम देखाइएको छ। माथिल्लो लहरको केन्द्रमा त्रिशुल लिएका शिव छन्, उनका दाहिनेतिर जलका देवता वरूण र गणेश छन्, उनका बायांतिर वज्र-देव इन्द्र, र छ पटा चेहेरा भएका कार्तिकेय छन् । फोहाराको मुहानमाथि शिलापटको बीचमा विष्णुको निद्राको प्रतिरूपमा चित्रपट छ। अन्य आठ चित्रहरू नदी-देवीहरूका छन्, जुन सबै नै भाव र विशेषतामा मिल्दा-जुल्दा छन् केवल तिनीहरूका वाहनले मात्र छुट्टिन्छन् ।" यी देवीहरू गंगा, यमुना, सिन्धु, वेथ (झेलम), व्यास, सतलज, रावी र चन्द्रभागा हुन् । एघारौं शताब्दी ख्रीष्टाब्दको नगही फोहोरा शिलायट अनि ख्रीष्टाब्द ११६८-६९ को चुराहको साइ फोहोराको शिलालेखले पनि संस्कृत र डोग्री-पहाड़ीको मिश्रण प्रस्तुत गर्छ। राजा भोट वर्मनको ख्री० १४०० का चारवटा थालहरू पनि टकारीमा छन् । जम्मु र काश्मिर राज्यमा बशोलीको १५ माइल पश्चिमतिर महनपुरमा दुर्गा भगवतीको पुरानो मन्दिरमा ख्रीष्टाब्द १४९६ को मन्दिर शिलालेख पनि स्थानीय भाषामा छ। दशौं ख्रीष्टाब्दमा स्थापित लक्ष्मी नारायण मन्दिर छम्बको प्रमुख मन्दिर हो । यसलाई राजा प्रताप सिंह (ख्री० १५५९-८६) ले जीर्णोद्धार गरेका थिए, जसले त्यो मन्दिर पवित्रकरण गरिएको वर्णनका दुइवटा ताम्र-थलियाहरू १५८२ मा जारी गरेका थिए। यी दुइमध्ये एउटा थालमा स्थानीय भाषामा यसरी लेखिएको छ : "श्री सम्वत् ५८ वैशाख प्रविष्टे छ श्री बड़े नारायणे दे देहराइ प्रतिष्ठा होइ।" ख्रीष्टाब्द १६६० (विक्रमी १७१७) मा सरोल जाने बाटोमा छम्ब शहरको बाहिरपट्टि चौताराको शिलालेख पनि टकारीमा छ।

## ताम्र थालहरू

ख्रीष्टाब्द १५०० र १७०० को बीचमा जारी गरिएका छम्ब राजाहरूका ताम्र-थालहरूमा धेरै डोग्री अवतरणहरू छन् । स्वीकृत भूमिहरूका सीमा वर्णन गरिएका अवतरणहरू धेरै जसो डोग्रीमा छन् । यी भाषाका अंशहरूमा अनेकौं भौगोलिक र कृषि सम्बन्धी पदहरू छन् जुन विशेषरूपले ग्रामिण छन् । राजा बलभद्र (१५८९-१६४०) का ४२ वटा ताम्र-थालहरू छन् । ख्री० १५९५ का यी ताम्र थालहरूमध्ये एउटामा, गोठालो भगवान कृष्ण, गोपालको मन्दिरको पवित्रकरणको वर्णन छ। वंशीगोपालको नामले प्रसिद्ध यो मन्दिर, दरबारको

समीपमा छ र अवतरण डोग्रीमा यस्तो छ : "श्री दिवाने गोपाल रे देहरे प्रतिष्ठा किराइ।" राजा जित सिंहकी रानी साधाद्वारा राधाकृष्णलाई समर्पित छम्बको अर्को मन्दिरमा स्थानीय भाषामा लेखिएको शिलालेख छ, जसमा त्यो मन्दिर १८८२ विक्रमी वा ख्री० १८२५ मा पवित्रकरण गरिएको वर्णन छ।

## महाकाव्यहरू

कांगड़ा जिल्ला विवरणिका (Gazetteer) मा दुइवटा महाकाव्यहरूका वर्णन पाइन्छ— मानक चांद (ख्री० १५६५) र गम्भीर राई (ख्री० १६५०) का महाकाव्यहरू। अघिल्लोमा कांगड़ा (ख्री० १३६०-८८) को राजा रूप चन्दको शासन र फिरोज तुघलकद्वारा कांगड़ा दुर्गलाई घेरिएको वर्णन छ :

रूप चन्द्र भरकर छाड़ो!
दिलेश्वर सुरतां
बहुत हेतकर पगपरि पिठ हाथ लाई सां,

रूपचन्द दिल्लीका महाराज, सुल्तानलाई भेट्न गए र तिनको खुट्टामा परे, राजाले तिनको पिठयूँगा थपथपाए।

गम्भीर राईका महाकाव्यहरूमा नूरपूरका राजा जगत सिंहको अति शोषणको वर्णन छ, जो जहांगिर र नूर जहाँसित घनिष्ट थिए र जो ख्रीष्टाब्द १६४६ मा मरे। कविता बारको लोक शैलीमा लेखिएको छ :

जगत राजा, भगत राजा, वासदेव का जाया
सिन्दु मरे, सागर मरे, हिमाचल डेड़ा पाया
अकास को अबं कीता, तां जगत कहाया।

तिनले हिन्दु पारीसम्म देश विजय गरे, हिम पर्वतमा तिनले थर्पु हाले अनि आकाशतर्फ बन्दुक ताके, त्यसर्थ तिनलाई जगत भनियो।

डुग्गरका अन्य केही राजाहरूका पनि आफ्ना स्तुति गायनको निम्ति दरबारिया कविहरू थिए। जगत सिंहका अघि अकबरनामामा वर्णित एउटा महान राजा, वासदेव, तिनका पिता थिए। जम्मु, बशोली, छम्ब, कांगड़ा, गुलेर र जशवाँका राजाहरू थिए। शोधकार्य गरियो भने धेरै महाकाव्यहरू र लोकप्रिय बारहरूका लेखकहरूका नाम जान्न सकिन्छ।

## राजाहरूका वंशावली

गुलेर, कोटला, कांगड़ा, सुकेत, मण्डी र कल्हुरका वंशावली वा राजौलीका अस्तित्व—राजाहरूका वंशावली—विवरणिकामा वर्णन गरिएको छ। राजा दलिप सिंहको शासनकालमा, गुलेरको वंशावली, 'दिलीपरणजनी' ख्रीष्टाब्द

१७०५ मा लेखिएको थियो। मण्डीको टकारी इतिहर सुकेतको वंशावली भनेस कहिले लेखिएको हो सो जानिएको छैन। ख्री० अठारहौं शताब्दीको उत्तरार्द्धतिर कांगड़ाको राजा संसारचन्दका समकालीन कोतलाका राजा ध्यान सिंहको दरवारमा राजौली लेखिएको थियो। यो इतिहासको फारसी लेखाइको, डोगरीको सरल शैलीमा अनुवाद हो। एउटा अवतरण यस्तो छ :

जे भुक्खा दा रोटिया सारिया दि, भुक्खा होइ, होर आधी मिले तां रज्जी जन्दा। होर राज्यदा सारा संसार आये तां बि भुक्खा रेहंदा, तिस्कि भुख नइं लालसा हुइ, हिरस हुइ।

भोकाएको मान्छेको निम्ति भोक मार्न आधा टुक्रा रोटी पनि पर्याप्त हुन्छ। तर, नभोकाएको निम्ति सम्पूर्ण संसारले पनि उसको भोक शान्त गर्न सक्तैन। यो भोक होइन, यो चाहना हो, यो लालसा हो।

५०० नामहरू भएका कांगड़ा राजाहरूका वंशावली लेखनको ठीक समय जानिएको छैन, जसमा कांगड़ाका देवीको ललाटको पसीनाबाट प्रतिष्ठाता राजा भूमचन्दको प्रादुर्भाव भएको वर्णन छ, तर यसलाई ख्रीष्टाब्द १८२० मा राजा संसारचन्दको दरवारमा विलियम मूरक्रफ्ले देखेका थिए। कल्हुर राज्यका विद्वानहरूद्वारा राजा हिराचन्दको प्रत्यक्ष देखरेखमा संकलित अनि ख्रीष्टाब्द १८८२ (सम्वत् १९३९) मा विलासपुरमा प्रकाशित 'वंशवारा' मा कल्हुरका राजाहरूका ऐतिहासिक अभिलेख छन्। जम्मुका महाराजा गुलाब सिंहको संरक्षक महाराजा रणजित सिंहको दरवारी भाषा फारसीमा, जम्मु राजाहरूका वंशावली 'गुलाबनामा' लेखिएको थियो, जसलाई डोग्रीभन्दा उच्च मानिन्छ, अनि यसको डोग्री अनुवाद भरखरै गरिएको छ।

## अनुबन्ध, पत्र र कबुलियतनामाहरू

डुग्गरका राजाहरूका असंख्य सनदहरू, पत्रहरू, अनुबन्धहरू र कबुलियत-नामाहरू पाइन्छन् जसद्वारा थाहा पाइन्छ कि यद्यपि संस्कृत विद्वत र साहित्यिक भाषा अनि फारसी डुग्गरदेखि बाहिर र डुग्गरसितको सरकारसित योगायोगको भाषा थियो तथापि डुग्गरभित्र सरकारी कामकाज, निजी र सरकारी लेखापढ़ीको भाषा डोग्री थियो। छम्बको अजायबघरमा टकारीमा लेखिएका केही सनदहरू, पत्रहरू, अनुबन्धहरू र कबुलियतनामाहरू सुरक्षित छन्। यीमध्ये केही निम्न हुन् :

१. फतेह पाललाई भद्रवाहको राजा बनाइएको छम्बको राजा राज सिंह (१७६४-९४) र भद्रवाहका राजा फतेह पालको बीचमा टकारीमा लेखिएको अनुबन्ध।
२. ख्री० १७८१ मा जम्मुका राजा वज्रराज देवले जुंध, भलइ, भण्डल

किहार र दिउरका परगानाहरू राजा राज सिंहलाई प्रतिपादन गरेका पत्र।

३. ख्रीष्टाब्द १७८२ मा टकारी विशेषतामा स्थानीय बोलीमा लेखिएको कबुलियतनामा जसमा राजा राजसिंहले आफ्ना वाजिर जोरावरलाई, छम्ब र बशोलीको युद्धमा देखाएको सेवाको मान्यताको रूपमा ढुंढीको परगाना प्रदान गरेका छन् अनि जुन युद्धमा राजा राजसिंहले ख्री० १७८२ मा वशोली विजय गरेका थिए।
४. १७८२-७३ मा आफ्ना नाबालक पुत्र महा चाँदको सहायता र रक्षाको निम्ति विलासपुरकी रानीले राजा राजसिंहलाई टकारीमा लेखेकी पत्र।
५. १७८३ मा उपर्युक्त (२) मा वर्णित परगानाहरू फर्काउँदै जम्मुका राजा ब्रज राज देवले राजा राजसिंहलाइ टकारीमा लेखेको सनद।
६. उपर्युक्त (१) मा वर्णित जस्तै छम्बका राजा राजसिंह र भद्रवाहका राजा दया पालको बीचमा टकारीमा लेखिएको अनुबन्ध। यसको मिति छैन।
७. भद्रवाहका राजा भूप चन्दले विश्वासी रहने र कर दिने प्रतिज्ञा गर्दै छम्बका राजा जित सिंहलाई (ख्री० १७९४-१८०८) टकारीमा लेखिएको अनुबन्ध।
८. कांगड़ामाथिको संयुक्त आक्रमणमा सहायताको प्रण गर्दै कुलुका राजा प्रीतम सिंहले छम्बका राजा जित सिंहलाई ख्री० १८०१ मा टकारीमा लेखेको पत्र।
९. किशवर छम्बको अधीनस्थ रहेको तात्पर्य प्रकट गर्दै छम्बका राजा जित सिंहले ख्री० १८०३ मा किष्टवाड़का राजा तेज सिंहलाई टकारीमा लेखेको पत्र। यसमा जनाएको थियो कि किष्टवाड़माथि आक्रमण भएको खण्डमा छम्बले सेना पठाउने अनि किष्टवारले अरू शक्तिसितको युद्धमा छम्बलाई सहायता गर्नु पर्ने।
१०. कांगड़ाका राजा संसारचन्द र छम्बका राजा जित सिंहको बीचमा टकारीमा लेखिएको सन्धि पत्र (ख्री० १८०३)
११ ख्रीष्टाब्द १८२७ मा नूरपूरका राजा बीरसिंहलाई सहायतादिने-सम्बधमा प्रतिज्ञा गर्दै जम्मुका राजा गुलाब सिंहले राजा छरतसिंहलाई टकारीमा लेखेको पत्र।

जम्मुका राजा (ख्री० १७५०-८२) रणजित देवले एउटा मन्दिरलाई एउटा सानो टुक्रा जमीन दिएको दान-पत्र पनि पाइएको छ। त्यो यस्तो छ :

श्री रामजी सहाइ—पता महाराजा रणजित देव, जम्बु नरेशजी दे वचनें। अइ प्रमाण मलु वदगोत्रा बासी जम्मु गि लिखी दित्ता। श्री थाकर दुबारे देकन्ने गइर घमां अथा केरां बूने आली भूमि करी दित्ती। गइर थाकरें दी भेन्ता कीता।

१९ सौं शताब्दीका कैथौं कबुलियतनामाहरू, राजकीय घोषणाहरू र आदेशहरू सुरक्षित छन्। तीहरूले यस कालको डोग्रीको उदाहरण दिन्छन्। जम्मुको राजा जित सिंहद्वारा (१९ सौं शताब्दीको प्रारम्भ) जारि गरिएको थाल यस्तो छ :

श्री रामजी—पदा लिखेया सह प्रमाण श्री महाराजे श्री राजा श्री जीत सिंह जीदे वचनें मियें मोते हाथें श्री पण्डित पुरुषोत्तम कि पटा लिखी दित्ता। परगना जम्मु तप्प गल्ल बिच ग्रां एक ठांडे पद्र गुरें दी भेट कीती एस ग्रां दी पुन्दा सों पुन्दा सब किछ पण्डित होरें खानी। श्री महाराजाजी की शीरवाद करदे रहून…"

यो थालमा महाराज जीत सिंहले रामको नाममा पण्डित पुरुषोत्तमलाई गाउँको एउटा जमीन दान दिन्छन् र अधिकृत मोहरमा भन्छन् कि महाराजालाई आशीर्वाद दिने पण्डितले त्यो जमीनको उत्पादन लैजानेछ।

बाबुले छोरालाई खीष्टाब्द १८६० (सम्वत् १९१६) मा लेखेको निजी पत्र यस्तो छ :

चिरञ्जीव मियां सोनुजी दि जम्मु थुआं भूपसिंहे ने शुभ वचनां लिखि। श्री रघुनाथजी इथे उथे अपनी किरपा बनाइ रखां। अग्गे समाचार ए अइ क नथु चाड़के दे हाथें पंज साउ सत्तर भेजे हे सो कोश बिच तारी करी समाचार भेजना…

भूप सिंहले दीर्घ जीवी मिया सोनुलाई जम्मुबाट शुभेच्छा पठाउंछन्। श्री रघुनाथ (भगवान) ले आपना कृपा यहाँ र वहाँ प्रदान गरून्। नथु चरकद्वारा पठाइएको ५७० रु० सूचनासहित कोषागारमा जम्मा गरिनुपर्छ—

श्रीनगरमा महाराजका नौकरी गर्ने पतिलाई जम्मुबाट पत्नीले लेखेकी पत्र यस्तो छ :

स्वस्ति। श्री परमेश्वरें तुल्ल स्वामीजी दासी गोदावरी दा जथाजोग चरण· वन्दना ते सुख सांद वाचनाजी। इथें सब सुख अइ, तुसाड़ा सुख सांद घरे बिच ठाग्रें कसा सदा गइ मांग्दें हुइं। होरजी तुसाड़ा सुखसांद मते चिरे दा मिलेया नेइं अइ, सबने गी बाड़ी चिन्ता होया करदि अइ। पूरे त्रउं म्हीने कसा कोइ पत्री तुसें लिखि नेइं। बे होर ते बुआ होर सुधी म्हाउने आस्ते चाऊँ रोजें दी टुरी गइ दियां ना बिच ए पत्राका पन्तें दे जागते कोला लखाई दित्ती। होरजी अपाना सुखसांद म्हीने बिच एक बारी लिखना मने दी चिन्ता मटानी।

स्वस्ति। मेरा देवरूपी पति! दासरूपी पत्नी गोदावारी को चरण-प्रणाम अनि कुशल छु। यहां सबै कुशलै छौं अनि तिम्रो कुशलताको निम्ति हामी सदैव ईश्वरलाई प्रार्थना गर्छौं। धेरै दिनदेखि तिम्रो समाचार सुन्न नपाएकाले सबै

चिन्तित छौं। गत तीनमहीनादेखि एउटै पनि पत्र लेखेका छैनौ। चार दिन अघि तिम्रा मुमा र छेमा पवित्र स्नानको निम्ति सुधी गएका छन्। यही समयमा पण्डितको छोरोलाई यो पत्र लेखाएँ। हामीलाई चिन्तामुक्त गराउन कमसेकम महीनामा एक पल्ट आफ्नो कुशलताको विषयमा लेख।

शिलालिपि, कबुलियतनामा, घोषणापत्र, अनुबन्ध र पत्रहरूमा भएका डोग्री साहित्यका प्राचीन नमुनाहरूका यथाक्रम संकलन, वर्गीकरण र प्रकाशनको आवश्यकता छ। विशेषतः अन्तमा वर्णित विधा चाखलाग्दा र उपयोगी सामग्री प्रदान गर्ने आशाजनक छन् जम्मु र काश्मिर राज्यका मुहाफिजखाना, डुग्गरका अन्य राजाका गृहहरू र कोही प्रतिष्ठित परिवारहरू यस दिशामा बहुमूल्य सूत्र बन्न सक्छन्। जम्मुका दिवान नरसिंह दास नरगिसले आफ्ना उर्दू पुस्तक, महाराजा गुलाब सिंह र जम्मुको इतिहासको निम्ति केही पत्रहरू संकलन गरेका छन् अनि डोग्री शोधकार्य संस्था (Dogri Research Institute) जम्मुद्वारा प्रकाशित 'निबन्धावली' मा श्री डी० सी० प्रशान्तले आफ्ना रचना डोग्री गद्यमा केही उद्धरण दिएका छन्। आशा गरिन्छ, जम्मु र काश्मिर सांस्कृतिक अकादमी वा डोग्री रिसर्च संस्थान वा जम्मुको डोग्री संस्थाले १९ सौं शताब्दी, १८ औं शताब्दी अझ अधिको समयका पत्रहरू प्रकाशित गर्नेछन्। यिनीहरूले त्यस समयको भाषाको रूप मात्र होइन तर लेखन शैली अनि जन-जीवनका मान्यताहरू र टघनाहरूमाथि प्रकाश पार्नेछन्।

१८१८ मा शिरामपुरका ख्रीष्टान धर्मप्रचारकहरूले आफ्ना छापाखाना-देखि नया नियमको डोग्री अनुवाद प्रकाशित गरे। त्यस समयसम्म प्रकाशित टकारी लिपिमा छापिएको यो प्रथम पुस्तक थियो। पुस्तकमा प्रत्येक पृष्ठमा २८ लहर अनि ३६१ पृष्ठ छन्। हातले बनाएको कागजमा छापिएको त्यो पुस्तकको रंग उड्दैछ र त्यसको एक मात्र प्रति सिरामपुर मिशनसित छ। प्रायः १९०० स्वीतिर टकारी लिपिमा चमेयालीमा साहित्यको केही अंश लुधियानामा पनि छापिएको थियो। यसमा मत्ती, मार्क, जोहन र लुकाका सुसमाचारहरू, पर्वतमाथिको नैतिक शिक्षा र दल आज्ञाहरू छन्।

२

डुग्गरको संस्कृतमा गम्भीर लेखनको लामो र अबाध परम्परा थियो। पछि-पछि विभिन्न समयमा ब्रज भाषा, हिन्दी, पंजाबी र उर्दूमा लेख्ने रीति चलनमा आयो। यद्यपि डुग्गर देशका राजाहरूले चौधौं र पन्ध्रौं शताब्दीदेखि नै सरकारी कामकाजका निम्ति टकारी लिपिमा डोग्री प्रयोग गर्दै आएका थिए, तैपनि जन-साधारणको मातृभाषा डोग्रीलाई धेरै समयसम्म साहित्यिक साधनाको उपयुक्त वाहन मानिएन। डोग्रीमा रचना सामयिक विषयान्तर मात्र बन्थ्यो, जसको परि-

णामहरूलाई लोक परम्पराद्वारा अपनाइन्थ्यो। पुस्तकाकारमा जे रचिए तापनि संस्कृत वा ब्रज भाषा वा फारसी वा उर्दूमा लेखिन्थे। यसरी, ज्योतिष विज्ञानका पुस्तकहरू अनि 'कृष्ण महिमा स्त्रोत' जस्ता पुस्तकहरू संस्कृतमा लेखिए; वीर विलास र नीति विनोद ब्रज भाषामा लेखिए; गुलाब नामा पारसीमा लेखिए अनि तारीख-ए-राजगान-ए-जम्मू उर्दूमा लेखिए।

पहाड़ी चित्रकला शैलीमा गुंथिएर ब्रज भाषा कृष्णलीला विषयसित यति उत्कृष्टतापूर्वक र उत्कंठापूर्वक डुग्गरमा आयो कि यो जम्मू, कांगड़ा, बशोली, गुलेर, नूरपूर र छम्बमा मौलेर गयो। डोग्रा राजाहरू धेरै रानीहरू र सुसारेका निम्ति कृष्णको भूमिका निभाउनु, आमोदका साथमा ब्रज भाषाका मीठा गीतहरू सुन्नु रूचाउंथेअनि कृष्ण, राधा र गोपीनीहरूका देशको दुर्बल भाषामा कविताहरू रचेर र लेखेर राज-कविहरू, अनुग्रह र पुरस्कारहरू प्राप्त गर्थे। सत्रहौं र अठारहौं शताब्दीमा बशोलीका राजाहरू संग्राम पाल, कृपाल पाल र अमृत पाल, गुलेरका राजाहरू रूपचन्द, मान सिंह र गोवर्द्धनचन्द, जम्मुका राजाहरू रणजित देव र ब्रजराजदेव अनि कांगड़ाको राजा संसारचन्दले केवल सेनापतिहरू वैद्यहरू र ज्योतिषीहरू मात्र होइन तर चित्रकारहरूलाई र कविहरूलाई पनि संरक्षण प्रदान गरे। बशोलीमा कृपापालको शासनकालमा पह्लद श्रीकान्तले संस्कृतमा लेखेको 'सुश्रुत' र चरक-संहिता अनि राजा अमृतपालको शासनकालमा पण्डित श्रीकान्त ज्योतिषीले हिन्दीमा तयार पारेको एउटा पात्रो, जुन डुग्गरमा मात्र होइन तर पंजाबमा पनि खुबै लोकप्रिय भएको थियो, ती बाहेक तिनताकका साहित्यिक रचना विषयमा अधिक पत्ता पाइएको छैन। प्राय: त्यही समयतिर भद्दुमा, शुक्रलादेवीको मन्दिरमा रहने कविहरूले ब्रज भाषामा कविताहरू लेखे। प्रा० गौरी शंकरले आफ्ना पुस्तक 'कवि दत्त ग्रन्थावली' मा यिनीहरूका वर्णन गरेका छन्। त्यसमा वर्णित शिवनन्दन छम्बका राजा उमेद सिंहका समकालीन थिए, जसले तंत्र वैद्यका सहायताले राजालाई जाती पारे र आफ्ना हितैषीको अनुरोधमा राजाले शुक्रला भगवतीको मन्दिर बनाइदिए। जम्मुका माजा रणजीत देवको पालामा कवि दत्त थिए जसले संस्कृतमा तीनवटा र ब्रज भाषामा दशवटा पुस्तक लेखे भनिएको छ; कृष्णमहास्तोत्र, कृष्णसतक र सयमपञ्चत संस्कृतमा अनि ब्रज भाषामा वीर-विलास, ब्रजराजापञ्चशिका, वारामह, दत्तसंग्रह अमृतवियोग, रघुचन्द्रिका ज्योतिषप्रकाश, ऋतुवर्णन, गोपिवियोग र कमलनेत्र स्तोत्र। यीमध्ये, वीरविलास, ब्रजराजापञ्चशिका र वारामाह 'कवि दत्त ग्रन्थावलीमा प्रकाशित छन्।

दत्तुका भाइका पुत्र, शिवराम पनि ब्रज भाषाका कवि थिए। तिनका पुत्रहरू त्रिलोचन र रुद्रदत्त अनि दत्तका नाती, विद्यानिधि पनि जम्मुका महाराज रणवीर सिंहका शासन कालमा ब्रज भाषाका कविहरू थिए। त्रिलोचनले 'नीति विनोद' शीर्षकमा महाभारतको 'शान्तिपर्व' अनुवाद गरे। जम्मुमा महाराजा रणबीर सिंह

र महाराजा प्रतापसिंहको शासनकालमा कैयौं पुस्तकहरू संस्कृतमा लेखिएका छन्। महाराजा रणबीर सिंहको दरबारमा गोपालराम, चन्दीदास, दिना नाथ, विश्वरूप, निधिपति, नीलकण्ठ, गणेश दैवज्ञ, महेश विश्वेश्वर, सर्वेश्वर, काशीनाथ शास्त्री, गोकूलचन्द्र, गंगाधर र गोविन्दाचार्य जस्ता दर्जनौं संस्कृत विद्वानहरू थिए। जम्मुको रघुनाथ पाठशालामा प्राय: ४,५०० संस्कृतका पाण्डुलिपिहरू छन्। आजसम्म पनि शुकदेव, पण्डित रामकिशन, केदारनाथ शास्त्री र काकाराम शास्त्री जस्ता संस्कृतका विद्वानहरूले त्यो परम्परालाई अघि बढ़ाइरहेका छन्। व्रज भाषामा साहित्यिक रचना गर्ने परम्परा जुन पछिबाट हिन्दी वा खड़ी बोलीमा परिवर्तन भयो, अझ पनि चलिरहेको छ र धेरै डोग्राहरूले हिन्दीमा लेख्दै छन्। डोग्रीका कैयौं लेखकहरूका नशामा आज पनि त्यो परम्परा विद्यमान छ।

अठारहौं र उन्नाइसौं शताब्दीमा मोगल साम्राज्य छिन्न-भिन्न बन्यो, शिखहरू शक्तिशाली बने, पंजाबको समतल भागतिर पंजाबीहरू प्रमुख बने। जम्मुका राजा रणजित देवको शासनकालमा पंजाबबाट धरै हिन्दू र मुसलमान परिवारहरू आएर जम्मु, बशोली, जसरोता र अखनूरमा आएर बसोबासो गर्न थाले। कांगड़ामा राजा संसारचन्दको शासनकालमा, पंजाबी परिवारहरू आएर कांगड़ामा पनि बसोबासो गरे। उनाइसौं शताब्दीको आरम्भमा महाराजा रणजित सिंहले जम्मु र कांगड़ामाथि आफ्ना प्रभूत्व जमाए अनि लाहोर सरकारको धेरै पंजाबी अधिकारीहरू र प्रतिनिधिहरू डोगरा-देशमा आए। धेरै डोग्राहरू रणजित सिंहका सैन्य र दरबारमा भर्ना भए। पछिल्ला प्रमुख-व्यक्तिहरूमध्ये जम्मुका तीन डोग्रा दाज्यू-भाइहरू, गुलाब सिंह, ध्यान सिंह र सुचेत सिंह थिए। जसले रणजित सिंहको लाहोर दरबारमा उच्च पद प्राप्त गरेका थिए। तिनीहरूले पंजाबी बोल्न सिके अनि जब गुलाब सिंह जम्मुका राजा जम्मु आसकां फर्कंदा उनले आफ्ना साथमा धेरै अधिकारीहरू लगेर उच्च पदमा नियुक्ति, दिए। यीमध्ये प्रधान मंत्री देवान ज्वाला सहाइ र अन्य मंत्रीहरू देवान हरिचंद, देवान निहाल सिंह, गोविन्द सहाइ र देवान किरपाराम थिए। जम्मुका राजा रणवीर सिंहको शासनकालमा राज्यका विभिन्न सरकारी विभाग र स्कूलहरूमा पंजाबीहरू धेरै संख्यामा आए। पंजाबी अधिकारी, पंजाबी शिक्षक, पंजाबी किरानी, पंजाबी पटवारी र पंजाबी पुलिस अधिकारी नभएको कुनै जिल्ला थिएन। तिनीहरूसितै हिर रांझा, रूप बसन्त, पूर्णभक्त र सस्सी पुन्नूका जस्ता लोक-कथाहरू पनि आए। पंजाबीमा केही साहित्यिक गतिविधिहरू चलनमा आए र जम्मुमा कसै-कसैले पंजाबीमा कविताहरू लेखे। मीरपूरका मोहम्मद बख्शले पद्यमा 'किस्सा साइफूलमलुक बदियुल जमाल परि' रचे। तैपनि जम्मु दरबारको सरकारी भाषा डोग्री नै रह्यो र महाराजा रणबीर सिंहले यसको टकारी लिपिमा केही प्रगति गराए।

जम्मु र काश्मिर राज्यको (ख्रीं १८९०) सिंहासनमा महाराजा प्रताप सिंह आरूढ़ भएपछि सरकारी भाषा डोग्रीको सट्टा उर्दू बनाइयो अनि उर्दू स्कूलमा शिक्षाको र सरकारी लेखापढ़ीको पनि माध्यम बन्यो। डोग्री पतनको शिकार बन्यो र केही पुस्तासम्ममा यसलाई प्रायः नै भूलिन लागेको थियो। अर्कोतिर पंजाबी र पंजाबीमा लेखन बढ़ी लोकप्रिय बन्यो। महाराजा प्रताप सिंहको शासनकालमा अखनूरको रामधन र जम्मु शहरको दासमल पंजाबीका खुबै लोकप्रिय कविहरू थिए। दासमलले पंजाबीमा धेरै लेखे अनि तिनका पद्य रचनाहरू 'रूप वसन्त', 'नरसी भक्त', 'धन्ना जत्त', 'पेन्दू जत्ती', 'शाहुकर', 'कृष्ण जन्म', र 'सीता बनवास' लोकप्रिय भए। धेरै युवाहरूले तिनलाई गुरु माने र तिनीबाट कविता रच्न सिके। यिनीहरूमध्ये सरदार ज्ञान सिंह, भोला भक्त, पाप्पी, इसाइ, खामोश, मदहोश, गोपाल धवन, चमनलाल जोश, तीरथराम तारकश, मदन सरकाश, जशवन्तसिंह शमसीर, चुन्नीलाल कमला, जगन्नाथ भट्ट र काशीनाथ बख्शी थिए। त्यस समयका जम्मुका अर्का लोकप्रिय पंजाबी कवि गोसाइं ताराचन्द थिए जसका शिष्यहरू जम्मु र सियालकोटमा थिए। तिनले पंजाबी पद्यमा 'भागवद गीता' अनुवाद गरे अनि सैंकड़ों कविताहरू, दोहाहरू रकाफीहरू लेखे। १९४० सम्ममा फारसी लिपिमा लेखिएका पंजाबी कविताहरू जम्मुमा खुबै लोकप्रिय बने अनि त्यतिञ्जेलसम्म स्थानीय जन साधारणले टकारीलाई पूर्णरूपले बिर्सिसकेका थिए। प्रिन्स अफ वेल्स कालेजको पत्रिका 'तावि' मा १९४७ सम्म पंजाबी विभाग थियो, तर यसमा डोग्री विभाग थिएन। डुग्गरका अन्य भागहरूमा पनि शिक्षा र सरकारी कामकाजका माध्यम उर्दू भएकोले टकारीको ज्ञान घटेर गयो। छम्बमा भन केही धेरै समयसम्म टकारीको प्रयोग रहिरह्यो अनि छम्बका राजाले टकारी अक्षरहरूका टंकन बनाए, तर, त्यहां पनि यसको प्रयोग घटेर गयो, बरू उर्दूको प्रयोग वृद्धि भयो। यो शताब्दीको प्रथम ४० वर्षमा, लेखनको निम्ति प्रयुक्त भाषाहरू साधारणतः संस्कृत, हिन्दी, उर्दू, पंजाबी वा अंग्रेजी थिए। साहित्यिक दृश्यबाट टकारीमा डोग्री पूर्णरूपले लुप्त भयो अनि यसलाई डोग्रो समाजको ग्रामिण, अशिक्षित र पछौटे श्रेणीका भाषा को रूपमा मानिन थालियो।

३

१९४० को अघि १५० वर्षको अवधिमा डोग्रीमा कुनै साहित्यिक गतिविधि नहुनु र डोग्रीका भए जति पाण्डुलिपिहरू हराउनु डुग्गरका सम्पन्न र शिक्षित श्रेणीका आफ्ना मातृभाषा प्रतिको उदासीन भाव नै धरै हदसम्म जिम्मादार हो। तैपनि अठारहौं शताब्दीको उत्तरार्द्धका दत्तुका केही कृत्यहरू, प्राप्त छन्। भनिन्छ, तिनले संस्कृत र व्रज भाषामा मात्र होइन तर डोग्रीमा पनि लेखेका

छन् । तिनी भद्दुका कथावाचक ब्राह्मण कवि थिए जसले जम्मुका महाराजा रणजीत देव र व्रजराजदेव, भद्दुका राजा पृथ्वीपाल र वशोलीका राजा अमृतपाल द्वारा संरक्षणप्राप्त गरेका थिए । व्रज भाषामा तिनका रचनाहरूमा धेरै डोग्री शब्दहरू पाइन्छन्, उदाहरणार्थ पोरा, मखीर, भठोरा, जुन आदर्शरूपमा डोग्री हुन् । वीरविलासमा धेरै डोग्री शब्दहरू प्रयोग गरिएका छन् : खरोस, लांलागे सराता, नकारे, नेड़ाइ, मरुकरि, मशोस्ता, अने, संसा, झिगाड़े, छुरकइ, राखी, ताई, दहि, पलेसा, सुराता इत्यादि ।

'व्रजराज पञ्चशिका' व्रज भाषामा रचिएको छ, तर कपिले प्रत्येकमा आठ लहर भएका दुइ डोग्री कविताहरू कविताको बीचमा निगमन गरेका छन् । एउटा कतोच राजपुतहरूले र अर्को हरिपुरका नारीहरूले बोलेका हुन् । व्रज राजका सैन्यले रावी पार गरेर मछी भौना पुग्दा कांगड़ाका मानिसहरू यसो भन्छन् :

तद-धान्हि बझूरा आसन झेलम छम्ब्यावाला
खुस्साया पथ्यारा मत्तो कीतिजि ग्वालांदी
मद्दी भाउना अइ बाउन्धी फौजा जम्मुआलादि ।

छम्बले पथ्यार खोसेर लानु मूर्खता हो । जम्मुका सैन्य पहिले नै मछी भौना पुगिसकेका छन् ।

धावामा सफल बनेर व्रज राज फर्केपछि हरिपूरका नारीहरू त्यो धावामा जाने सेनाहरूलाई स्वागत गर्न तयार हुन्छन् । आफ्ना पतिहरूलाई भेट्न व्यग्र बनेका पत्नीहरूका चिन्ता यी आठ लहरहरूमा चित्रण गरिएका छन् :

ठांदे ठांदे पानी जिन्हें पीते वरफानी भलो,
ताउहिया दा पानी हुन चेतइ कुस आउँदा ।
मिट्ठे चूपे जिन्हे अम्ब छैला पंजालइदे
कुथे खरबुज हुन तिंदे मन भाउँदा ।
लिखी लिखी थक्के नैना पक्के राह दिखी दिखी
दत्त भने नाउँ-ए सैल छोड़ि, कुन आउँदा ।
पेइ वर्सान्त फिरी उँदे मन सन्त भलो
असें बखि कैस्कि तुसादा मन आउँदा ।
हिमाच्छादित खोलाका पानी पिउनेले
कसरी ताविको पानी रूचा उलान् ?
पंजालाका आँपहरू उपभोग गर्नेहरूले
अहिले कन्दीको तरबुजामा कस्तो स्वाद पाउलान् ?
थाकिसकेका छौं हामी पत्र लेख्दा-लेख्दा

दुखिसकेका छन् नयनहरू हाम्रा,
उनीहरू फर्कने बाटो कुर्दा-कुर्दा ।
फर्कलान् कसरी तिनीहरू, जो नव-सुख भोग गर्छन् ?
हृदयमा सम्झनाका ज्वाला दन्काउँदै
वर्षा शुरू भइसकेको छ,
तिमीहरूका हृदय भने किन हामीप्रति फर्कन्दैन ?

दत्तुका कविता "सिख देयां मिकि देवीदित्ता" डुग्गरमा सर्वलोक प्रिय हो । यसमा गंगाथमा ससुरालीमा आएकी दुलहीलाई तिनकी नन्दा, देवरहरूले गरेका टिप्पणी र आलोचनाहरू र तिनकी असहायपनको सूक्ष्मग्राही वर्णन छ । दत्तु वीर रस र भक्ति रसका कवि थिए अनि सम्भव छ तिनले डोग्रीमा अझ धेरैकविता रचेका होलान् । डोग्रीलाई देवनागरी लिपिमा लेख्ने तिनी प्रथम कविथिए ।

४

उनाइसौं शताब्दीमा दत्तुको परम्परामा समय समयमा डोग्रीमा पनि लेख्ने कम्तीमा पांच कविहरू थिए भनी थाहा लागेको छ । ती कविहरू थिए दत्तुको भाइ नन्दूको छोरो शिवराम, शिवरामका दुइ छोराहरू त्रिलोचन र रूद्र दत्त, दत्तुका नाती विद्यानिधि र गंगाराम । शिवराम भद्दुका शुक्रलादेवी मन्दिरका पुरोहित थिए । मिनको एउटा मात्र कविता हामीलाई प्राप्त छा । यो जम्मु र काश्मिर अकादमीले प्रकाशित गरेको कविता संकलन 'निहारिका' मा छापिएको छ । यो देवी शुक्रलाको स्तुति कविता हो जसमा कविले व्रज भाषाका शब्दहरू जस्तै दिनेश, सुरेश, राजेश र महेशमा 'श' लाई 'स' बनाए स्थानीयता प्रधान गर्दै निगमन गरेका छन् ।

दत्तले महाभारतको द्रोण पर्वको रूपान्तर 'वीर विलास' लेखेका छन् । तिनकों पथानुगामी बन्दै त्रिलोचनले महाभारतको 'शान्ति पर्व' को रूपान्तर 'नीति बोध' लेखे । त्यो पुस्तक महाराजा रणवीर सिंहको आग्र हमा तिनले लेखेका थिए । तिनको कुनै पनि डोग्री रचना आजसम्म प्रकाशित भएको छैन । तर महाराजा रणवीर सिंहको शासनकालमा व्यापारको समृद्धिको वर्णन गरिएको रूद्रदत्त को एउटा डोग्री कविताको चर्चा गरिएको छ । यो 'निहारिका' मा पनि छ । विद्यानिधिको साहित्यिक कृत्य विषयमा उति जनिएको छैन तर भनिन्छ गंगाराम संस्कृत र व्रज भाषाका विद्वान थिए जसको जम्मुको दखारमा मात्र होइन तर कांगड़ा र मण्डीको दखारमा पनि इज्जत थियो । तिनले १००० पृष्ठको 'रणवीर प्रायश्चित' लेखे । तिनको एउटा डोग्री कविता 'लाइफ इन द कण्डी' मा कण्डीको एउटी स्त्रीको दैनिक कार्यहरूका सरल र मर्मस्पर्शी लहरमा वर्णन गरिएको छ :

एक्काइ गल्ल सचाइदी, सइ लारिया गलाई दित्ती
सबनें थों कचा लोको, कण्डीया डा बस्सना।

कण्डीमा जीवन अत्यन्त कष्टप्रद छ भनी बुहारीले सत्य भनेकी छे। वाजराको हेरचाह गर्दै, गाई-वस्तु र भंगेराहरू धपाउंदै कसरी चर्खा चलाउन सकिन्छ ? पहाड्मन्तिर पानी लिएर आउंदा ढुंगाले खुट्टाहरूमा चोट पुरयाएको पीढ़ा कसलाई भन्ने ? दिनहूँ बाछाहरूलाई पानी पिउन दिनु पर्छ अनि जांतोमा अन्न पिस्न आधारातमा उठ्नु पर्छ।

यी पाँच कविहरूभन्दा भिन्न, साँची भूमिपुत्र, अशिक्षित, विद्वताहीन, पेशाले सिकर्मी लक्खू थिए। तिनी उनाइसौं शताब्दीको पूर्वार्द्धमा थिए अनि आफ्नी पत्नी-को आमोदको निम्ति डोग्री पद्य-पहेली लेख्न शुरू गरे। भनिन्छ, तिनी गाउँको एउटी ज्ञानी र सुन्दरी युवतीलाई प्रेम गर्थे। युवतीले पनि तिनलाई प्रेम गर्थी अनि तिनीहरू परस्परलाई विवाह गर्न चाहन्थे। तर, युवतीको पिताले विवाहको निम्ति एउटा शर्त राखे। तिनले भने यदि लक्खूले एक टुक्रा दाउराको एकै ठाउँमा सातपल्ट पञ्चरोले हिर्काउँन सक्यो भने तिनकी छोरीलाई विवाह गर्न सक्छ। हातमा बञ्चरो लिए र कसरी यो शर्त पूर्ण गर्न सकिन्छ भनी लक्खू मूढ़ाको छेउमा उभियो। युवतीको पिता हुक्का लिन घरभित्र गएको समयमा, युवतीले लक्खूलाई किंकर्त्तव्यमूढ़ देखी अनि कुवामा पानी लिन जाने निहूँमा उसको छेउबाट जाँदा निम्न श्लोक लक्खूलाई खुसुक्कै भनी :

सिख तरखां की बुद्धि
छे पुठ्ठियां ते एक सिद्धी।

सिकर्मीको चतुरता सिक—छपल्ट वञ्चरोको पासोले हिर्काऊ अनि त्यसपछि एक पल्ट धारपट्टिबाट हिर्काऊ।

लक्खूले आफ्नी प्रेमिका पाए, तर उसले युवतीलाई खुशी गराउनरोचकपहेली नरचेसम्म युवतीले खानेकुरो दिइन। यसरी, लक्खूले पहेली रच्न शुरू गरे। व्रज भाषामा नलेखिञ्जेलसम्म कवि कसैलाई भनिदैंन्थ्यो, त्यसर्थ लक्खूले व्रज भाषामा पनि पहेली लेख्ने चेष्टा गरे। स्व० चरणसिंहको जुन १९६६ को 'शिराजा' को अंकको रचनामा लक्खूको डोग्रीमा छवटा पहेली, व्रजभाषामा दुइवटा र दुइवटा कविताहरू प्रकाशित भएका छन्।

यो शताब्दीमा प्रकाशित ईसाई धर्म प्रचारकका साहित्य, डोग्री पत्रहरू, अनुबन्धहरू, सनदहरू, र घोषणाहरूका अघि नै वर्णन गरिसकिएको छ। जम्मुका महाराजा रणबीर सिंह र छम्बका राजाहरूले क्रमैसित जम्मु र छम्बमा प्रचलित टकारी लिपिमा केही सुधार ल्याए। लगभग यही समयतिर केही संस्कृत पुस्तकहरू डोग्रीमा अनुवाद गरिएका थिए। ग्रियर्सनले आफ्ना 'लिग्वीस्टिक सर्वे अफ

इण्डिया' मा लेखेका छन् कि संस्कृतमा पाण्डुलिपिका सूचीपत्र संकलक भूह्ल रले संस्कृत गणित ग्रन्थ 'लीलावती' को डोग्री अनुवाद छ भनेका छन्। महाराजा रणवीर सिंहको शासनकालमा महनपुर गाउंका चौधरी कन्हैयालालले भूमि व्यवस्था विषयमा डोग्रीमा एउटा पुस्तक लेखे। महाराजा रणवीर सिंहले 'व्यवहार गीता' र सैन्यको निम्ति कसरतको पुस्तक डोग्रीमा लेखाए।

१८६० मा, जम्मुबाट 'डोग्रा मित्तर' नामक एउटा डोग्री समाचार पत्र निस्क्यो। यो पं० दुर्गा प्रसाद मिश्रद्वारा सम्पादन गरिएको थियो। रूससित महाराजा प्रताप सिंहको आरोपित आचरणको विरुद्धको षड्यन्त्रमा श्री दुर्गा प्रसाद सम्बद्ध भएको हुनाले यो समाचार पत्रको प्रकाशन चाँडै बन्द भयो। यति समय पछि त्यो समाचार पत्रको विवरण र एउटै प्रति पनि आज प्राप्य छैन।

१६ सौं शताब्दीको डोग्री गद्यको नमूनाहरूले संस्कृत र हिन्दी शब्दहरूका प्रबलता र उर्दू र फारसी शब्दहरूका अनुपस्थिति दर्शाउंछ। तिनीहरूबाट यो पनि जानिन्छ कि गणित, कसरत, आचार संहिता सरकारी घोषणाहरू र आदेश-हरू, व्यापार, समाचारपत्रहरू, सरकारी र निजी लेखापढ़ीकां निम्ति डोग्री ले पर्याप्तरूपले सेवा पुक्याउन सक्छ। शैली सरल र कार्यात्मक छ।

५

यो शताब्दी को प्रारम्भमा, लाला रामधन, दासमल र हरदत्त शास्त्रीले डोग्रीमा कविताहरू लेखे। रामधन डोग्री बाहेक उर्दू, पंजाबी र फारसीमा कवि थिए अनि दासमलले पंजाबी र डोग्रीमा लेखे, डोग्रीभन्दा बढ़ो पंजाबीमा अनि हरदत्तले हिन्दी, पंजाबी र डोग्रीमा लेखे।

रामधनको प्रसिद्ध डोग्री कविता 'चन्ने दी चाननी चन्ने कने' हो, जुन डोग्री कविता संकलन 'निहारिका' मा प्रकाशित भएको छ। यो कवितामा चार पद छन्, प्रत्येक पद आफैमा पूर्ण छ तैपनि चारैवटामा सामान्य ध्रुपद 'चन्ने दी चाननी चन्ने कने', सामान्य छन्द र प्रणयको कुटिल प्रवाह र यसको यन्त्रणा र दशाका सामान्य विषय संयुक्त छन्। चारैवटा पदहरूमा, कहीं स्पष्ट रूपमा र कहीं अदृश्य रूपमा कविताको आत्मा जस्तै प्रणयकों प्रकरण अधि बढ़्छ। चन्द्रसित चाँदनी अक्षुण्ण रहे झैं आफ्ना प्रेमीसित प्रेमिका विछोड़िदैन :

दिखी लइ रामधना प्रीते दी रीतागी
लतकना कचिया तंदा कने
अउँ तेरी तूं मेरा होइ गया
सुखे दुःखे चंगे-मन्दे कने
दना भर कुसेगी मन्दानी बोलन
चन्ने दी चाननी चन्दे कने

रामधन ? हेर त प्रेमीहरूका जीवन !
यो झुण्डिरहेको कांचो धागोको त्यान्द्रो जस्तै हो,
म तिम्रो अनि तिमी मेरी भयौं
सुख र दुःखमा, उन्नति र विपत्तिमा
कुवचनले कसैको हृदयमा चोट पुरयाउनु हुंदैन
चन्द्र र चाँदनी अक्षुण्ण छन् ।

प्रेममा फँसेपछि उ अरूसित सम्बन्धित र अरूका अधीनस्थ बन्छे, अनि घरेलु कामहरू गर्न पर्छ उसले तर, उसलाई सहायता गर्न सकिन्दैन किनकि चन्द्रसित चाँदनी हुन्छ । चाँदनी तलाव र मरुभूमिहरूमा समानरूपले चम्कन्छ । सासूका पेचिला, व्यंग-टिप्पणी, निन्दा, प्रतिवादहरू पनि उसले सहन पर्छ । चन्द्रसित चांदनी हुन्छ त्यसर्थ केही गर्न सक्तिन । प्रेमले उसलाई विक्षिप्त बनाएको हुन्छ, अनि मानिसहरू तिनलाई भूतप्रेतले सताएको सम्झन्छन्, तर यथार्थ त्यो होइन । यो त तिनको, बंशी वादक कृष्ण, प्रेमी हो जसले उसलाई पागल बनाएको छ अनि जसले उसलाई लुटेर, नष्ट गरेर, निष्पृह बनाएर यो स्थितिमा छोड़ि दिएको छ, अनि तिनीबिना उसको जीवन असह्य छ, तब अरूलाई किन दोष दिने ? यो कथाको अंश हो, त्यसपछि चाँदनी चन्द्रसित जान्छे ।

भनिन्छ दासमलले डोग्रीमा केही गीतहरू रचेका छन्, तर तीमध्ये कुनै पनि हात लागेको छैन ।

हरदत्तका डोग्री कविताहरू डोग्री 'भजनमाला' को दुइ भागमा प्रकाशित छन् अनि केही चुनिएको कविताहरू 'निहारिका' मा पुनः प्रकाशित छन् । 'भगवत पदि' नामक पुस्तकमा बम्बईको भेनकटेश्वर प्रेसले हरदत्तका हिन्दी कविताहरू प्रकाशित गरेको छ । गायनका निम्ति लेखिएका डोग्री कविताहरू केही लोकप्रिय डोग्री र पंजाबी लोक गीतहरूमा ढालिएका छन् । यी कविताहरूमा तीन वा चार विषयहरू प्रमुख छन्—भारत र डुग्गरका बिग्रंदो अवस्था, डुग्गरको सामाजिक विकारहरू, परिवर्तनशील समयको अभिशाप र ईश्वरप्रतिको उपासना । कविताहरूका पृष्ठमा सुधारकको संवेदन र भावनाहरू, विद्रोह र उद्‌बोधनको सुप्त संकेत अनि व्यंगको रंग अर्थात् संवेदनाले उत्पन्न हास्य प्रयुक्त भाषा विषयहरूका निम्ति वाग्धार पूर्ण प्रभावशाली र उपयुक्त छ । केही कविताहरूमा, कविलाई बढ़ी रूढ़ीवादी र भूतद्रष्टा, अर्थात् पुराना पूजन परम्परा, पुराना धर्मपुस्तकका पठन-पाठन, धार्मिक अण्नुठान र उत्सवका विलुप्तिमा दुःखित देखिन्छ अनि नवीन फेशनका वेगमा क्षुब्ध छन् ।

'बेकारी' शीर्षक कवितामा कवि भारतीय उद्योग र व्यापारको बिग्रंदोस्थिति र त्यसबाट प्रतिफलित बेकारी अवस्थामा विलाप गरेका छन् :

कुनै समयमा सुन-खानी थियो यो देश,
असहाया छिन् आज।
आफ्नो निर्माण केही छैन हाम्रो,
सारा धन बाहिर जान्छ।

कवि आफ्नै समुदायको बिग्रंदो अवस्था देखेर दुःखित बन्छन् र प्रश्न गर्छन् कि जब अन्य समुदाय र राष्ट्रहरू विकास पथमा छन् भने डोग्राहरू चाहिं आफैमा संकुचित बनी निष्क्रिय रहे र कसरी बाँच्न सक्लान्।

अर्को कवितामा उनी अस्पृश्यताको विकारहरू औंल्याउँछन्:

उसकी वस्त्रले एउटा अस्पृश्यलाई स्पर्श गर्दा
उ वस्त्रसितै नुहाउंछिन्।

'डोग्रा देश' शीर्षक कवितामा उनी डुग्गरमा विद्यमान अन्धविश्वासहरू— भूतप्रेतमाथि विश्वास, आँखा लाग्नु र भूत भगाउने निष्ठूर प्रथाहरू औंल्याउंछन्। एउटा अर्को कविता 'खज्जल खोरियां' मा उनले जोड़ी-नसुहाउँदो विवाहहरूप्रति व्यंग हानेका छन्, जहां एउटा साठी बर्षीय वृद्ध, दन्तहीन मानिसले एउटी भरखर-की केटी विवाह गर्छ अनि एउटी डोग्रा आमाको मूर्ख इच्छा जसले आफ्ना छोराको शिक्षाको निम्ति होइम तर विवाहको निम्ति प्रार्थना गर्छ। आफ्ना कविता 'दालती दा धन्धा' मा मुद्दाका दुर्गुणहरूका पूर्ण विवरण गरेका छन्। घूसखोरी भ्रष्ट अधिकारीहरूका वर्णन तीव्र र कटु छ। मौरीको गोला जस्तै तिनीहरू दूरदर्शी मुद्दावालमाथि झुत्तिन्छन् र उसको सर्वनाश गरिदिन्छन्। 'कलयुगे दि मेहमा', 'फेशन', 'हुन नाम जमना आया' र 'खज्जल खोरियां' नामक कविताहरूमा सामाजिक व्यवहार, पोशाक, शृंगार, [रूप-सज्जा] का चलन र सामाजिक मान्यतामाथि तीहरूका प्रभाव आदि विषय छन्। कविको दृष्टिकोण पुरानै छ, तर तिनीहरूले, यो शताब्दीको प्रारम्भिक वर्षहरूमा डुग्गरका शहरहरूलाई स्वात्तै पारेको परिवर्त्तनको प्रवाहतिर पुरोहिताारूढ़ कट्टर समाजको प्रारम्भिक प्रतिक्रियालाई प्रतिनिधित्व गर्छन्। 'कृष्णजी गी धरति दा स्नेह' कवितामा कवि भगवान कृष्णलाई संसारका नराम्रा विषयका विरुद्धमा शिकायत गर्छन्। 'लंका तेरी नमनो बचनी' शीर्षक कवितामा पतन नदेख्ने राजाहरूलाई शक्तिको अस्थायीत्व बुझाउन रामायणको एउटा घटना लिएका छन्।

यो शताब्दीको प्रारम्भमा डुग्गरका विभिन्न भाषाहरूमा बोलिने डोग्री गद्यका नमूनाहरू ग्रियर्सनका 'लिंग्विस्टीक सर्वे अफ इन्डिया' र रेम० टि० ग्राहम बेइलिका रचनाहरूमा पाइन्छन् जो सम्बन्धित राज्यका गजेटमा दिइएका छन्। ग्रियर्सनका सर्वेक्षणमा अन्य उदाहरणबाहेक 'उड़ाउ पुत्र' कथाको डोग्रीमा अनुदित अवतरणहरू र डुग्गरमा बोलिने विभिन्न बोलीहरू छन्। ती सबै टकारीमा छन्।

अक्टोबर १९३४ मा प्रकाशित 'श्रीमद्भगवत् गीता' को डोग्री अनुवाद भने देवनागरी लिपिमा छ। डोग्री भाषा र डोग्री साहित्य दुवैको विकासको इतिहास-मा यो पुस्तकको प्रकाशन महत्वपूर्ण छ; देवनागरी लिपिमा डोग्री गद्य लेख्ने यो प्रथम नियमित प्रचेष्टा थियो अनि तत्कालीन पंजाब विश्वविद्यालयका उप-कूल-पति डा० ए० सी० उल्नरले त्यो पुस्तकको आफ्ना भूमिकामा बताए अनुसार यसले डोग्रीको साहित्यिक सम्भावनाहरूलाई इंगित गरेको छ। डा० उल्नरले यस अघि डोग्रीमा कुनै साहित्यिक कृति देखेका थिएनन् अनि उनले प्रथम चोटि यो पुस्तकमा साहित्यिक उद्देश्यले भाषा (डोग्री) को प्रयोग देखे। यदि यो पुस्तकमा भएको 'गीता' को डोग्री अनुवादलाई 'नया नियम' को डोग्री अनुवादसित तुलना गरियो भने रोचक तथ्यहरू थाहा लाग्नेछ। यी दुइका प्रकाशनमा ११६ वर्षको अन्तर छ। अघिको पुस्तक धर्मप्रचारकहरूद्वारा अनुदित टकारी लिपिमा प्रकाशित ख्रीष्ट धर्मको पुस्तक थियो, जब कि पछिल्लो प्रकाशन संस्कृत विद्वानद्वारा अनु-दित देवनागरी लिपिमा छापिएको हिन्दु धर्मको पुस्तक थियो।

प्रा० गौरी शंकरको 'डोग्री गीता' २०४ पृष्टको सानो वगली पुस्तिका हो जसको शिरमा सस्कृतका मौलिक श्लोकहरू ठूला ठूला अक्षरमा छन् अनि ती मनि स-साना अक्षरमा डोग्री गद्य अनुवाद दिइएका छन्। कतै प्रत्येक श्लोक पृथकरूपमा अनुदित छ भने कतै दुइ वा तीन श्लोकहरूलाई एसै साथमा अनुवाद गरिएका छन्। अनुवादमा धेरै संस्कृत शब्दहरू छन्, कोही शुद्ध संस्कृत रूपमा र कोही स्थानीय अपभ्रंश रूपमा छन्। यस्ता अनुवादमा यो स्वाभाविक नै हो। संस्कृत शब्दहरूलाई डोग्री शब्दहरूसित यस प्रकार संयोजन गरिएका छन् कि ती डोग्री वाग्धाराहरू जस्तै देखिन्छन्। गीताको आठौं सर्गको आठौं श्लोक पढ्दा यो स्पष्ट हुन्छ। हिन्दु धर्म र शास्त्रोक्त परम्परा, संस्कृत र व्रज भाषा डोग्रा जीवन-सित यति नजीक छन् कि डोग्री संदर्भमा संस्कृत शब्दहरू बिरानो जस्तो लाग्दैनन्। संस्कृत शब्दहरू लिएर डोग्री भाषा धनी बनिन सक्छ भनी यो अनुवादले दर्शाउँछ।

तैपनि, यो अनुवादमा निम्न न्यूनता छन् :

(१) अनुवादमा प्रयोग गरिएका केही संस्कृत र हिन्दी शब्दहरूका सट्टामा शुद्ध डोग्री शब्दहरू प्रयोग गरिन सकिन्थ्यो। लेखकले यस सम्बन्धमा उति ध्यान नदिएको देखिन्छ। डोग्रीको आफ्नै एउटा विचित्रको वाग्धारा छ अनि अनुवादक ती स्वाभाविक वाग्धारा आफ्ना अनुवादमा प्रयोग गर्न असमर्थ रहेको देखिन्छ।

(२) एउटै शब्द एकभन्दा बढ़ी रूपमा प्रयोग गरिएको छ। शब्द प्रयोगमा एकरूपता ल्याउन लेखकले अलि चेष्टा गर्नु पर्थ्यो। उदाहरणको निम्ति, हुन्डी र होन्डी, युक्त र जुक्त, प्राप्त र प्रापत, राधन र आराधना।

(३) कतै पंजाबी प्रभाव उच्चरित छ। यसको कारण शैक्षिक संस्थानतिर पंजाबीसित घनिष्टता रहेका शिक्षित डोग्राहरूले केही शब्दहरूका उच्चारणको बीचमा स्पष्टता ल्याउन अपभ्रंश गरेकोले हो, उदाहरणको निम्ति, विच र विनाको निम्ति मिच र भिना अनि फिरी वा भिरीको निम्ति फरे।

४. केही संस्कृत शब्दका अनुवाद अस्पष्ट र यथाभावी छ।

यी न्यूनता हुंदा हुंदै पनि, यो पुस्तकको प्रकाशन लेखकको आफ्ना मातृभाषा-प्रतिको विश्वास र प्रेम को प्रमाण हो। डा० बुल्नरले को भनाइ अनुसार तिनताक डोग्रीको निम्ति साहित्यगत भविष्य उति आशाजनक थिएन।

चौथो अध्याय

# १९४० तिरका डोग्री लेखन : निषेवणका वर्षहरू

भारतको अन्य भागतिर पुनर्जागरणको प्रवाहले आञ्चलिक भाषाहरू र साहित्यहरूका वृद्धि र विकासलाई अनुप्रेरित गरेको समयमा यो प्रवाह १९४० को प्राथमिक कालमा जम्मु शहरमा पुग्यो अनि डोग्री लेखनका विद्यमान सूत्रहरू र तिनका घड़ेरीमाथि डोग्री साहित्यको भवन निर्माणलाई समन्वय गराउने कार्यको आन्दोलनलाई जागृत गरायो।

अठारहौं शताब्दीमा महाराजा रणजीत देवको शासनकाल र उनाइसौं शताब्दीमा महाराजा रणबीर सिंहको शासनकालमा, डुग्गरमा, जम्मु शहरले महत्वपूर्ण स्थान प्राप्त गरेको थियो, भारतीय र डोग्रा संस्कृति र साहित्यले जम्मुको दरबारमा संरक्षण प्राप्त गरेको थिया त्यहाँ विद्वान, कवि, चित्रकार, कलाकार, सैनिक र अन्य पेशादार योग्य व्यक्तिहरूले मान्यता र आकांक्षा राख्थे। १९४० मा जम्मु शैक्षिक र वैचारिक केन्द्र थियो। प्रिन्स अफ वेल्स कालेजका शिक्षक, छात्रहरू र स्थानीय विद्यालयका शिक्षकहरूले कविता र कथा लेखन, सेमिनार र वक्तृताहरूका आयोजना, अनि कवि गोष्ठी र साहित्यिक सभाहरूका व्यवस्था गर्न रुचि लिए। तर, यी सबै विवेचना र आयोजनहरू अंग्रेजी, हिन्दी वा उर्दूमा गरिन्थ्यो। शहरमा दुइ वा तीनवटा समाचारपत्रहरू उर्दूमा प्रकाशित हुन्थे। केही सामयिकीहरू पनि उर्दू वा हिन्दीमा थिए। प्रिन्स अफ वेल्स कालेजले पनि सामयिक 'तावी' र साप्ताहिक पत्रिकाहरू अंग्रेजी, हिन्दी र उर्दूमा प्रकाशित गरयो जसमा शिक्षक र छात्रहरूका रचना हुन्थे। कालेजमा हिन्दी परिषद, उर्दू बज्म र अंग्रेजी पाठक फोरम जस्ता अन्य संगठनहरू पनि थिए जहाँ साहित्यिक निबन्धहरू रचनाहरू पठन गरिन्थे। शहरमा एउटा हिन्दी परिषद थियो, त्यसका सदस्यहरूमध्ये स्थानीय कालेज र विद्यालयका शिक्षकवर्ग र छात्रवर्ग पनि थिए अनि 'प्रिन्स अफ वेल्स कालेज सिटि क्लब' नामक एउटा क्लब थियो जसले रणबीर उच्च विद्यालय भवनमा साहित्यिक र अन्य विषयमा स्थानीय र बाहिरका विद्वान वक्ताहरूका वक्तृताहरू आयोजना गर्थ्यो। यो क्लबमा, जम्मु र

काश्मिर राज्यका तत्कालिन शिक्षा निर्देशक श्री के० जी० सैच्चीदयनले डा० इकबालको शैक्षिक दर्शनमाथि वक्तृता दिएका थिए। डा० सिद्धेश्वर वर्माले हिमालयमा डोग्री पहाड़ी बोलीको आफ्नो खोजीमाथि एउटा वार्ता दिए, प्रो० जयलाल कौलले काश्मिरको प्रेम—गीतिमाथि एउटा वार्ता दिए, अलिगढ़का एक प्रसिद्ध इतिहासका प्राध्यापकले ऐतिहासिक विषयमाथि एउटा वक्तृक्ता दिए, एक हिन्दी लेखक शान्तिप्रिय द्विवेदीले हिन्दी साहित्यमाथि एउटा वार्ता दिए अनि एक उच्च सरकारी अधिकारीले एक पल्ट शेक्सपियरको नाटकहरूका दर्शनमाथि एउटा वार्ता दिए। पंजाबी कविहरूका जमघट घट्दै गयो तर हिन्दी, उर्दू र पंजाबीमा धेरैले कविता रचे। यस्तो स्थितिमा प्रो० पी० एन० पुष्प र प्रोफेसर रामनाथ शास्त्री प्रिन्स अफ वेल्स कालेजमा हिन्दी र संस्कृतका शिक्षकका रूपमा भर्ना भए। दुवै जना साहित्यमा रुचि राखने अव्यवसायिक लेखकहरू थिए अनि पहिलोले हिन्दीमा कविता औ, पछिल्लोले हिन्दीमा कथाहरू लेखे। तिनीहरू कालेजको साहित्यिक गतिविधिमा र हिन्दी साहित्य परिषदमा रुचि राख्थे।

बुद्धिजीवी उफान र साहित्यिक गतिविधिको पृष्ठभूमिको विरुद्धमा, प्रा० रामनाथ शास्त्री, दीनू भाइ पन्त, धरमचन्द्र प्रशान्त र भगवत प्रसाद साठे र अन्य केही व्यक्तिहरूका एउटा साहित्यिक गुठी गठन गरियो, जुन दिवान ज्वाला सहायको मन्दिरको वृत्ताकार वरण्डामा सप्ताहमा एक वा दुइ पल्ट भेला हुन्थ्यो र आफ्ना हिन्दी रचनाहरू परस्परमा पठन-पाठन गर्थे।

१९४३-४४ मा यी लेखकहरूले आफ्ना मातृभाषामा लेखन थाले। दीनू पन्तले डोग्रीमा एउटा कविता लेखेर आवृत्ति गरे अनि भगवत प्रसाद साठेले यो गुठीको एउटा बैठकमा एउटा लघु कथा लेखेर पढ़े अनि यसरी डोग्री संस्थाको जन्म भयो। दीनूका कविता 'ऊठ मेरेया देश, हुं लो होई गई' डोग्री संस्थाको सांकेतिक शब्द बन्यो जसले जन-साधारणमा आफ्ना गाउँका र भाषाका सुन्दरतालाई चिन्न र बुझ्न, समुदायको विशिष्ट सांस्कृतिक मान्यता सूत्रबद्ध गर्न, अनि डोग्रीमा साहित्यको संपत्ति निर्माण गर्न पुन: जागरणको उत्साह गतिशील बनाउले कार्यक्रम चलायो। १९४३-४४ मा यी संस्थाले निर्द्धारण गरेको आफ्ना उद्देश्यहरू १९४७ को प्रारम्भमा एउटा नीति पुस्तिकामा प्रकाशित गरयो। ती थिए :

१. डोग्री भाषाको विकास।

२. डोग्रा जीवनको सबै पक्ष लाई गुंथेर डोग्री साहित्यको निर्माण।

३. डोग्रा समाजको इतिहासको शोधकार्य र त्यसको प्रकाशन।

४. विभिन्न भौगोलिक विभागमा विभक्त डोग्रा समुदायको विभिन्न खण्डका माझमा सम्बन्ध स्थापित गर्नु अनि अन्य भारतीय समुदायका माझमा तिनीहरूलाई पनि सम्मान प्रदान गराउनु।

स्वतन्त्रताको पूर्व १९४६ मा र १९४७ पश्चात स्वतन्त्रता प्राप्ति संगै डोग्री

संस्थाका कार्य गतिशील बन्यो। १९४५ को अन्ततिर जम्मुमा एउटा प्रसारण केन्द्रको स्थापना संगै अनि आकाशवाणी दिल्लीबाट डोग्री समाचार प्रसारण शुरू भए पश्चात डोग्रीले पनि काश्मिरीसित एउटा उप-आञ्चलिक भाषाको रूपमा मान्यता प्राप्त गरयो। १९४६ र १९४९ को बीचमा डोग्री संस्थाले केही साहित्यिक बैठक र कवि गोष्ठीका आयोजना गरयो अनि यसले डोग्राहरू माझ डोग्री कविता प्रति रुचिको वृद्धिमा थप प्रोत्साहन प्रदान गरयो।

२

१९४४ र १९४९ को बीचमा एउटा डोग्री नाटक बाहेक धेरै डोग्री कविताहरू र कथाहरू लेखिए। तर, यीमध्ये खुबै थोरै मात्र प्रकाशित गर्न सकिए। यस दशकमा प्रकाशित कृतिहरूमा १९४५ र १९४७ को बीचमा देखिएका दीनू पन्तका तीन स-साना प्रकाशन र एउटा पुस्तिकामा संकलित दश कविताहरू, १९४६ मा देखाह परेका भगवत प्रसाद साठेका नौ कथाहरू, १९४९-५० मा प्रकाशित पद्य संग्रहमा संकलित १२ कविका ३७ वटा कविताहरू, र भद्रवाहीमा 'भगवत गीता' को पद्य अनुवाद छन्।

१९४८ को दशहरामा प्रकाशित दीनू पन्तका सात कविताका संकलन 'गुत्तलूं' यति लोकप्रिय बन्यो कि तीन-चार महीनाभित्रै शिवरात्रीको उपलक्षमा यसको अर्को संस्करण छाप्न परयो। प्रत्येक कवि गोष्ठीमा श्रोतावर्गले यसको प्रथम कविता 'शहर पेहलो प्हेल गे' को आवृत्तिको मांग गरे । जम्मुमा यो कविता घर-घरको विषय बन्यो। 'गुत्तलुं' ले डोग्रीको काव्य सम्भावनाप्रति संकेत गरयो, उर्दू, हिन्दी र पंजाबीमा कविता लेखिरहेका डोग्राहरूलाई आफ्नै मातृभाषामा लेख्ने प्रचेष्टा प्रति उत्साहित गरयो अनि यी लेखकहरूका सुप्त प्रतिभालाई जागृत गरायो। यसले आधुनिक वाग्धारामा एउटा कम्पित र रोचक साहित्यको सृजनाको मार्ग तयार गरयो। त्यस्तै प्रकारले लघु कथा संग्रह 'पेहला फूल' डोग्री लोक-कथाहरूका परम्पराबाट प्रेरणा लिंदै, साहित्यिक सृजनाको सम्भावना परिलक्षित गर्दै डोग्री लघु कथा लेखनको अग्रदूत बन्यो र यसले डोग्री गद्य लेखनको मार्ग खोलिदियो। अग्रदूतीय कार्यहरूले गर्दा यी दुइ स-साना पुस्तकहरूले डोग्री साहित्यको इतिहासमा महत्वपूर्ण स्थान ओगटेका छन्।

३

आधुनिक कहलाउन सकिने प्रथम डोग्री साहित्यिक कृति गुत्तलुं' हो। यसमा कविले आफ्ना समकालीन स्थिति जांचेका, बुझेका र अनुभव गरेका छन् अनि आफ्ना अनुभूतिलाई दैनिक बोलचालको वाग्धारामय भाषामा हास्य र चातुरीसाथ सशक्त र प्रभावशाली आधुनिक माध्यममा प्रस्तुत गरेका छन्। १९४० को

डुग्गरमा, डोग्राहरू बिस्तार बिस्तार, डोग्रा ग्रामवासीका निष्कपटता, असन्तुलित विवाहका दुष्परिणामहरू, दोस्रो विश्व युद्धमा डोग्राहरूका पराक्रम, नेताहरूका लापरवाहीले आफ्नो अस्तित्व नै अरूमाथि निर्भर भएको हुनाले आएको अधैर्यको भावना, र साम्राज्यवादी शासनको सांग्लोबाट मुक्तिको प्रबल इच्छा, मजदूर र कृषकहरूका जागरण, जन-समुदायको मूल तत्वका मान्यताको आवश्यकता र ग्रामिण प्राकृतिक सौन्दर्यप्रति सचेत बन्दै थिए। 'शहर प्हेलो प्हेल गे' कविताको प्रथम पदमा दैनिक जीवनको समस्याहरूका वर्णन; सोहोरिएको गाला र सिलाइ उध्रेको जस्तै चेहरा भएको कुप्रो वृद्ध दुनिचन्द जस्तै विशेष प्रकारको पात्रको चित्रण गर्दै दीनूले सरल भाषामा आफ्ना कवितामा यी सब प्रति आवाज उठाएका छन्; यस्ता प्रश्न गर्दै :

कीन्यां पे अज्ज ए खिरवो-मांगे रउले रप्पे ?
कुस कड्डी दस्सो ए मकी-छिकि म्हड़ी ठउड़ि ?
कसरी शुरू भए यी कष्टहरू ?
कसले सृष्टि गरे यी विभेदहरू ?

कतै सूत्रहरू छोड्दै :

मरने कोल बि मन्दा लोको !
जीना एस गुलामि दा
मृत्युभन्दा नीच दासत्वको जीवन हो !

कतै नारा-वादी बन्दै :

उठ मजुरा जाग किसाना
तेरा बेला आया ओ !
उठ हे श्रमिक, जाग हे किसान !
अब तिम्रो पालो आयो।

अनि अन्य कति ठाउँमा यी चरणहरूमा जस्तै व्यंगको छुरी प्रयोग गर्दै :

जिस ने कदे बुआला नेइन्हादा
धृग धृग उस जोआनी दा !
उमंगहीन युवा धिक्कार योग्य हुन्छ।

नेतृवृन्दप्रतिको उनको दोषारोपण तीव्र र निर्दयी थियो :

गप्पें दे पतार छड़े, लीडरी बनइ कीन्यां ?
साहूरे-थोआरे घरें बिच जग्णि-बट्टे मारि-मरि।
झूठो आतंक सृष्टि गरेर
मानिसहरूमा विभेद उत्साहित गरेर

झूठो प्रतिज्ञाहरू गरेर
नेतागिरी गर्छन् यसरी तिनीहरू

अरूहरूलाई हेर्न गरेका डोग्राहरूलाई उनले आफ्नै भूमिका सुन्दरता आफ्नै आँखाले हेर्न भने अनि उनलै उदांगो पर्वतहरू र हरिया जंगलहरू, उच्छाल जल-प्रपातहरू र खोला-नालाका लुकामारी अनि मीठो भाकामा छन्नाका गीतहरूका मुग्धकारी चित्रांकन गरे। देवीलाई आफ्ना भेट-अर्पण गर्न समुद्रबाट उठेका बादलले वहन गरेको स्नेहसिक्त आफ्ना मातृभूमिको रक्षक, देवी-वैष्णु प्रतिको तिनको प्रेम—

समुद्रको प्रेम-नैवेद्य लिएर बादल आएको छ। पहाड़का चुचुराहरूमा पवित्र आरतीको रूपमा विजली लिएर तिनीहरू फैलिएका छन्। तिनका पाउमा परेर प्रार्थनाका निम्ति तिनीहरू झुक्छन्।

कविताहरूका यो संकलनमा, 'महाराजा बहादुर' शीर्षक कविता प्रेरणा र शिल्प दुवैमा खुबै कमजोर छ। आफ्ना विषयमा कविको दक्षता नभएको र त्योसित भावात्मक गुम्फन नभएको प्रतीत हुन्छ। महाराजको र युरोपमा डोग्रा फौजको शोषणको वर्णनमा विषय नियन्त्रण गुमाएकाले कवि लड़खड़ाएका देखिन्छन्। अन्य कविताहरूमा भाषा वाग्धारामय, अलंकार र प्रवाहमय छ, प्रतिमूर्तिहरू टड़कारा र आकर्षक छन्, शब्दहरू र अभिव्यञ्जनाहरू उपयुक्त छन् अनि अभिव्यञ्जना मितव्ययि छ।

दीनूको 'मंगूदी छबिल' १९४६ मा दीवालीको उपलक्षमा प्रकाशित भएको थियो। यो समकालिन डोग्रा समाजको स्थितिबाट टिपिएको हुने खाने र सर्वहारा धूर्त र सोझाका बीचको संघर्षको सूक्ष्म विवरणको एउटा लामो वर्णनात्मक ३२ पृष्ठको कविता हो। नथुले गाउँको एक जना साहु, सोहनु शाहबाट एक सय रूपिया ऋण लियो। ऋणको ब्याज तिर्नमा नै उसले आफ्नो जीवन बितायो। नथुको छोरो, सोहनुको छोरो शंकर शाहको शोषणदेखि वाक्क भयो, अनि उसले एक दिन शंकर शाहलाई हिर्कायो फलस्वरूप उसले आफ्नो घर र जमीन बेच्न परयो, जेल जान परयो अनि आफ्ना छोरा मंगुलाई कलिलै उमेरमा शंकर शाहको नोकर बनाउनु परयो। शंकर शाह मरेपछि उसको स्मृतिको उत्सव उद्घाटन गरिएको 'छबिल' मा मंगूले काम गर्नु परयो। उसले कठिनाइ र दरिद्रता सामना गर्न परयो अनि आफ्ना मालिकका गाली पनि सुन्नु परयो। जेलबाट आफ्ना पिता फर्केपछि, पितासितै कतै टाढ़ा गएर एउटा नयाँ घर बसाउने आशाले उसले यी सब सह्यो। तर, जब उसले आफ्ना पिता जेलमा मरेको समाचार सुन्यो, तब उ बदलाको भावनाले पागल बन्यो र शाहको घरमा गयो र घरमित्रका मानिसहरूसितै आगो लगाइदियो। विषय खुबै नाटकीय छ—श्रमिकवर्ग र तिनीहरूका मालिक-वर्गका बीचको, सामाजिक र नैतिक नियम पालकहरू र आफू खुशी जीवन भोग्नेका

बीचका, शोषित र शोषकका बीचको तनाव—विद्रोह परिपूर्ण स्थिति। विषय डुग्गरमा मात्र होइन तर सम्पूर्ण भारतको समकालिक छ। गाउँहरूमा पुस्ता-पुस्तादेखि शोषित बन्दै आएका कृषकहरूमाथि साहुहरूले आफ्ना जाल फैलाउँथे। विषयको प्रस्तुतिकरण रोचक र प्रभावशाली छ। हल्का व्यंग, स्थानीय वाग्धारा र ससाना घटना बुनाइले कवि वातावरण र प्रभाव सृष्टि गर्न समर्थ बनेका छन् तर कतै कतै आफ्नै विचार र उपदेश प्रयोग, धनको शक्ति र वैंशको आमोदका लामा-लामा वर्णनको समावेशले नाटकीय तत्व र कविताको गतिमा सिथिलता आएको छ।

प्राय: त्यही समयमा प्रकाशित दीनू पन्तका तेस्रो पुस्तक 'वीर गुलाब' थियो। ४४ पृष्टको यो पुस्तकले जम्मु शहरको 'गुमत गेट' मन्तिर भएको सीख र डोग्राहरू माझको युद्ध र १६ वर्षीय गुलाब सिंहको सैनिक प्रतिभा को वर्णन गरेको छ। प्रथम सर्गमा सीखहरूका आक्रमणको घोषणा र अन्धकार र आंधीयुक्त रातमा मियां मोटाको आदेशको वर्णन गरिएको छ। दोस्रो सर्गमा जम्मुको रक्षार्थ डोग्रा युवाहरूका जमघट र गुलाब सिंह घोड़ामा चढ़ेर गएको विषय छ। तेस्रो सर्गमा 'गुमत गेट' मन्तिर ताविको किनारमा विस्तृत जंगलमा सिखहरूका वर्णन छ। चौथो संर्गमा शीत ऋतुको एक रात मियां मोटाले आफ्ना जवानहरू-लाई पठाएको सन्देश, अनि जवानहरूले 'जय दुर्गे' सहित दिएको प्रत्युत्तर र गुलाब सिंहको दोस्रो उपस्थितिको वर्णन छ। गुलाबसिंहको दोस्रो उपस्थिति उनका पोशाक र महान वाहनको पूर्ण विवरणसहित वर्णन गरिएको छ। पांचौं सर्गमा अंधेरी रातमा डोग्राहरूद्वारा सीखहरूका घेरावको वर्णन छ, अनि छैटौंमा सीखहरूका पूर्ण पराजय, तिनीहरूका कमाण्डर हुकुम सिंहको आदेश, हत्याकाण्ड र युद्धको होहल्ला, गुलाबसिंहको दलद्वारा आक्रमण र मियां मोटाको नेतृत्वको वर्णन छ। सातौं सर्गमा गुलाब सिंहको चतुरताको मूल-प्रहारको फलस्वरूप सिख-हरू यत्र-तत्र भाग्न परेको वर्णन छ। तिनीहरू कसरी एकत्रित भएर लड्न थाले अनि गुलाब सिंहले कसरी डोग्रा फौजको अधिकार आफ्ना हातमा लिए तो सबका वर्णन पनि यसमा गरिएको छ। आठौं सर्गमा प्राय: २०० डोग्रा जवानहरूका मृत्यु र तिनीहरूका विसर्जन वर्णन गरिएको छ। नवम सर्गमा ताविको पानीलाई बाँध बाँधे र सिखहरूका बन्दुक प्रभावहीन बनाइएको, तिनीहरूले कसरी रणक्षेत्र त्याग्नु परेको थियो र तिनीहरूमध्ये कति मारिए र कति बन्दी बनाइए तो सबका वर्णन छ।

विषय-वस्तुलाई ससाना सर्गमा सर्गमा क्रमवद्ध राखिएको छ, वीर गुलाब-लाई नाटकीय ढंगमा प्रस्तुत गरिएको छ—प्रथम एक झांकीमा, त्यसपछि उनका जबर्जस्त व्यक्तित्व र चित्ताकर्षक पोशाकसित अनि अन्तमा रणक्षेत्रमा तिनको कार्यवाहीको वर्णनसित। प्रकृतिको वर्णन खूबै प्रभावशाली छ अनि दीनू पन्तको

शब्दमा आँधी, बादल र जाड़ाहरू पनि जीवन्त बन्छन् । पाठक वा श्रोताको आँखा अघि युद्धको वातावरण सजीव बन्छ अनि तावि नदीले देवी काली (जसलाई त्यहांकाहरू कालका भन्छन्) को स्वरूप लिन्छे अनि डोग्राहरूलाई सहायता गर्छे। शब्द चयनले विषय-वस्तुसित सामञ्जस्यता राख्छ । चरणहरू युद्ध सदृश्य गतिमा अघि बढ़्छ । आत्म-सम्मान र स्वतन्त्रताको निम्ति जीवन बलि दिने व्यक्तिहरूका उदाहरणले पूर्ण छ, डोग्राहरूका इतिहास । त्यसरी नै युद्ध-कलामा विशिष्टता प्राप्त गर्ने डोग्राहरूका उदाहरण छन् । यस्तो एउटा उदाहरणले दीनू पन्तको कविताको वर्णनात्मक रूप लिन्छ। निस्सन्देह कविता डोग्रा बारका प्राचीन परम्परानुरूप छ । तर, विषय नवीन-पद्धतिमा प्रस्तुत गरिएको छ ।

१९४८ मा, महात्मा गान्धीको हत्याको समयमा दीनू पन्तले 'साड़ा बापू' नामक कविता लेखे। यो कविता उनको अघिल्ला लेखन जति असल छैन अनि सस्तो भावुकतापूर्ण र साहित्यिक शिल्पमा शिथिल छ।

४

यो दशकको अन्ततिर डोग्री संस्था, जम्मुले 'जागो डुग्गर' नामक एउटा कविता संकलन प्रकाशित गरयो जसमा कवि गोष्ठीमा मान्यता प्राप्त १२ कविका चयन गरिएका कविताहरू छन् ।

यो संकलनमा पुराना डोग्री कवि हरदत्तका तीनवटा कविताहरू छन् । 'फुट्ट इस देसावाली', 'दालतीदा धन्धा' र 'ओ डोग्रेया देसा ।' प्रत्येक कविता भिन्ना-भिन्नै अनुप्रास योजनावद्ध छ। शीर्षकहरूबाट स्पष्ट भए झैं, विषयहरू परस्पर अविश्वास, मुद्दा र उदासीन र डोग्रा समुदायको स्व-सन्तोषका छन् । वर्णन हास्य, व्यंग र यथार्थपूर्ण छ, ध्वनि उत्साहवर्द्धक छ र शैली सशक्त छ। चालीस पूर्वका यिनै हरदत्त हुन्, जसमा सामाजिकताको सचेतता, आफ्ना हास्य र व्यंगमा अझ तीव्रता र पीर र कष्टको गम्भीर विवेक थियो।

'जागो डुग्गर' मा दीनू पन्तका पाँचवटा लघु गीतहरू समावेश छन्— एउटाले डुग्गरको दरिद्रता, सरलता र सौन्दर्यको वर्णन गर्छ, दोस्रोले जागिर-दारका शोषणको विरुद्धमा र जात-पात, वर्ग र धार्मिक वैभिन्यतामा आधारित डोग्रा समाजको जागिरदारी गठनको विरुद्धमा विद्रोह बोल्छ, तेस्रो कृषकहरू, र युवाहरूलाई जागेर पुराना सामाजिक शृंखलाको विरुद्धमा लड़्न र नाश गर्न आह्वान गरिएको एउटा गीत हो, चौथो बदलंदो युगलाई चिनेर समाजमा परिवर्त्तन ल्याउन कृषकहरूलाई जागृत गराउने सामुहिक गीत हो अनि पाँचौं दुइ दिदी-भाइमा भएको पद्य वार्ता हो जसमा दिदीले भाइलाई देश रक्षाको निम्ति सीमानामा गएर लड़्न कर लाउंछे। दीनूका यी गीतहरूमा दुइवटा भावनाहरू प्रमुख छन् : (१) देश प्रेम र (२) श्रमिक र कृषकवर्गलाई शोषण गर्ने सामाजिक शृंखलाको

विरुद्धमा विद्रोह्। दोस्रो भावनासित सम्बन्धित गीतहरू कविको अनुभवबाट अभिवाहित हुन्छन् अनि विद्रोही आग्रहसित संयुक्त तिनका अनुभवका गाम्भीर्यले ती गीतहरूलाई केही शक्ति र सुन्दरता प्रदान गर्छ जुन पहिलो भावना व्यक्त गरिएका गीतहरूमा देखिन्नँ।

यो संकलनमा समावेश गरिएका कृशन समेलपुरीका दुइ कविताहरूका विषय यस्तै भावनाले गठित छ—एक, डुग्गरको प्रशंसागीत जसलाई फूलको ढाकी भनी वर्णन गरिको छ [फूलें डा खारा], संसारमा एउटा विलक्षण राष्ट्र अनि कविको आंखाको तारा, देवता-देवीहरू, सेनानायक र नेताहरूका, अनि नदीहरू, पहाड़हरू र गीतहरूका देश, अनि दोस्रोले समाज परिवर्त्तन गर्ने संकल्प व्यक्त गर्छ—'आसें ए दिन पलटी सुट्टने न।' लोक शैलीमा प्रेम गीत लेखनमा कृशन समेलपुरीलाई केही सुविधा छ। 'मन तेरा' यस प्रकारको एउटा गीत हो। अंतर्भुक्त यहां उसको दोस्रो गीत पंजाबी रागमा आधारित एउटा राजनैतिक गीत हो।

तर, प्रणय-गीतका उत्तम गायकको रूपमा परमानन्द अलमस्त प्रख्यात भए। तिनले आफ्ना कविता र गीतहरू आफ्नै एउटा विचित्र ढंगमा सुमधुर आनन्दमय रागमा गाए अनि केही शब्दहरूमा जोड़् दिंदै केही वाक्यहरू दोह्रोर्याउंदै आफ्ना रचनाहरूलाई लोक आदर्शमा रचे। 'पाहाड़ें दा वस्सना' तिनको सर्वोत्कृष्ट कृतिको नमूना हो। 'पाहड़े दा बस्सना' ले झर्झर गर्ने छांगोहरूका [छर-छरांह्रे नाड़ु], चीसो समीर, शीतल छाया, फुल्दो चम्पा, बाँसुरी वादन र कानमा हात राखेर गाउंदा गोरीहरू हल्का झरीले भिजेका हरिया पहाड़हरू हृदय लुटने र विछोड़िए-का प्रेमीहरूका निम्ति व्याकूलताको आगो जलाउंदो चाँदनीका शब्द-चित्रहरू कोरेर पहाड़मा जीवनको सुन्दरताको वर्णन गर्छ। यस्तो लाग्छ पहाड़मा जीवनको सुन्दरता र आनन्द प्रेमको पानी अनि वियोगको मीठो वेदनामा चुर्लुम्म डुबेको हुन्छ। तिनका अन्य चार कविताहरू, 'जाग', 'पीर अपनी', 'देसा दे सपाई गी' र 'सर्गं नेईं जान हुँदा' मा नवीनता र आवेगमय आग्रह छैन। अन्तिम नामको कविता हामीलाई जीवनको यथार्थप्रति अन्धा बनाउने र अमानवीय बनाउने संगठित धर्ममाथि प्रबल आक्रमण हो।

मोएं मुल्लें पंढतें उस डंगर बनाये दे

कवि सम्मेलनको निम्ति लेखनलाई च्याउ झैं उम्रने दर्जनौं कविहरूमध्ये दोदाको लाला बर्कत राम, चुन्नि लाल कमला, दुर्गादास चमक, जगन्नाथ, कालरा र बालकृष्ण हुन् जसका कृतिहरू, 'जागो डुग्गर' मा समावेश छन्, तर तिनीहरूले डोग्री साहित्यिक क्षेत्रमा दीगो छाप पार्न सकेनन्। तिनीहरूले समकालीन रुचिका विषयहरूमाथि लेखे अनि 'उठो शेर जवानो' (सीमा पारीबाट पाकिस्तानले जम्मु र काश्मिरलाई आक्रमण गर्ने धम्की दिंदा देश रक्षार्थ डोग्रा जवानहरूलाई आह्वान गरिएको), 'देसा दे वैरी' (आंधीबी चको डुंगाको जस्तै देशको दुर्गतिमा विलाप

गर्ने), 'करसानें दी दुनिया' (कृषकहरूका दैनिक जीवन र समस्याहरूका वर्णन), 'गरीबें दि दयाली' (दीवाली पर्व मनाउन असमर्थ गरीबको निम्ति यन्त्रणा), 'पाहड़ी सुन्दरी'(पहाड़ी युवतीको सौन्दर्यको वर्णन), 'मोतिया'(डोग्रा नारीकाप्रिय सुगन्धित फूल), 'मनुक्खा ते पखरू' (बन्धित मानिसको जीवनसित एउटा स्वतंत्र पक्षीको जीवनको विरोधिता) जस्ता शीर्षक कविताहरूद्वारा दर्शाइए जस्तै केही सामाजिक सचेतता इंगित गरे। तर, सायद जगन्नाथ कालराका वाहेक जसले, हरदत्तको शैलीमा श्रोतावर्गलाई 'आऊं चंगा सा ग्रां'(गाउँमा मलाई राम्रो थियो) र 'थाईं' जस्ता सामाजिक व्यंगका कविताहरूले हसाउंथे, ती अन्य कविताहरूमा काव्यमय कल्पना र अभिव्यञ्जनाको वरदानको कमी थियो।

अर्कोतिर वेद पाल दीव र रामनाथ शास्त्रीले 'जागो डुग्गर' मा आफ्ना रचनाहरूमा ठूलो संकल्प र काव्यगत चैतन्य प्रदर्शन गरे।

वेद पाल दीव, जसले आफ्ना विद्यार्थी जीवनमा हिन्दीमा कविता रच्ने गर्थे, यो दशकमा डोग्रीमा लेखन शुरू गरे अनि प्राय: तीन वा चार वर्षमा तिनले प्राय: ५० वटा कविता र गीतहरू लेखे। यो संकलनमा एउटा गीत, एउटा डोग्रा प्रशंसा कविता, अनि क्रमैसित होली र नव-स्वतन्त्रमाथि दुइ स-साना कविताहरू छन्। अन्तका दुइ कविताहरूमा प्रगतिशील विचारहरू पाइन्छन् र कविको सृजनात्मक कल्पनाले तिनीहरूमा जीवन र आभा प्रदान गर्छ। सूर्य र सूर्य रश्मिले मानव स्वरूप लिएर होली खेल्छन्—सूर्यले किरण फेंकदै र सूर्य रश्मिले रंग छर्दै अनि कवि होलीलाई सबैको निम्ति उष्णता र हाँसो बोकी आउन चिप्तो घस्छन् :

> इंयां गइ लाली दी वरखा वरह :
>
> हास्से दी गुथली खोलियाइ आं !
> होलीए आ !

नव-स्वतंत्रताको कवितामा कवि स्वतंत्रतालाई महलहरू त्यागेर दिनयी कृषकहरूका खेतमा, भोकाएका श्रमिकका अँध्यारा गल्लीहरूमा र गरीबकाँ जाने आह्वान गर्छन् :

> तुं कचे कोठें च बल
> तिमीले गरींबहरूका झोपड़ीमा बत्ती जलाउन पर्छ।

वेद दीपका कविताहरू भावना, रागमय गति, उचित स्थानमा उपयुक्त शब्दहरू र चित्रणार्थ तिनीहरूका अर्थपूर्ण र प्रभावशाली प्रयोगले सम्पन्न छ।

रामनाथ शास्त्रीले डोग्रीमा कथा, गद्य कविता र एकांकी नाटकहरू लेखन-भन्दा अघि हिन्दीमा लघु कथाहरू र लघु कविताहरू, लेखने गर्थे। तिनका तीनवटा कविताहरू 'जागो डुग्गर' मा छन्। तीनैवटा कवितामा तीनवटा विषय सामान्य

छन्—डोग्राहरूका निम्ति चिन्ता, तिनीहरूका जीवनको मुख्य प्रतीकबाट कल्पना-चित्र अर्थात् युद्ध र श्रोतालाई सम्बोधन गर्ने स्थिति। प्रथम कविता 'ए बंजार बनियां किन्यां केसर कयारियां' ले डोग्राका विगतसित सम्बन्ध राख्छ जब डुग्गरका भूमि गेरुवा फूलहरूका मैदान थियो अनि यसको कला र वीरता, यसका लोक गीतहरू चारैतिर प्रसिद्ध थिए जुन अहिले यसका वासिन्दाका आलस्यपनले र तिनीहरूका विगत परम्पराको उपेक्षाले बांझो भएको छ अनि उनी तिनीहरूलाई जाग्ने आह्वान गर्छन् : 'उठो पब्बां मारी शेरो वीरें देयो वारसो' (सिंह गर्जनसित जाग, वीरका उत्तराधिकारी हरू)। दोस्रो कविता 'ए कुं आया !' ले समकालीन स्थितिसित सम्बन्ध राख्छ जब कि स्वतन्त्रताको आगमनसित समय परिवर्त्तन भएको छ, श्रमिक र कृषकहरू आशावादी छन् अनि यो आशा चारैतिर प्रकृतिमा प्रतिबिम्बित भएको छ अनि श्रमिक र कृषकहरूले शोषणको निर्माणलाई धराशायी बनाइदिएका छन्। तेस्रो कविता 'तुस चुप चाप' मा, कवि महात्मा गान्धीले प्रचार गरेका अहिंसाको सिद्धान्तमा सृजनात्मक शान्तिपूर्ण कार्यकलाप का मार्गको विषयमा बोल्छन्, तर कविताको निर्माणमा गुँथिएका प्रतिमूर्तिहरू हिंसात्मक छन्, उदाहरणार्थ, तरवारहरू, भाला र चुप्पीहरू, शत्रुहरूलाई खुट्टाले कुल्चंदो घोड़ाहरू, धैर्यसाथ मौका पर्खिरहेका र तिनीहरूका मलिन चेहरामा अग्नि झिल्का बोकेका जवानहरू। डोग्राहरूसित परिचित युद्धका प्रतिमूर्तिहरू चित्रित छन्। गद्य कवितामा सफल प्रचेष्टा हो यो कविता।

कवि गोष्ठीमा आफ्ना सुमधुर आवाज र गीतहरूका संवेदनशील गायनद्वारा लोकप्रियता प्राप्त गर्ने अर्का कवि यश शर्मा हुन् जसका चार कविताहरू यस संकलनमा समावेश छन्। यी कविताहरू शिल्पमा शिथिल छन् अनि यसमा अनुभवको यथार्थताको न्यूनता छ। प्रथम कविता 'डुग्गर देस बचाना जिन्दे' ताल र गतिको असल समन्वय हो अनि यसले श्रोतावर्गमा उत्साह सृजना गरेको छुनुपर्छ तर यो मन्द छ। 'कसौं' कविताका र अर्को कविता 'साड़े साउने गी शिड़कां ते चौक पेदे' मा कृषकले किन प्रशस्त खान पाउंदैन, जुलाहाले किन शरीर, ढाक्न, लुगा पाउंदैन भवन बनाउनेहरू किन भूंइमा सुत्नु पर्छ अनि कृषकहरू र श्रमिकहरू जसले धनी र राजकुमारहरूका निम्ति भरन-पोषण गर्छन् किन आफ्ना सहायता फिर्ता लिदैनन् भन्ने प्रश्नसहित नारावादको तत्व छ। 'सन्झा दे दिये' ले संवेदनशील चापमा निराशा दर्शाउँछ र लोकप्रिय हिन्दी कवि, एच० आर० बच्चनबाट अनुप्रेरित भएको देखिन्छ।

१९४० का १२ कविका कविताहरू कवि गोष्ठीको निम्ति लेखिएका छन् अनि त्यसर्थ तिनीहरूमा व्यक्तिगत अनुभव र शिल्पकारिताको श्रेष्ठ गुणको न्यूनता छ। विषयहरू पनि गरीबका दु:खहरू, डोग्रा देशको सौन्दर्य, डोग्राहरूका सरलता, वीरता, जढ़ता र अन्धविश्वासहरू, नव स्वाधीनता, पहाड़ी जीवन,

डोग्रा सैनिक र पहाड़ी युवतीहरू, नेताहरूले सृष्टि गऐका विश्रृंखलता र धर्मका अधिकर्ताहरूमा सीमित छन्। १९४० का यो कविता लोक कविताको परम्परा-बाट टाढ़ो छैन बरू यसले डोग्री लोकगीतको अभिव्यक्तिको स्पष्टता र स्वाभाविकतालाई त्यागेको छ अनिरूपको वा संवेगमय अनुभवको गाम्भीर्य अल्प मात्र प्राप्त गरेको छ।

५

यो दशकमा डोग्री गद्य खुबै कम लेखिए : केवल पं० गंगानाथको 'गुत्तलुं' को भूमिकाको एक पृष्ठ अनि भगवत प्रसाद सोठेको डोग्री कथाहरूका संकलन 'पहेला फुल' का ४० पृष्ठहरू मात्र। तैपनि यी पृष्ठहरूले डोग्री गद्यको अत्यधिक सम्भावनालाई इंगित गर्छन्।

पं० गंगानाथको असल साहित्यिक शैली छ, तर यो दुःखको कुरो हो कि तिनले धेरै लेखेनन्। मलाई लाग्छ, यो संक्षिप्त भूमिकांशमा प्रदर्शित तिनको विद्वता र बौद्धिक तीक्ष्णता, भाषामाथिको दखल, तिनको संक्षिप्त र मुग्धकारी वाग्धारामय शैलीले तिनले डोग्री गद्यमा महत्वपूर्ण योगदान प्रदान गर्न सक्थे।

रामनाथ शास्त्रीले 'वीर गुलाव' र 'जागो डुग्गर' का भूमिका हिन्दीमा लेखे। यतिसम्म कि १९४७ मा प्रकाशित डोग्री संस्थाको उद्देश्य र हेतुका पुस्तिका पनि हिन्दीमा थियो। उदेक लाग्छ यी सबै किन डोग्रीमा छापिएनन्। हरदत्तले 'पेहला फूल' को प्रस्तावना डोग्रीमा लेखे, तर तिनका शैलीमा पं० गंगानाथको डोग्री गद्यको नवीनता र स्वाभाविकता अनि वाग्धारामय आनन्द पाइन्दैन।

'पेहला फूल' मा नौवटा कथाहरू छन्, जुन डोग्रा ग्रामिण जीवनको उद्भृत रत्नको रूपमा रहेको छ। तीमध्ये कोही विशुद्ध लोक कथाका टुक्राहरू छन्, तर तिनीहरूमा कुनै नैतिकता वा कल्पनाको उड़ान छैन। प्रथम पाँच कथाहरू लघु र संक्षिप्त अभिव्यक्ति र कम लेखाइमा चित्रण गरिएका असल उदाहरण हुन्। यी कथाहरूमा कथानक सरल रेखा जस्ता छन्, पात्र-पात्राहरू सरल छन् र परिस्थिति दैनिक जीवनका छन्। लघुतम कथा 'ह्रीखी' एक पृष्ठको छ, सबैभन्दा लामो कथा 'सहारा' पाँच पृष्ठको छ र रहेका कथाहरू दुइदेखि चार पृष्ठ सम्मका छन्। तर पात्र-पात्राहरू सजीव छन्, कथानक गम्भीर छन् अनि स्थितिहरू हृदयग्राही र मर्मस्पर्शी छन्। 'कुड़मा दा लहामा' मा, आफ्ना परिवारका सम्मान बचाउन आफ्ना प्राण त्याग गर्न तत्पर मोहरू जोगी र केसर का चरित्रहरू, 'मंगता' मा, स्नेहको सट्टा आफ्ना कल मोहम्दूको नाममा लेखिदिने आटा कलका मालिक झीर मंगता चरित्रहरू; 'बुबां' मा, काश्मिरको कुण्डल [कानमा लाउने प्वाँखको आभूषण] मन पराउने बुंबा र पहलवान सिपाही; 'सहारा' मा, परम्परा र परिस्थितिको बीचमा पिसिएकी बालिका-विधवी पारो;

'हीखी' मा, आफ्ना छोरो डुबेको समाचार सुनेर मर्न लागेका नरातू र विचलित अमारू स्मृतिमा बांचिरहने पात्र-पात्राहरू हुन् । 'अम्मां', 'खड्-जन्तर' र 'पेहला फूल' क्रमैसित राजा सुचेत सिंह, राजा रणबीर सिंह र राजा भूदेवसित सम्बन्धित लोक उपाख्यानहरू हुन् । 'दोहरी' परस्पर सम्बन्धका विवाहको दुष्परिणामप्रति प्रकाश पार्ने उद्देश्यले लेखिएको छ तर उति सफल बन्न सकेको छैन ।

गद्य शैली लोक कथाको शैलीको ढाँचामा छ—वाग्धारा र लोकोक्ति, अर्थपूर्ण अभिव्यक्ति द्वारा चिन्हित । भाषा जम्मुमा रामनगरको बोल-चालको भाषा छ ।

६

यो दशकमा श्रीमद्भागवद् गीता को दोस्रो अनुवाद प्रकाशित भयो, अनि यो भद्रवाही पद्यमा थियो । अनुवादक कोही एक जना पण्डित गौरी शंकर भद्रवाही थिए । भद्रवाही बोलीमा लेखिएको यो प्रथम पुस्तक थियो अनि यो देवनागरी लिपिमा लिखित भद्रवाहीको असल नमूना हो । यसले प्रथम पल्ट कैयौं वैदिक कथनहरू र स्थानीय बोलीमा सुरक्षित वैयाकरणिक स्वरूप र डोग्रीका धेरै शब्दहरू र ध्वनिहरू, काश्मिरीका केही ध्वनिहरू र मिश्रित पंग्वालीको तत्वहरू प्रकाशित गरयो । यो पुस्तकमा, जम्मु र छम्बमा बोलिने डोग्रीमा पाइने मिल्दा-जुल्दा सैकड़ौं शब्दहरू र तिनीहरूका स्वरूपहरू, जस्ता तुं, आशा माह्नू, गल्लं, अउं । भद्रवाही डोग्रीमा, कुन कोन हुन्छ, कुथुआं कोथां, बन्छ, तुकी तुई बन्छ, मिंगि में बन्छ । 'स' ध्वनिहरू 'श' ध्वनि बन्छन्—सुना, सुक्का, जवा, क्रमैसित शुना, शुक्का, झना हुन्छन् । तैपनि भद्रावहीमा यस्ता धेरै शब्दहरू छन् जुन भद्रवाही नजान्ने डोग्राले बुझ्न सक्तैन । अनुवादबाट यो थाहा लाग्छ कि अनुवादकले यो पुस्तक लेख्ने प्रेरणा प्रा० गौरी शंकरको 'गीता' को डोग्री अनुवादबाट प्राप्त गरेका हुन् । पुस्तकमा संस्कृत श्लोकहरू, भद्रवाहीमा तिनीहरूका पद्य अनुवाद र हिन्दीमा तिनीहरूका गद्य अनुवाद छन् ।

पांचौं अध्याय

# १९५० तिरका डोग्री लेखन : एकीकरणका वर्षहरू

नव डोग्री लेखनको निम्ति यदि १९४० का वर्षहरू निषेवणको अवधि थियो भने १९५० का वर्षहरूलाई एकीकरण र विस्तारको दशक भन्न सकिन्छ। अघिल्लो दशकका छ स-साना पुस्तिकाहरूका तुलनामा यो दशकमा छत्तीसवटा डोग्री प्रकाशन देखिए। डोग्री लेखनको राशिमा यो वृद्धि निम्न मुख्य कारकहरूले हो :

(क) जम्मुको डोग्री संस्थाले प्रकाशन कार्यक्रम निर्धारित गरयो;

(ख) जम्मुको डोग्रा मण्डल, दिल्लीको डोग्रा मण्डल र दिल्लीको कांगड़ा युवक सभाले पनि डोग्री लेखनको प्रकाशनतर्फ ध्यान दिए;

(ग) डोग्री संस्थाका प्रकाशनहरूका सफलता देखेर केही उद्योगी व्यक्तिहरूले आफ्ना लेखनहरू आफैं प्रकाशित गर्ने कदमहरू उठाए;

(घ) केही उदीयमान र युवा लेखकहरू लेखन क्षेत्रमा उत्रिए; अनि

(ङ) द रिसर्च एण्ड पब्लीकेशन डिपार्टमेन्ट आफ द जम्मु एण्ड काश्मिर गवर्नमेन्ट र काश्मिर एकाडेमी अफ आर्ट, कल्चर एण्ड ल्यांग्वुएजेसले डोग्री कृतिका प्रकाशनलाई आफ्ना संरक्षण र सहयोग प्रदान गरे।

जम्मुको डोग्री संस्थाले १७ वटा प्रकाशन प्रकाशित गरयो—कविता संकलन पाँचवटा, लघु कथा संकलन चारवटा, नाटिकाहरू दुइवटा, वेदान्तका पुस्तकहरू चारवटा, एउटा पद्य अनुवाद र 'नमिचेतना' नामक डोग्रीमा एउटा पत्रिका। डोग्रा मण्डल जम्मुले दुइवटा अनुवादहरू प्रकाशित गरयो—एउटा 'गुलाबनामा' नामक इतिहास र अर्को 'सत्यनारायण व्रत कथा।' डोग्रा मण्डल, दिल्लीले 'नमिचेतना' का तीनवटा अंकहरू प्रकाशित गरयो। सर्वश्री कृपाराम शास्त्री, रघुनाथ सिंह सम्याल, वेद राही, धर्म चन्द प्रशान्त र वैद्य परशुराम नगरले आफ्ना कृतिहरू आफैले स्वतन्त्ररूपले प्रकाशित गराए। दशकको मध्यतिर, कांगड़ा युवक सभाले आफ्नो वार्षिक पत्रिकाहरूमा केही डोग्री सामग्रीहरू प्रकाशित गरयो जुन विशेषत: अंग्रेजी र हिन्दीमा थिए। यो दशकको अन्तिम वर्षतिर, रिसर्च एण्ड

पब्लिकेशनस् डिपार्टमेन्ट अफ जम्मु एण्ड काश्मिर गभर्मेन्टले 'ब्रह्मानन्द संकीर्तन' र जम्मु एण्ड काश्मिर एकाडेमी अफ आर्ट, कल्चर एण्ड ल्यांग्वुएजेसले डोग्री कविताका पाँचवटा संकलन प्रकाशित गर्‍यो। यो दशकको प्रारम्भमा, डोग्री लेखनको मोठ उपज बगलीमा बोक्न सकिन्थ्यो, तर यो दशकको अन्तसम्ममा डोग्री पुस्तकहरूलाई बोक्न कमसेकम एउटा थैलोसम्म चाहिने भयो। १९४० तिरका डोग्री लेखनमा केही कथायुक्त कविताहरूका प्रधानता थियो, तर १९५० तिरका डोग्री लेखनले केवल कविता र लघु कथाहरू मात्र होइन, तर नाटकहरू, कविता-हरू, गद्य अनुवाद र डोग्री पत्रिकाहरूलाई पनि अंगाल्यो।

२

यो दशकको काव्य-मञ्चमा बीस कविका कृतिहरू समावेश छन्। तीमध्ये छ जना अर्थात् दीनू पन्त, किशन समाइलपुरी, परमानन्द अलमस्त, रामनाथ शास्त्री, वेदपाल दीप र यश शर्मा 'जागो डुग्गर' मा पहिले नै चर्चा गरिसकिएको छ। डोग्री पद्य र कविताका क्षेत्रमा ब्रह्मानन्द, परशुराम नागर, केहरी सिंह मधुकर, शम्भुनाथ, तारा समाइलपुरी, रघुनाथ सिंह सम्याल, शुकदेव, पदमा, आवारा, दुर्गादत्त शास्त्री, ललित, मूलराज मेहता, रामकुमार अब्रोल र वेद राहीका नाम-हरू नया थिए। तिनीहरूका रचनाहरू आंशिक रूपमा स्वतन्त्र कृतिहरूमा अनि आंशिक रूपमा संकलन र चयनहरूमा प्रकाशित भए। जबकि १९४० तिरका छ कविहरूले आफ्ना संकल्प कायम गरे अनि आफ्ना कृतिका विषय र स्वरूप दुवैमा विकसित कृत्य दर्शाए भने नव-आगन्तुकका कृतिहरू मात्रा र गुण दुवैमा असमान थिए। तिनीहरूमध्ये पाँच प्रकाशनका मालिक ब्रह्मानन्द सबैभन्दा बढी फलप्रद थिए। मूलराज मेहता, रामकुमार अब्रोल, ललित, वेद राही र दुर्गादत्त शास्त्रीका केवल एकेक कविता वा एक वा दुइ गीत प्रकाशित भए। अन्य कति यस्ता पनि थिए जसले आफ्ना रचनाहरू कवि गोष्ठीहरू वा साहित्यिक संघमा प्रस्तुत गरे तर ती कहिल्यै छापिएनन्।

शुकदेव शास्त्री र परशुराम नाउरलाई उचित रूपमा पद्यकार भन्न सकिन्छ। दुवैले एकेक वटा पुस्तक थपे—अघिल्लोले 'स्वच्छन्द त्रिवाणी' र पछिल्लोले 'गीता' को पद्यानुवाद। 'त्रिवाणी' मा आठवटा रचनाहरू छन्, जसमध्ये पाँचवटा शिखरिणी, मन्दाक्रान्ता र भुजंगप्रयात जस्ता संस्कृत छन्दका अनुरूपमा राखिएका छन् अनि संस्कृत शब्दहरू निकै नै छन्। तिनीहरूले जीवनको पुराना कट्टर मान्य-ताहरू र दृष्टिकोणलाई प्रतिपादन गर्छन्—संसार भ्रम हो, यो संसार सागर तर्न भगवानको नाम जप्नु पर्छ, देवता-देवीका पूजा गर्नु पर्छ अनि प्रभेद व्यवस्था चलाइ राख्नुपर्छ। एउटा कविताले डोग्राहरूका पुराना प्रथाहरूका, तिनीहरूकाखाद्य-स्व-भाव, तीर्थ-स्थानहरू, तिनीहरूका स्वभाव इत्यादि का वर्णन गर्छ। अर्को कविताले

दरबारिया मिथ्याप्रशंसक प्रति व्यंग होनेको छ। नागरको 'डोग्री गीता' डोग्रीमा चौथो र पद्यमा तेस्रो प्रकाशनले प्रस्तुतिकरण र व्याख्यामा केही नवीनता प्रदान गर्दैन। तिनी मौलिकताको नजीक हुने चेष्टा गर्छन् तर मौलिकको आत्माप्रति न्याय प्रदान गर्न असफल बनेका छन् अनि तिनको पद्य गद्यको स्तरभन्दामाथि उठ्न सकेको छैन। त्यसपछि १८५७ विषयमाथिको शत वार्षिकी पुस्तक १९५७ मा प्रकाशित भयो जसमा धेरै जसो डोग्री कविहरूले लेखे तर थोरै मात्रले विषय-लाई रचनात्मक कल्पनासित सुल्झाउन सकेका छन्। यतिसम्म कि दीनू पन्त र रामनाथ पनि यस विषयमा असल कविता लेख्न असफल बनेका छन्।

३

यो दशकको डोग्री कवितामा दीनू पन्तका योगदान केवल १२ वटा कविता-हरू छन्, जसमध्ये नौवटा 'दादी ते मा' नामक उनका संकलनमा १९५६ मा छापिएका थिए। 'दादी ते मा' कविता हिन्दीलाई बज्यू र डोग्रीलाई आमाको रूपमा तुलना गर्दै यी दुइ भाषाका बीचको सम्बन्धको जटिल समस्याको एउटा सरल समाधान हो। 'गुजरी' बाहेक अन्य कविताहरू सामाजिक अन्याय, जमीन्दारी व्यवस्थाको अस्थिरता र सामाजिक परिवर्तनको आवश्यकताले कविको पूर्वा-ग्रहसित सम्बन्ध राख्तछन्। 'जान इधर हो जान उधर हो' मा, कवि डोग्रा मध्यम श्रेणी र गरीब समाजका नाड़ी छाम्न पुग्छन्—शिक्षित किरानीहरू, निम्न अधि-कारीहरू, व्यापारीहरू, लेखकहरू, श्रमिकहरू इत्यादिका मनमा कस्तो भावना हुन्छ अनि द्विविधा र निष्क्रियताको स्थितिलाई त्याग्न र रित्तो आशामा बाँच्न-भन्दा केही गर्न आह्वान गर्छन्। 'काम करा ते रुट्टी दे' मा, उनी स्वतन्त्रता पश्चात् ओह्रोदा ओगट्ने अधिकारीहरूलाई गरीबका निम्ति खाद्य, आश्रय र वस्त्रका बन्दोबस्त गरिदिन चुनौती दिन्छन्।

सम्यां करी दे बिन्द साड़ कुल्ली, जुल्ली ते चुल्ली द।

उनको निम्ति शक्ति, धन र विशेष अधिकारयुक्त व्यक्तिहरू पुष्ट सांढ़ जस्ता देखिछन्न् जसलाई श्रमिकवर्गका एकता र कठोर श्रमद्वारा मात्र नियन्त्रण गर्न सकिन्छ। पुरानो डुग्गर सड़िरहेको र पतनासन्न व्यस्था थियो जसमा साधरण जनता पूरा खान र पूरा लाउन पाउँदैनथे तर जागिरदार, साहू र राज-कीय वर्गसित चाहेका सबै थिए अनि अबको नयाँ डुग्गर साधरण जनताको डुग्गर हुनेछ भनी उनी आशा गर्छन्। 'कवी ते काम्मी' यो विधामा खुबै असल कविता हो जहां कवि ठूलो उत्कण्ठा र आवेगमय धारणासित बोल्छन् जुन सशक्त कल्पना-सित बहन्छ। कवि आफ्ना गीतसितै श्रमिकलाई अझ गहीरो खन्न र उनलाई नयाँ गीत गाउन प्रेरित गर्न, शीघ्रतर श्रम गरेर पसिनारूपी शुद्ध मोतीका माला गुँथ्न अनि साहसको शंख फुक्न आह्वान गर्छन् ताकि उनी प्रारब्धको गढ़ीलाई

तोड़ेर देशको भाग्य मुक्त गराउन विश्वासको प्रार्थना-दीप जलाउन सकून् ।

डक्की दियां बहारां लेयी आउचे
भागें दे किले तरोड़ीए ।

'गुजरी' कोमलतासित र काल्पनिक रूपमा कुंदिएको एउटी दूध वाल्नीको रेखा चित्र हो—इभकी पुत्री, उन्मुक्त र फूल जस्तै हांसो बोकेकी, गंगाको प्रथम लहर जस्तै पवित्र अनि ठूल्ठूला प्रतीक्ष चम्कीला नयन भएकी ।

किशन समाइल्पुरीले गीतहरू, गजलहरू, दोहाहरू, कवित्तहरू, कविताहरू र केही कुण्डली र सवैयाहरू लेखे । किशनका विशिष्ट गुण तिनका गीतहरूमा छ; तिनीहरूका विषय, तिनीहरूका शैली, तिनीहरूका आग्रह सबै वर्तमान लोकप्रिय लोकगीतहरूका ढांचामा ढालिएका छन् अनि सायद लोक परम्पराको नजीक हुनाले र माटोसित घनिष्ट हुनाले तिनीहरूमा आग्रह छ । कविले आफ्ना एक कवितामा लेखेका छन् :

गीतको निम्ति हो किशन समाइल्पुरी
आधारातसम्म जागो रहन्छ उ, अनि
लेखेर कागजका पन्नाहरू भर्छ ।

यस्तो लाग्छ तिनले लोक-गीतका आत्मालाई पचाएका छन् अनि त्यही पाचनबाट आफ्नै रचना रच्छन् । तिनी अपरिष्कृत हीरा लिन्छन् र त्यसलाई परिष्कार गरी फर्काए जस्तै काम गर्छन् । 'चम्बे दी लाड़ी', 'चम्बे दी मनकली', 'चैनचलो दे हास्से', 'पयोके दा बांका साउंकी जोगि', 'ढक्की चड़ाहदी सपोलुए दी चाल चलदी गोरी,' 'पानिए आवेंदि गोरी' र 'जम्मुए दी रात' तिनका सुमधुरतम गीतमध्ये हुन् जुन कोमल भावना र रंगीन अभिव्यक्तिपूर्ण छन् । गजलहरू, उति सन्तोषजनक नभए तापनि भावुक अनुभूति र हल्का हास्यले रंगिएका छन् । दोहाहरूमा काव्यत्मक चैतन्यले प्रवित विचारहरू छैनन् । कवित्तहरूमा कवि जम्मुको प्रशंसा गाउँछन्, जुन तिनको मतानुसार देवता-देवीहरूका, वीरहरू र साहसी सेनाहरूका भूमि हो, अनि तिनी जम्मुको उत्पत्तिको उपाख्यान वर्णन गर्छन् । कुण्डलीहरूमा पनि डोग्रा देशको वन-जंगल र पशु-पक्षीका प्रशंसा र वर्णन छ अनि अझसम्म डोग्रा ग्रामिण क्षेत्रहरूमा विद्यमान रहेको जोड़ी नमिल्दा विवाहरूका दुष्परिणाम का मर्मस्पर्शी संदर्भ छ । सवैयाहरू र 'डोग्रा पन्छी' कविताले पनि डोग्रा देशको प्रशंसासित सम्बन्ध राख्तछ । राम्रा र आफूले राम्ररी लेख्न सक्ने विषय मात्र लिएर अनि तीहरूलाई भावुकताले आरोपित गरेर उनी आफ्ना वर्णनमा पक्षपाती बनेका छन् । उनको वर्णन नै डोग्रा भूमिको यथार्थ चित्र होइन ।

अलमस्तले स्वच्छन्द प्रवाहमा लेखिरहे, तर उमेरको वृद्धिसितै तिनका कविता विचार र अनुभवको भारमा कल्पनाशक्तिको उड़ानको न्यूनताले ग्रसित देखिन्छ। यस दशकका तिनका सातवटामध्ये तीनवटा रचनाहरूमा मात्र १९४० तिरका तिनका कविताहरूका मिठास, संगीत र स्वच्छन्द भावुकताकवाद पाइन्छन्। 'कागद चित्तरि' र 'गोरी झुण्ड नेइं खोलइ' जस्ता कविताहरूमा तिनी आफ्ना भावभूमिमा छन्, जसले नारी स्वरूपको सौन्दर्य र विछोड़िएका प्रेमीहरूका प्रणय-वेदनाको वर्णन गर्छन्। यहाँ, कवि आफ्नी प्रियतमाको नयन सौन्दर्य, आकृति र आकारको पूर्ण प्रशंसामा मग्न छन् अनि यो सौन्दर्य वर्णन गर्दा तिनको हृदय भाँड़ाको पानी जस्तै तरंगित बन्छ। तिनका चकोर नयनहरूमा, प्रियतमाको चेहेरा पूर्णिमाको चन्द्रमा जस्तै अनि तिनकी गुलाबी अधरबाट प्रस्फुटित मधुर शब्दहरू र मोती झैं दन्त लहर चम्पाकाका कोपिला जस्ता देखिन्छन्। श्रावण महीनामा जब पूर्वीय हावा बहन्छ, बिजली चम्कन्छ, कुहिरो छरिन्छ, पहाड़ी पाखा हरियाली बन्छ; खोला-नालाहरू, छाँगो-छहराहरू, कुवाहरू र तलावहरू वृष्टिको पानीले भरिन्छन्; मयुरहरू नाच्न थाल्छन् अनि पक्षीहरू चौरतिरबाट चिर्बिर गर्न लाग्छन् अनि गोरी उदास बन्छे। कलम टिपेर उ आफ्ना प्रेमीलाई लेख्न शुरू गर्छे, कलम नभंचिञ्जेलराम्म उ यत्र-तत्रका कुराहरू लेखेर पन्नाहरू भर्छे, तर आफ्ना प्रेमी-बाट उ जवाप पाउंदिन र उ रुन्छे अनि समाचार पठाउन कागलाई बोलाउंछे, सुघालाई खुवाउंछे अनि तिनीहरूका कानमा आफ्ना समाचार खुसुक्कै भन्छे। अन्य विषयसित सम्बन्धित तिनका कवितारूहमा अनुभव र विचारका गहनताको कमी छ र ती केवल शब्दहरूका प्रबन्ध जस्ता मात्र देखिन्छन्।

यो दशकको डोग्री कवितामा रामनाथ शास्त्रीको योगदान नौवटा कविताहरू, दुइवटा गजलका केही दोहाहरू र भर्तृहरिको 'नीति शतक' को अनुवाद हो। सेवा-निवृत्त डोग्रा जवानमाथि लगाइएका वाध्यताहरू र अवरोधहरूका दुःख प्रकट गर्दै १८५७ को शतवार्षिकी स्मारिका र पूंछदेखि सिमलासम्मको विस्तृत डोग्रा देशको वर्णनयुक्त 'देश वन्दना' कविताहरू तिनका अन्य छ कविताका तुलनामा तुच्छ छन्। यी छमध्ये तीनवटाले डुग्गरले सामना गरिरहेको समस्याहरू र ती समस्याका परि-प्रेक्ष्यमा कविको दशासित सम्बन्ध राख्तछन्। जब कि तिनका कल्पना वैंशको मनोहारितामा लोभिन्छ, संगीतमय बघैंचामा प्रेमानुभूतिको निम्ति व्यग्र बन्छ भने आफ्ना देश-प्रेमले तिनलाई डोग्राका सांस्कृतिक रारम्परिक सूत्रका खोज जस्ता सांसारिक विषयहरूमा बढ़ी बाँधेको छ—दत्तका कविता, पहाड़ी चित्रकारहरूका चित्रहरू, डिड्डु र दाता रनु जस्ता वीरहरूका उपाख्यानहरू। उनी डोग्रा समु-दायमा विद्रोहको चिह्नहरू अवलोकन गर्छन् अनि यतिसम्म कि उनी बादलको व्यवहारमा पनि अन्याय पाउंछन्। स्वतन्त्रतासंगै बहुरंगी इन्द्रेणीहरू र संगीतको असंख्य धूनहरू आए। "तर कसको निम्ति?" प्रश्न गर्दै कवि उत्तरमा भन्छन्:

"अघिबाटै रंगले ढाकिएका मयूरहरूका निम्ति, तर दूध र पानी पृथक गराउने हाँसहरू अझ दुःखी बन्छन् अनि अन्योल र भयले पछि हट्छन्।" 'पौड़ाँ' ले काश्मिर उपत्यकाको वृक्षका सौन्दर्यको, चिनारका छायादार बाहुल्यता, तलाव-हरूका शान्त गम्भीरता, वैंस वृक्षका लचीलापन, अनि काश्मिर लोक-गीतका विविधता र सम्पदका वर्णन गर्छ। 'चक्की' र 'ए राति दा खिरि बेला' ले डोग्रा जीवनको अद्वितीय र सुन्दर चित्रहरू प्रस्तुत गर्छन्। अघिल्लोले पतिदेखि पृथक गराइएकी अनि सासूको पञ्जामा राखिएकी स्त्रीको असहायपनको भावनाको मर्मस्पर्शी वर्णन गर्छ भने पछिल्लो कवितामा तीन कोमल चित्रहरू छन्—रातको अन्तिम प्रहर, दिनको उज्यालो बिस्तारै बढ्दै गएको अनि बहुरंगी धूनको पृष्ठ-भूमिको अन्धकारले पातलो पर्दाको डोरी समातिरहेको, सेता हाँसका चम्कीलो उड़ान जस्तै युवतीदल जो बाटोमा उज्यालो छर्दै जान्छन् :

> बोल बरेसा दारस लेथि, किरणां बनिये गइलि चमकै
> न्हेरें दे मन थून्दे जन्दे, ए लोइ झुमके लमके

अनि एउटी तरुणी ब्राह्मण विधवीको, जो प्रति बिहान आफ्नो जल्दो वैंश-लाई शीतल गराउन कुवामा जान्छे। तीनैवटा चित्रहरू विस्तृत भावना र अभि-व्यक्तिको मितव्ययिताले, डोग्रा जीवनको तीनै पक्षलाई जीवन्त बनाउने परिमित चरणहरूमा गरिएका छन्—रातको अन्तिम क्षणतिर जम्मुमा जीवन, आशा र आनन्दमय साना डोग्रा केटीहरूका जीवन, एउटी तरुणी हिन्दु विधुवीको पीर र वेदना, हिन्दु समाजको संकीर्णता, कट्टर र जात-पात ग्रस्त हिलोमा फंसेकी एउटी फूलको लाचारीपन।

रामनाथ शास्त्रीले आफ्ना कलम गजलहरूमा र अनुवादको निम्ति चलाए, तिनले विस्तृत क्षेत्र लिए—ऋग्वेदको ऋचा, गान्धीको विषयमा हैदराबादका निजामले लेखेका फारसी कविताको अनुवाद अनि भर्तृहरिको 'नीति शतक' का सैंकड़ौं संस्कृत श्लोकहरू। 'नीति शतक' को चयन आनन्दको विषय थियो किनकि यसले डोग्रा देशमा लोकप्रिय भर्तृहरिको बारहरूका लोकप्रिय परम्परासित मेल राख्तथ्यो। भर्तृहरिका पदहरूमा पूर्ण जीवन भोग्ने ज्ञानी राजाहरूका अनुभूतिका सार छ अनि तीहरूका सौन्दर्य मौलिक संस्कृतमा प्रसिद्ध छ। तर डोग्री अनुवाद-हरू एक समानका गुणका छैनन्; तीमध्ये कोहीमा सौन्दर्यको तत्व छ, कोहीमा मोहकताको तत्व छ तर कोही भने मौलिकताको तुच्छ छायाहरू मात्र छन्। डोग्री तुलिकामा भर्तृहरिका शब्द चित्रहरूका अनुकरणले मौलिकमा निहित चरणको तीक्ष्णता र रंगको बाहुल्य गुमाएको छ। चाहे यो अनुवादकको कार्यकुशलताको दोष होस वा डोग्री तुलिकाको दोष होस वा स्थानीय रंगको दोष होस, दोष स्पष्ट छ। भर्तृहरिका दुइ चरणका सट्टामा चार चरण छन् अनि चारको सट्टामा

दशदेखि चौदह चरणसम्म छन् । कतै स्वराघात उचित स्थानमा छैन । कतै रंग ज्यादै छरिएको छ अनि अनुवादकको भावुकतावाद र संवेदनशीलतामा मौलिक रूप डुबेको छ । कतै अनुवाद उपयुक्त र दुरुस्त छैन । मूल लेखक र अनुवादकको बीचमा अनुभव अनि यी अनुभवका गेयता [बाहुल्य र नमनीयपूर्ण संस्कृतदेखि डोग्री धरै पछि छ] को बीचमा यति ठूलो भिन्नता छ कि यी दोषहरू अपरिहार्य छन् । अर्कोतिर, आफ्ना प्रयासको निम्ति अनुवादक प्रशंसाको पात्र छन् ।

१९४० तिर आफ्ना रचनाहरूमा वेदपाल दीपले उठान गरेको प्रतिज्ञा तिनका १९५० तिरका रचनाहरूमा पूर्ण भएको छ, जसमा पाँचवटा कविताहरू, दुइवटा सवैयाहरू, एउटा चौपद र आठवटा गजलहरू छन् जुन 'मधुकण' 'नमिचेतना' र '१८५७' मा प्रकाशित भए । तिनका रचनाहरू चारवटा मुख्य संवेगसित सम्बन्ध राख्तछन्—अतृप्त प्रगाढ़ व्यक्तिगत प्रेम र आफ्नै घातलाई प्रिय लाग्ने सांघातिक प्रेम, पुंजीपतिहरूका विरुद्धमा विश्वका कर्मीहरू, कृषकहरू र श्रमिकहरूका अन्तिम सफलताको सपनाले प्रेरित साम्यवादी सिद्धान्त, प्रकृतिको बदलँदो मनोस्थितिको निम्ति उत्तम सूक्ष्मबोध अनि डुग्गरको निम्ति देशभक्तिको संवेग । कलात्मक र अर्थपूर्ण सृजना गराउँदै आफ्ना विचार र आवेगका अभिव्यक्तिको निम्ति उपयुक्त शब्द पाउन कवि विचारको परिपक्वतासित प्रवृत्तिलाई योग गराउँछन् । पहिलो वर्णन गरिएको आवेगले अतृप्त प्रणय वर्णन गरिएका कोमल मधुर गजलहरूमा अभिव्यक्ति प्राप्त गर्छ र दोस्रोले 'अज्ज मेंह् नइं कल्ल' जस्ता केही गजलहरू र कविताहरूमा प्राप्त गर्छ जहाँ एक विचारको अभिव्यक्तिको निम्ति विविध अलंकारहरूका प्रयोगमा अत्यधिक आदर्शताले तिनी बहकिएका छन् । यही विचार-लाई उर्दू कवि मजरूह सुल्तानपुरीले केवल दुइ चरणमा व्यक्त गरेका छन् । कवि दावा गर्छन् कि कर्मीहरू, श्रमिकहरू र कृषकहरू जागृत छन् अनि हातमा हँसिया, मार्तोल र हलो लिएर तिनीहरूले जलप्रलय ल्याएका छन् अनि पूंजीवादका स्तम्भहरू त्यो प्रलयको समक्षमा माचिसका सिन्का जस्तै ढल्नेछन् । 'बदली गयी दुनिया' कवितामा घरमा पानी चुहिरहेको, परिवारका सबै सदस्यहरू बिरामी भएका अनि घरमा खाद्य नभएको स्थिति देखेर एक झरीको साँझमा एउटी तरुणी डोग्रा युवती र त्यसकी मानसिक स्थितिको मर्मस्पर्शी चित्रण छ । बाल्य-जीवनलाई त्यागेर उ एक जटिल उमेरमा प्रवेश गर्छे अनि असामयिक अवस्थामा नै वैंश त्यागेर उ जिम्मावारी र पीर-मर्का वहन गर्न पुग्छे । खेल्ने र गाउने चिन्ता-मुक्त युवतीहरूलाई देखेर अनि आफ्ना काँधमा आइलागेको अभिभारालाई बुझेर उ विचलित र विक्षुब्ध बन्छे र निरूपाय बनी उ रुन्छे । कविताको ध्वनि सन्तापपूर्ण छ र कविताका चरणहरू विचलित हृदय र गतिमा अघि बढ़ छन् । 'बिन्दक जोर गइ लग्न हो' कवितामा, ढोलको संगीत छ र अग्रगति लिन शब्दहरू आपसमा ठेलमठेला गरेको देखिन्छन् । मानिसहरू गाउँमा नाच-गानमा

व्यस्त छन् अनि कवि आशा गर्छन् कि नया युगले तिनीहरूलाई उत्साह प्रदान गर्नेछ, अनि तिनीहरूमा परिवर्त्तन आउनेछ र जंगली झाड़ीहरूका सट्टामा ती जमीन गेरूवा रंगका फूलहरूले ढाकिनेछ।

दुवै सवैयाहरू उत्तम छन्— अन्तरिक्षमा कृत्रिम उपग्रह पठाउँदा मानवले प्राप्त गर्न सक्ने चमत्कारको एउटाले वर्णन गर्छ र अर्कोले उषाको वर्णन गर्छ। 'बादल ने सिज्जी रि सन्यां' ले साँझको धूमिल अन्धकारसित कविको विषाद र चिन्तामग्न उदासी, समीर सदृश स्मृतिको तरंग, आर्द्रतालाई समेटे झैं हृदयको वेदना नयनद्वारा पोखाउँदै, हृदयको क्लान्ततालाई प्रकृतिको विषादसित सम्मिलित गर्दै कविको हृदय प्रकृतिको हृदयसित एकाकार बनेको सुन्दर सन्ध्याको चित्रण गर्छ।

यो दशकमा यशका चारवटा गीतहरू र आठवटा कविताहरू, 'मगधुली', 'नमि-चेतना', र '१८५७' मा प्रकाशित भए। चारैवटा गीतहरू सुन्दर छन्। एउटाले नन्दहरूद्वारा सताइएको आफ्ना प्रेमीप्रतिको अनुरागमा एकातिर र अर्कोतिर आफ्ना पतिप्रतिको भक्तिमा अल्झिएकी युवतीको भावनालाई वर्णन गर्छ। आफ्ना प्रेमीको सम्झनाले उसको अन्तरतमलाई प्रतिघात गर्छ, अनि उसकी नयनहरूले प्रेमीको सम्झनामा आएको अश्रुलाई थाम्न सक्तैनन्, अनि गोबरको काँचो डल्लाको धुँवाले आँखामा आंसू निस्केको हो भन्ने बहानामा उ रून्छे। 'सयां धिरदियां चित्त कम्हलायी जन्दा' बिछोड़िएको प्रेमीको अवस्थाको वर्णन गरेको अर्को एउटा दु:खमय सुमधुर गीत हो जसले आफ्ना स्मृतिको प्रकाशमा बाँचिरहेकी एउटी स्त्रीको स्मरणीय चित्रण गर्न कविको गम्भीर भावना, अर्थपूर्ण शब्दहरूका प्रयोग र संगीतको चरणलाई संयुक्त गराउँछ :

अउँ चेतें दियें गी बाली लहनी
जएल्लइ चाउने पास्सें न्हेरा चाई जन्दा

मेलासित सम्बन्धित अन्य दुइ गीतहरू —क्रमैसित 'वसन्त' र 'मेला' ले पनि डोग्रा जीवनको सुन्दर चित्र प्रस्तुत गर्छन्—पहेंलो वस्त्र लाएकी अनि ढकमक फक्रिएकी सयपत्री फूल झैं, रून्झुनाउँदा घुंघुरहरू, कान्तिमय अवयवहरू, छेदक नयनहरू र आकृति, सुनौला पोशाक र गहनाहरू लाएकी, अनि प्रेमी मिलनको सपनामा विभोर र उनैले चुरीहरू दिएका एउटी युवतीको, अनि मिठाइका निम्ति रोइरहेका डोग्रा नानीहरूका, फेटा गुंथेर धातुले मोड़ेको छड़ी लिएर मल्ल युद्धका निम्ति गइरहेका युवकहरूका अनि चन्दन गुलाफी पोशाकमा लपेटिएकी, काजलले काला नयनहरू, वैंशको भारले चम्पकको हाँगाझैं झुकेका स्वास्नी मानिसहरूका।

'१८५७' कवितामा कवि १८५७ लाई तरवारको कलम र रक्त-मसीले लेख्ने लेखकको रूपमा कल्पना गर्छन्, आफ्ना साथीहरूसित उन्नत संसारको सपना

देखेका कविता 'मेरा साथी', जित्तु र दिदोको परम्परालाई स्मरण गराउँदै डोग्रा-हरूलाई जागृत गराउने कविता 'सम्बाल कर', अनि शान्तिको आवश्यकताको निम्ति कवि बोलेका कविता 'अमन' तुलनात्मक रूपमा निम्न स्तरका छन् । 'पशां' र 'मेरा देश' कविताहरू अझ असल छन् । पहिलोको विषय-वस्तु एउटी डोग्रा पत्नी छे, जसलाई विविध भूमिकामा वर्णन गरिएको छ—मेलामा जस्तै क्रीड़ामय, राम्री र उन्मादी प्रेमिकाको रूपमा, साँझमा पति-प्रतीक्षामा फूल जस्तैउदासी र झोक्रिरहेकी, दीयो जलाउने भगवानको प्रेम र निष्ठाले पूर्ण, ससुराली घरमा कष्ट झेल्ने र कठोर परिश्रमी अनि आमा जस्तै स्नेहमयी रूपमा । पछिल्लो कवितामा, कवि आफूले देखेको आफ्नो देश अनि आफ्ना देशवासीका सरल र मर्मस्पर्शी झाँकीहरूलाई विविध रूपमा वर्णन गर्न चेष्टा गर्छन्—बँश र दरिद्रताले भारयुक्त अनि ज्वाला जस्तै प्रज्ज्वलित, छातीमा एउटा पाठा जोड़सित पक्रिएकी एउटी ग्रामिण युवतीको जस्तै, प्रकृतिको आकृतिहरू—हुन्हुनाउँदो खोलाहरू, हरिया खेतहरू, वृक्षपछिल्तिर उदाउंदो चन्द्रमा, वाढीका एक बयान भेड़ाहरू जस्तै आकाशका बादल, विभिन्न ऋतुका रूपहरू । यस्तो लाग्छ कि यशले जताततै सुन्दर नारी चेहरा अथवा प्रकृतिको भावुक स्वरूप देखछन्, तिनका उत्साह गति-शील बन्न थाल्छ अनि सुन्दरतम शब्दमय गीतको रूप लिन्छ । एक विचारमा, यश डोग्रा नारीत्वका गायक हुन्, उसको प्रेम र सौन्दर्य, उसको वेदना र पीढ़ा, उसकी क्रीड़ामय हांसो, उसको असहायपन र उसको मौन गीतहरूलाई आवाज प्रदान गरेका छन् ।

४

पचास सालतिरका डोग्री कविताका प्रांगणमा नव-ध्वनिहरू भर्ने उल्लेख-योग्यहरूमध्ये तीन प्रौढ़ व्यक्तिहरू थिए—ब्रह्मानन्द, रघुनाथ सिंह सम्याल र शम्भुनाथ, अनि तीन युवाहरूमध्ये—तारा समाइलपुरी, ओंकार सिंह आवारा र केहरी सिंह मधुकर अनि एउटी तरुणी युवती पदमा थिए ।

६० वर्षको उमेरमा फलदायक डोग्री कविको रूपमा स्वामी ब्रह्मानन्द तीर्थ अवतरित हुनु आश्चर्यपूर्ण घटना र उल्लेखयोग्य थियो । यतिञ्जेलसमय कुनै पनि डोग्री लेखकले चारवटा पुस्तकहरू र वृहताकार कृति श्री ब्रह्मा संकिर्तन जस्ता प्रकाशित गरेको थिएन । मन्दिरहरूका शहर, जम्मुमा अमरेश्वर मन्दिरको आश्रयमा बसेर अनि ब्राह्मण सभाको संलग्न क्षेत्रमा कवि गोष्ठीमा आवृत्ति गरिएका कविताहरू सुनेर तिनले १९५० को प्रारम्भतिर डोग्री कविता लेख्न शुरू गरे अनि प्राय: ६ वर्षभित्रमा तिनले प्रशस्त लेखेका थिए, पाँचवटा पुस्तकका निम्ति सामग्रीहरू थिए—'गुंगे दा गुर', 'मानसरोवर', 'गुप्रगंगा', 'अमृतवर्षा' अनि 'श्री ब्रह्मा संकीर्तन ।' विषय-वस्तुले गर्दा यी पांचै प्रकाशनहरूमा लोकप्रिय

वेदान्त छन्—हिन्दु पुराणका मिश्रण, पुरोहिती सिद्धान्त, भगवत, पुराणहरू, उपनिषदहरू र हशीमको पारसी सुफीवाद, नसिम र नियाज अनि ती सबै एकै शैलीमा लेखिएका छन् जसले नीरसता, कुण्ठित र पुनरावृत्ति प्रतिपादन गर्छ। 'श्री ब्रह्मा संकीर्तन' ३०० पृष्ठको छ, आठ प्रकरणमा विभक्त छ र यसलाई स्वामी ब्रह्मानन्दको महान कार्य भन्न सकिन्छ। यी प्रकाशनले डोग्री पद्यका पुस्तक उल्लेखनीय रूपमा वृद्धि गरेको छ अनि तिनीहरूले स्थानीय वाग्धारा र भाषामा तिनताक उत्तर भारतमा विद्यमान लोकप्रिय हिन्दु दर्शन प्रकाशित गरे।

डोग्री कविताको क्षेत्रमा उत्रंदा रघुनाथ सिंह स्वामी ब्रह्मानन्द भन्दा पनि उमेरमा जेठो थिए, तर तिनले आफ्ना कृतिमा यस्तो रस र निष्ठा प्रतिपादन गरे जसले तिनको उमेरलाई भूल प्रमाण गरिदियो। १९५३ मा तिनले डोग्रा देश र डोग्री बोली विषयका कविता १६ पृष्ठको पुस्तिकाको रूपमा प्रकाशित गराए। अर्को वर्ष तिनले 'गीता' को डोग्री पद्य अनुवाद छपाए अनि 'अरूणिमा' नामक संकलनमा तिनका अन्य कविताहरू १९५९ मा छापिए। ब्रह्मानन्दका कृतिमा वेदान्तको रंग थियो भने सम्यालका कृतिमा एउटाभन्दा बढ़ी रंग थिए—आध्यात्मिक र धार्मिक उपासना, डोग्रा समुदाय र डोग्रा बोलीप्रति को प्रेम, डोग्रा समाजका विकारहरू र नयाँ फेशनका भर्त्सना, अनि प्रकृतिको अनुभूतिशीलता। तिनको शैली आवेशपूर्ण, व्यंग र प्रवाहले रंगिएको छ।

तिनका भक्ति रचनाहरूमध्ये 'गीता इन डोग्री भर्स', 'कृष्ण लीला', 'माली', र 'महिमा' लाई लिन सकिन्छ। गीतामा केही भाषिक सुखानुभूति र डोग्रीको प्रभावशाली प्रयोगको गुण छ, तर कृष्णको नीति ज्ञानको मूलोद्देश्य अर्जुनलाई युद्धको निम्ति प्रेरित गर्नु मात्र हो भनेर कविले यो महान पुस्तकको मूल सन्देश लोप गराएका छन्। अनुवादमा धेरै अशुद्धता छन्। 'डोग्री देश ते डोग्री बोली' र 'डोग्रा देश जागाइ जयां' जस्ता कविताहरूले आफ्ना देश र भाषाप्रति सम्यालको प्रेम दर्शाउँछन्। दोस्रो कविता सम्यालको शैलीको असल उदाहरण हो—प्रथम पदमा डोग्रा देशको चित्रण छ, दोस्रो र तेस्रोमा डोग्रा जन-साधारणको, चौथोमा समुदायमाथिको संकट अनि अन्तिममा संकटलाई विजय गर्न शास्त्रस्त्रलाई गरिएको आह्वान जस्तै, स्थिति र आफ्ना सैन्य-शक्ति विचार गर्दै कार्य सञ्चालन गर्ने दिने सेनापतिको जस्तै एउटा चुनौति छ।

सम्यल फेशनमा नव-प्रवृत्ति र सामाजिक परिवर्त्तनका विरोधी छन्। यी विषयक कविताहरू 'खो,' 'इन्दे कोला छुड़को', 'फेशन', र 'भली आजादी' हुन्। तिनी सह-शिक्षा र घरदेखि बाहिर युवतीहरूका स्वतन्त्र हिड़ाइका कट्टर विरोधी छन्। जीवनको पुराना मान्यताको लोपमा तिनी दुःखी छन्। ईश्वर, गीता, सामाजिक विकारहरू, राजपुत परम्परा, डोग्रा र डोग्री प्रति पूर्वाग्रहले ग्रसित भएको हुनाले तिनले डोग्रा ग्रामिण क्षेत्रका प्राकृतिक सौन्दर्यप्रति थोरै मात्र ध्यान दिएका

छन् । तर, 'प्रभात' नामको एउटा सानो कवितामा दर्शाए झैं तिनमा प्रकृतिको निम्ति अनुभव र प्राकृतिक सौन्दर्यको चित्रण गर्ने शक्ति थियो । शब्द र ध्वनिका चयन र आफ्ना भाव प्रेषणार्थ तिनीहरूका प्रयोगका शिल्पको दृष्टिकोणले सायद यो तिनको सर्वोत्तम कविता हो । कविले प्रात:कालको ध्वनि र दृश्यलाई अभाव र निर्धनताको जीवन र उत्कृष्ट कोमलता र अनुभूतिसित गुँथेका छन् ।

कविता लेखन शुरू गरेको समयमा शम्भुनाथ प्राय: ४७ वा ४८ वर्षका थिए । डुग्गरको ग्रामिण क्षेत्रमा बसेर, तिनले शहरमा किरानी गर्ने डोग्रा गाउंमा जीवनको सरलता र सानो किरानीको कठिन काम देखेका थिए । यो पृष्ठभूमिबाट आफ्ना कविताका निम्ति विषयहरू लिएर तिनले अनुभूतिसहित सरल, प्रभावशाली र विवरणात्मक शैलीमा लेखे । 'भड़ा' नामक संकलनका १५ कविताहरू लगायत तिनले प्राय: १८ कविताहरू प्रकाशित गरे । 'फूलां दा कुर्ता' र 'क्लर्क, तिनका प्रतिनिधि कृतिहरू हुन् । ती डोग्रा जीवनको क्षुद्रांशका अनुभूतिशील चित्रण हुन्—एउटा डोग्रा ग्रामिण युवतीको र अर्को शहरिया किरानीको । फूलां, नशीबू बरोआलकी तरुणी पुत्री, वैंशको जादु र मोहकताले पूर्ण एउटी सुन्दरी युवती हो । गोबरको डल्ला टिप्दा त्यसको चोली कांड़ामा अल्झन्छ र च्यातिन्छ ।

उसकी कमिज मात्र च्यातिएको होइन
हृदय पनि उसकी जर्जरित छ

घर फर्केपछि उसलाई आमाले गाली गर्छिन्; यस्तो त उसलाई बानी भइसकेको थियो, तर उ बाबुको पिटाइदेखि भयभीत छे । "बुबा ! मलाई नपिट्नुहोस्, मैले जानी जानी यसो गरेकी होइन ।" उसकी भयत्रस्त पहेंलो चेहेरा र कम्पित रूप देखेर बाबुको क्रोध स्नेहमा पग्लन्छ । अर्को दिन नसक्ने एउटा गरीब परिवारमा एउटा चोली च्यातिएको घटना, आमामाथि त्यसको प्रभाव, बाबु अनि त्यो केटीको क्षुब्ध र आघातित मानसिक स्थितिको वर्णन मार्मिक छ । एउटा किरानीको चित्रण केही अत्युक्ति भए तापनि प्रभावशाली ढंगमा छ ।

शम्भुनाथका अन्य कविताहरूले समाज र सामाजिक मान्यताहरूमा आएको परिवर्त्तनहरूमा भावनाको ह्रास, वैंश विलुप्तिमा दु:ख; छाल सरह आउने सुख-दु:खका सम्झनाले ग्रसित, तथाकथित प्रगतिमा विस्मय, जो तिनको निम्त बढ्दो अन्योल, बढ्दो अन्धकार, बढ्दो हिंसा र युद्धको शस्त्र-अस्त्रमा वृद्धि हो, आफ्ना मातृभूमिको प्रेम (आफ्ना साथी कविलाई डोग्रा पहाड़को अन्धकारव्याप्त कुना-कुनातिर आशाको दीप जलाउन उत्तेजित गराउँदै) अनि आफ्ना प्रेमीसित विछोड़िएकी प्रतीक्षु प्रेमिकाको सहानुभूतिमा पीर र वेदनाको भावुक अनुभूति, बादलको घनत्वमा उसकी पीरको वृद्धि अनि वसन्त ऋतुमा नाच्ने पक्षीगण आदि दर्शाउँछन् । शम्भुनाथले सावधानी र प्रेमसित डोग्रा जीवनको सरल चित्र-

हरू चित्रण गर्न मन पराएको देखिन्छ; यस्तो लाग्छ तिनको चित्रकारिता हेर्न प्रकृति स्वयं स्तब्ध बन्छे अनि वेदनाले अश्रुसिक्त बन्छे, तिनका शब्दहरूलाई उ आफै भावनाको कुहिरो प्रदान गर्छे। यस्ता चित्रणहरूमध्ये 'फूलां', 'बक्कारिया बक्कारिया रूत्तां' को गोरी, जो कुवामा पानी भर्न जाँदा आफ्ना पाइताला संगै हांसो छर्छे; एउटी पहेँली र विवर्ण वृद्धा स्त्री कम्पित घिच्रोले उसलाई पानीमा खेलेको हेर्छे; अनि एउटी विधवी जसले आफ्ना छरपस्टिएका आशाहरू संगाल्ने प्रयासमा अञ्जुलीमा बालुवा उठाउँछे अनि अन्धकार बाक्लिन्दै गएको साँझमा ताविको किनारमा आफ्ना पतिको चितामा जल्न तत्पर बन्छे।

५

धेरै उत्साह र संकल्पले डोग्री साहित्यिक मंचमा प्रविष्ट हुँदा तारा समाइलपुरी, ओंकार सिंह गुलेरी आवारा, केहरी सिंह मधुकर केवल बीश वर्षीय थिए अनि पदमा केवल १५ वर्षीया थिइन्। तारा र आवाराका कृतिले मधुकरको कविताको रमाइला वाग्धारा र भुल्भुलाउँदो बहावको सुखानुभूति अथवा पदमाका रचनाका स्त्रीसुलभ मोहकता र भावुक वाहुल्यता दर्शाउँदैन तर, यसमा आग्रहको गम्भीरता र व्यक्तिगतताको छाप छ। तारा साम्बाको काण्डी क्षेत्रका थिए भने, आवारा कांगड़ाको पहाड़ी क्षेत्रका थिए अनि तिनीहरूका कवितामा आफ्ना जन्म थलोका पृष्ठभूमि प्रतिबिम्बित छन्। ताराका कविताका विषयहरू काण्डीका जीवनबाट लिइएका छन्, आवाराका चाहिं कांगड़ाका पक्षीहरू र धर्मशालाका पहाड़हरूसित सम्बन्धित छन्। ताराले 'फौजी पेन्सनर' नामक १५ कविताका संकलन प्रकाशित गरे, आवाराका सात कविताहरू 'मगधूली' मा छापिए। ताराका कविता सामाजिक विषयसित सम्बन्धित छन्। आवाराका कविता व्यक्तिवादी र तिनका कविताहरू दु:ख र अवलोकन का आँचलले ढाकिएका पूर्णत: व्यक्तिगत छ।

ताराले १८५७ का वीरहरू र डोग्रा वीर मियां डिड्डुका विषयमा लेखे। तिनले समकालीन सामाजिक स्थितिमाथि पनि लेखे जुन स्वार्थपन, शोषण, चापलुसी र दरिद्रता सम्पन्नवर्गका निष्ठूरता अनि धनीवर्गका आलस्यसित संबंधित थिए, परिवर्त्तनशील समय र स्वतन्त्रतापछिको भ्रम तर 'फौजी पेन्सनर', 'काण्डी दा बसन्ना', 'बारा माह ते बहारां', 'कुन्डलियां' र 'जादुजड़ियां' कविताहरूमा जस्तै आफ्ना गाउँ काण्डीका मानव र प्राकृतिक दृश्यका वर्णन गर्नमा तिनी बढ़ी सफल छन्। अन्तिम नामको कवितामा काण्डीका जनसाधारण का अन्ध-विश्वासको वर्णन छ अनि एउटी उन्माद रोगिणीलाई थाकिन्जेलसम्म पिटेर नाच्न लगाइन्छ अनि भूत धपाउनलाई खोरसानीको धुवाँ सुंघाइन्छ। 'काण्डी दा बसन्ना' ले काण्डीको जीवन वर्णन गर्छ—दहको पानी—पानी होइन, केवल घांस-पातका आसवन—ले बाँचिरहेका मानिसहरूमा पानीको अभावको हाहाकार छ।

विषालु सर्पहरू,बिच्छिहरू र अन्य कीट-पतंगहरूपूर्ण, ग्रीष्मको तप्त उष्णता, पानी र घांसको अभावग्रस्त काण्डीको जीवन खुबै कष्टप्रद छ। 'फौजी पेन्सनर' एकजना अवकाशप्राप्त सिपाहीको खुबै मर्मस्पर्शी र अत्युक्ति चित्रण हो, जो प्रथमविश्व युद्धमा लड्यो—युद्धले विकृत चेहरो, शुष्क जिब्रो, चाउरी परेको शरीर, विवण घुँड़ा र खुट्टा, गम्भीर उदास नयनहरू, लड़खड़ाउँदा कदमहरू, पिठ्यूँमा टासिन लागेको पेट, खुबै कठिनतासाथ अघि बढ़ि रहेको जीवनहीन शरीर, संगीन र गोलीले लागेका चोटहरू, झुत्रा पोशाक र फाटेका जुत्ताहरू अनि युद्धमा उसले प्राप्त गरेका छातीमा झुन्डाएका तकमाहरू जसको उसलाई अहिले पनि गर्व छ अनि उ पाँच रुपिया निवृत्ति थाप्न शहर जाँदा काण्डीको गर्मीमा बाटैमा वेहोश बन्छ र मर्छ। बारह महीना भरिको ऋतुहरूका प्रगति सुन्दरतापूर्वक वर्णन गरिएको छ। चैत महीनामा अन्नपूर्ण गहूँ वैंशले मस्त गोरीहरू झैं हुन्छ अनि घण्टीको टिङटिङ आवाजसित नाच्दै वैशाखी आउँछे। आषाढ़को गर्मीमा, बग्दो खोला-नालाहरू चकित पर्छन् अनि आफ्ना मार्गमा रोकिन्छन्, अनि धूपीका वृक्षहरू सुस्केरा लिन्छन् अनि जमीन ताँबा जस्तै रातो बन्छे। श्रावणमा, आकाशले समुद्रको जल-निर्गमद्वार खोलिदिन्छे अनि जता-तता पानी नै पानी हुन्छ र नदी-नालाहरू वैंशले उच्छाल-पूर्ण बन्छन्। अशोजमा, रातले घाँसलाई मोतीले आच्छादित पार्छे अनि शीत ऋतु तीव्र चीसो वायु र अविराम वर्षाले विकट हुन्छ। अन्तमा, मौरीको भुन्भुन, गोठालाहरूका गीत र रंगविरंगी फूलहरू लिएर ऋतुहरूकी रानी फाल्गुन आउँछे।

आवारालाई पुरुष र स्त्रीको संसारप्रति उति प्रेम नभएको देखिन्छ, जुन उसको निम्ति हर वस्तु विक्रय गरिने एउटा ठूलो वजार जस्तो लाग्छ—मानिसको विश्वास, उसको मर्यादा मानवता, ईश्वर, प्रेम, यौवन, कला, कविता र प्रत्येक वस्तु, जहां कठोर परिश्रमको फल पाइन्दैन तर भ्रष्ट व्यवस्थाको जीत हुन्छ। एउटा चोर केसरी चोर बन्छ भन्ने प्रश्न गर्दै उनी विभिन्न कारकका विश्लेषण गर्छन्—छोराको बिरामी, अत्यधिक दरिद्रता, समाजको सहानुभूतिको न्यूनता। उनी समाजदेखि पलायन बन्छन् अनि अग्ला पहाड़हरू, अग्ला धूपीका वृक्षहरू र देवदारहरू अनि छांगो-छहरा र नदीहरूका संगीतले परिपूर्ण धर्मशालाको स्मृति र प्रतिविम्बहरूमा सन्तोष खोज्छन्। उनी यी सबै भावनावश वर्णन गर्छन्। उनको मतानुसार धर्मशालालाई पर्वतका पुत्रीहरूले स्नेह प्रदान गरेका छन्, धूपी र देवदारहरूले पंखा हम्काइ दिएका छन्, खोला-नालाले गाइ दिएका छन्, देवो-हरूद्वारा हरिया घांसले आच्छादित र उसको केशराशिलाई चन्द्र-ज्योत्सनाले सजाइदिएकी छे अनि रातले उसकी नयनहरूमा काजल पोतेकी छे। यहां कविको कल्पना परिचित भाव-भूमिमा छ अनि उनी लघु जीवनको सुस्त गतिमा, प्रेम विषयमा, जो हृदयको भ्रम मात्र हो; सौन्दर्यमाथि, जुन दर्शकको नयनमा रहिन्छ अनि अश्रुमाथि—हृदयको नुनिलो थोपा, हृदयको उत्कण्ठा, हृदयसागरका

मूल्यवान मोतीहरू, नयनका वसन्ती पुष्प, अनुतप्त हृदयका झरीका यामहरू— माथि प्रतिविम्ब पार्न थाल्छन्। उनी पक्षीसित परिचय खोज्छन् र पक्षी जस्तै अकेला भौंतारिनुमा जीवनको रहस्य प्राप्त गर्छन्। उनी सौन्दर्य, यौवन, गीत, स्नेह, सांसारिक सुन्दरता, पहाड़, खोला सबलाई भ्रमको सांग्लोको रूपमा पाउँछन् अनि उनको हृदय हावाले हल्लाएको पात जस्तै कांप्दछ अनि नयन अश्रुपूर्ण बन्छ, तर उनी खोला जस्तै अघि बढ़छन्। आवाराका कवितामा संवेदनशीलता र उर्लंदो वेदनाको तत्व छ। उनको शैली सरल छ अनि यसले कांगड़ाको वाग्धारा बोलाइको झांकी प्रदान गर्छ।

प्रथम डोग्री कवियत्री हुने विशिष्टता पदमामा छ अनि १४ वा १५ वर्षमै लेखिएको तिनको प्रथम कविताले नै महत्वपूर्ण प्रवीणता, कल्पना र अनुभूति प्रदर्शित गरयो। 'मधुकण' नामक कविता चयनमा उनका आठ कविताहरू छन् अनि '१८५७' शीर्षक संकलनमा एउटा कविता छ। अन्तिम नाम गरिएको कवितामा उनले अन्य अनुभवी कविहरूले प्रदर्शित गरेभन्दा बढ़ी भावना र अभिव्यक्तिको परिपक्वता दर्शाएकी छिन्।'अगष्ट महीनाको उन्माद' वर्णन गर्ने वा शहीदका प्रशंसा गीत वा तिनीहरूका बलिदानका गीतका कविताहरूमा पाइने अभिव्यक्तिको प्राचुर्य तिनको कविताहरूमा छैन। यी सबैलाई वर्णन गरेपछि उनी सोझ विषयको केन्द्रतिर बढ़्छिन् अनि गत शताब्दीको ५७ साललाई यो शताब्दी-कोसित तुलना गर्छिन् अनि दुवैमा बलिदानको महत्वलाई जोड़ दिन्छिन्। जहां १८५७ मा शत्रुसित लड़्नलाई उत्सर्गको आवश्यकता थियो भने, आज कला, संगीत र सामाजिक कल्याणको विकासको निम्ति देशमा शान्ति स्थापना गर्नु उत्सर्गको आवश्यकता छ। अरूले देशप्रेम विषयमा कैयौं कविता लेखे भने उनले यस विषयमा केवल चार चरणको एक श्लोक मात्र लेखिन् जुन संक्षिप्ताको निम्ति उल्लेखयोग्य छ।

तिनकी अन्य छ कविताका विषयहरू चन्द्रमाको निम्ति उत्कण्ठा र प्रेममा मानव हृदयको स्थिति छन्। 'गीत' र 'इच्छेया' मा पदमा पीड़ित ताराहरू चन्द्रमाबाट खोस्न व अनि त्यो हृदयहीनाको सौन्दर्य टिप्न आपना कोमल पाउहरूले आकाशमा टेक्ने इच्छा गर्छिन्, तर उनी आफ्नो अवस्थाप्रति नजर लाउँछिन् र आफूलाई मरुभूमिया पानीको निम्ति तड़पिरहेकी हाँस जस्तै खोसिएर निर्जन ठाउँमा फालिएकी एउटा प्रकाश जस्तो पाउँछे, जर्जर, थकित र अधीरता साथ प्रेमी प्रतीक्षु :

> तेरे हाथें ने फट्टा दबट्टरू सी-सी
> मुक्कने च आइयां नें लीन्द्रां नि

तिमीले च्याति दिएको मेरी दुपट्टाका टुक्राहरू असंख्य छन् अनि म सिउँदा

सिउँदा थाकिसकें ।

कवियत्रीको सपना र सौन्दर्यको कोमल काल्पनिक उड़ान जीवनको यथार्थको समक्ष धराशायी बन्छ तर उनमा सहिष्णुता र कष्ट भोगाइका साहस असीमित छ अनि यो साहस तिनको कविता 'राजे दियां मन्डियां' मा देखिन्छ । यो कवितामा साहसले युक्त असहाय विद्रोह र शक्ति-सम्पन्नद्वारा शक्तिहीनका शोषणको स्थितिको अन्तर्ज्ञानलब्ध सम्झौता देखिन्छ। यो कवितामा यी भावनाका वर्णनले कोमल चाँदी वस्त्रमा कटु यथार्थ वहन गरेको छ अनि यो अति प्रभावशाली र जबर्जस्त भएको हुनाले यसले हृदयलाई सोझो रूपले स्पर्श गर्छ । यी राजकीय दरवारहरू कसका हुन् ? तिनीहरूका, जसले उसकी वंशको वृक्षमा कापिला पनि लाग्न नपाई उसकी सुहाग लुटिदिए । निर्धन स्त्रीहरूका मुखका गाँस खोस्ने, उसकी निराकार रक्त चुस्ने र उसकी कम्पित हातहरूमा हिर्काएर सर्वस्व लुट्नेहरूले भारी बोकाइएका घोड़ीहरूमा प्रतीकस्वरूप यी महलहरू हुन् । यी महलहरू तप्त घाममा पसीनाको धारा बगाउँदै गरीब श्रमिकहरूले निर्माण गरेका भवन हुन् अनि भवनका इटाहरूलेगरीब श्रमिकका रक्त स्मरण गराउँछन् । यी महलहरूमा दीप जलाएर दीवाली मनाइन्छ यस्तो लाग्छ कि गरीबका रक्त जलिरहेछ अनि आतिशवाजी हेर्दा हाम्रो हृदय द्रवित बन्छ र हाम्रा नानीहरू जिल्ल परेर हेर्छन् :

> साड़े मना दे तारडु त्रुतदे नीं
> जिलिआइ बुम्ब समनइ पर सुट्टाडे नीं
> जिन्हें गी साहड़े गिल्लू बिट बिट देखां
> ओह शइल देयतियां तुंदियां नां

यस दशकमा डोग्री पद्यमा तारा, आवारा र पदमाको तुलनामा मधुकरको योगदान गुण र मात्रामा बढ़ता छ। उनका २६ कविताहरू छापिए—'नमियां मिञ्जां' पुस्तकमा १६ वटा र १० वटा चाहिं संकलन र 'नमिचेतना' मा छन् । यीमध्ये पन्द्रहवटाले सामाजिक र राजनैतिक समस्यासित, अनि अन्य एग्घारह-वटाले प्रेम, मानवता, देशभक्ति, पर्वहरू, खेलमग्न सानी बालिका; चर्खा, पालकी इत्यादिसित सम्बन्ध राख्तछन् । प्रथम वर्गका कविताहरू शब्द बाहुल्यताले संवेदनशीलपूर्ण, नारा-वादी, उपदेशात्मक आदि छन्, जबकि दोस्रो वर्गकाले भाव-गाम्भीर्य र अभिव्यक्तिको सुन्दरता प्रदर्शन गर्छन् । कोहीमा विषादको संगीत छ, कोहीमा कल्पनाको वौल अनि कोहीमा दृष्टिको विस्तृति पाइन्छ। राजनैतिक र सामाजिक विषयहरू सम्बन्धित कविताहरूमा मधुकरले आफ्ना कविता 'पपा आली पुन्ना आली बत्त बखो बख अइ', मा जस्तै आफ्ना विषयहरूमा ऐतिहासिक यथार्थ चित्रण गर्ने प्रचेष्टा गरेका छन् । तिनी सोच्छन्, इतिहास पुनः लेखिनु आवश्यक छ किनकि वर्तमान इतिहास राजा र महाराजाहरूका प्रशंसाले

परिपूर्ण वंशावलीको सूची मात्र हो । यतिञ्जेलसम्म धर्म र अन्धविश्वासका खबटाले आँखा छोपिएका तेल-कलमा बाँधिएका असहाय साँढ़हरू जस्तै मानिस बाँच्दै आएका छन्, तर पुनर्जागरणले सम्पूर्ण राष्ट्रलाई जागृत गराएको छ अनि नयाँ गीत र नयाँ ज्योतिले पुरातन व्यवस्थामा परिवर्तन ल्याउनेछ। यद्यपि पुनर्जागरणको उत्साह पूर्णरूपमा आत्मसात भएको छैन, चेतनाका नया फूलहरू फक्रिएका छैनन् तथापि हावामा नव-सुगन्ध छ र कता कता विद्रोह छ। कवि एकताको आवश्यकताको अनुभव गर्छन् किनकि एउटा एउटा नै हो र एक र एक एग्धारह हुन्छ, पानीका थोपाहरूले नदी बन्छ, कपासको भसिना धागोले लुगा बुनिन्छ अनि माटका टुक्राहरूले पर्खाल बनिन्छन् । सामाजिक परिवर्तनको निम्ति एकता र साहसको आवश्यकता हुन्छ। कविलाई यस्तो लाग्छ कि युद्ध एउटा ठूलो उत्पात हो अनि युद्ध को समयमा प्रेमका पुष्पहरू ज्वाला बन्छन् आमाहरू आफ्ना कोक्रेगीतहरू भूल्छन् अनि मानवताका दीपहरू निभाइन्छन् अनि, त्यसकारण शान्तिको आवश्यकता छ। मधुकर आशावादी छन् र उनी मानवतामा विश्वास राख्तछन्। 'मनुखता' शीर्षक कवितामा तिनी भन्छन् मानवता अनन्त छ, प्रेमको सागर कहिल्यै सुक्तैन अनि मानिसको आशा चिरहरित रहन्छ; तर तिनका कल्पनालाई संवेदनशीलताको वायुले बहाउंछ अनि उनी आकाशको मैदानबाद अन्धकारको शिविर हटाउने सुनौलो सूर्य-किरणमा, मृत्युको आँधीमा दृढ़तासाथ उभिरहने हिमालयको घनतामा, उपासना वा साधनाको ज्वालामा, आशाको चन्द्र-किरणमा, सुगन्धपूर्ण संगीतमय हांसोमा, विधिको क्रोधको विरुद्ध स्थिर आशाको ज्वालामा मानवताको मृत्युहीनताको प्रतिच्छायाहरू देख्छन्। प्रणय विषयक तिनका कविताहरूमा आवेशको तीव्रता र कल्पनाको प्राचुर्यता पाइन्छ। नयनका भाषा बुझ्नु कठिन हुन्छ् तर तिनीहरूबाट उत्पन्न प्रेमको संकेतले मुटुको स्पन्दन तीव्रतर बनाइदिन्छ अनि प्रेमी टाढ़ा हुँदा प्रेमिका दु:खी बन्छे। चूक घोप्टाए झैं अँधेरी रातमा बादलले अग्नि वृष्टि गर्छ, अनि वज्र भयावह हुन्छ, अनि जब हावाले ढोकामा ढकढकाउँछ उसलाई यस्ती लाग्छ कि उसको प्रेमी फर्केर उकहां आएको छ। जब इच्छा अनियमित बन्छ अनि हृदयको ज्वाला निभाउन जब आंसू पर्याप्त हुँदैन तब प्रेममा फँस्नु समस्या अंगाल्नु र हृदयमा रोग उब्जाउनु मात्र हुन्छ अनि प्रेमीद्वारा वियोगिनी एउटी प्रेम-पीडिता को निम्ति नदी, कुक्कु चरा, पपीया, चकोर पक्षीहरू सबै स्नेहले पीड़ित देखिन्छन्। 'जुगे दी आस' मा कोमल वर्णन गरिएको त्यो अञ्चलमा लोकप्रिय रहेको ससाना बालिकाका गुड़ियाका क्रीड़ामा अद्‌भुद् विषाद र जादु छ। आफ्ना माता-पिताका घर त्यागेर जान लागेकी नव-विवाहिता दुलहीको मानसिक स्थितिको वर्णन गरिएको अर्को सुन्दर कविता हो 'डोली।' लुप्त आशालाई जस्तै आफ्ना वक्षमा छोरीलाई समेटने आमा, बाबु, चिरपरिचित आँगन र सड़क, तिनलाई

बोलाइरहेका वृक्षका छायाहरू, तिनीतर्फ फैलिएका लहराहरू सबैनै मधुकरको कवितामा जीवन्त बन्छन्। यस्तो लाग्छ तिनलाई कि त्यो केटीको निम्ति आफ्नै चुरीहरू र नाकको ढुंग्री पनि सांग्ला बनेका छन् अनि उसको यौवन आफ्नै निम्ति शत्रु बनेको छ। आफ्ना नयाँ सम्बन्ध र पुराना नाता र सम्बन्धका तनावको बीचमा उ विक्षिप्त छे:

डोर नमि मन भाई पी बी पहलि तार नेइं त्रुटदि
अगली मंजल आले मारइ, पिच्छलि तांग नेइं छुटदि।
तर यो अपरिहार्य छ, किनकि जीवनको व्यवस्था यस्तै हो।

'छन्न तारे धरत एक समां', मा कवि समाज, देश र मानवताको कोलाहलमाथि सम्पूर्ण विश्वमा एउटै संगीतको अनुभव गर्छन् यो खुबै असल धारणा हो अनि कविले उचितरूपले यसलाई ससाना शब्द-चित्रमा चित्रण गरेका छन्। ताराहरू निदाएका रातको नीरवतामा पृथ्वीले चन्द्र, तारा र पृथ्वीको एकताको गीत गाए झैं लाग्छ। नभका बादल, बादलका अश्रु, पुष्पहरू, मौरीहरू, ढुंगाका शिर-शिरमा संगीत उत्पन्न गराउने खोलाहरू, आवेश र स्नेहले पूर्ण मानिसको हृदय—सब उल्लासमय र प्रणय वेदनाको एउटै गीतमा समाविष्ट छन्। 'बञ्जारा' कवितामा कवि गीतहरूका विक्रेता बन्छन् अनि मानव हृदयमा सञ्चित क्षोभ, आशा, संकेत, सुस्केरा, रोदन, पीढ़ा र स्मृतिहरूले तिनका गीतहरू रचिएका छन्। 'डोली', 'बन्जारा', 'छन्न तारे धरत' र 'भली सुलिया जिन्दा तंगोइ', जस्ता कविताहरूमा विचार, भावना, संगीत, शैली र शब्दहरू र शिल्प र विचारका परिपक्वताका आनन्ददायक समन्वय छ। मधुकरका काव्य शैलीका दुइवटा लक्षण प्रष्ट छन्—कि त तिनी कुनै विषय लिएर विस्तृत वृत्तमा उदाहरणहरूले चित्रण गर्छन्, जसरी स्थिर पानीमा खसाएको ढुंगाले लहर उत्पन्न गर्छ वा त तिनी कुनै विषयलाई विपरीत रूपमा प्रस्तुत गर्ने चेष्टा गर्छन्। कहिले काहीं तिनको संवेदनशीलता र अभिव्यक्तिको मितव्ययीताको कमीले प्रभावलाई नष्ट गर्न पुग्छ, विषय शब्द-बाढ़मा चुर्लुम्म डुब्छ अनि प्रतिमूर्ति संवेदनशीलता र प्राचुर्यतामा नुहाउँछन् जसले साहित्यिक अनुशासनको सीमा नाघेको देखिन्छ।

## ६

लघु कथाको क्षेत्रमा, यो दशकमा सात लघु कथाकारहरू र पांचवटा लघु कथा संकलनहरू देखिए। धर्म चन्द प्रशान्त र कवि रत्नाका एक-एकवटा कथा 'नमिचेतना' मा प्रकाशित भयो, ललिता मेहता, वेद राहि, राम कुमार अब्रोल, मदन मोहन शर्मा र नरेन्द्र खजुरिया प्रत्येकका एकेक कथा संकलन प्रकाशित

भए।

प्रशान्तको कथा 'खीरलि बल' जंघानुको राजकुमार रत्नदेव अनि नदी किनारको मन्दिरबाट आउने रहस्यमय रूवाइको फुस-फुस आवाज बीचमा प्रत्येक २० वर्षमा एक पल्ट आउने जंघानु मन्तिर बहने तावी नदीको भुँवरी अनि हावाको सुस्केरा, त्यही ठाउंमा त्यो नदीको पानी रातो हुने र त्यो क्रुद्ध नदीले एक युगल तरुण-तरुणीलाई बलिको रूपमा खाएको एउटा उपाख्यानको पुनर्कथन हो। त्यहां सधैं एउटा नौका पाइन्छ र त्यसको नाविक ६५ वर्षीय वृद्ध गोकुल छ। कथा यस्तो छ, एक रात गोकूलको एकलौते पुत्र आफ्ना तरुणी पत्नीसित गोकूलकाँ आउँछ, अनि त्यही रात बलिको रात हुन्छ, अनि जब त्यो संकटास्पद मुहूर्त आउँछ तब नदी हुन्हुनाउन थाल्छ, ठीक त्यही समयमा छिमेकी राज्य रसाइलबाट राजकुमारी भगाएर राजकुमार रत्नदेव आइपुग्छ अनि नदीले एक युगल युवक-युवतीलाई खान्छ भन्ने जानेर गोकूलले आफ्ना शरणमा आएका, रसाइलका सैन्यले खेदिरहेका राजकुमार र तिनकी प्रियतमालाई बचाउन गोकुलले आफ्ना छोरा र बुहारीलाई नौकामा बसाएर नदीमा पठाउँछ। यसमा द्विविधा, गोकूलको चित्रणमा चरित्र-चित्रणको एक असल अंश अनि आफ्ना शासकवर्गप्रति प्रजाको सर्वोच्च व्यक्तिगत उत्सर्गमा राजभक्तिको निम्ति आदर्शताको टक छ।

कवि रत्नको कथा 'शेरू' डोग्रा गाउँ र डोग्रा मुखिया र एउटा गाउँलेको कलहको विषयमा छ। त्यो गाउँलेको कुकुर शेरूलाई सबैले प्यारो गर्छ, त्यसले सम्पूर्ण गाउँको रक्षा गर्छ, तर गाउँको मुखियाको क्रोधको शिकार बन्छ। गाउँलेले चौधरीप्रतिको आफ्ना विद्रोहको भावना र रिस व्यक्त गर्न सक्तैन, तर शेरूले चौधरीलाई कहिले पनि मन पराउँदैन र जब त्यसले चौधरीलाई टोकछ, उसले त्यसलाई मार्छ। यसमा सामाजिक असमानताको विरुद्धमा विद्रोह गर्ने अनि समाजको कमजोर वर्गको असहायपनलाई प्रकाश पार्ने एउटा भिन्नै प्रकारको आदर्शता छ।

'सुइधागा' मा संकलित ललिता मेहताका सात कथाहरूले पनि ग्रामिण डुग्गर र त्यहाँका जीवनको निर्धनतासित सम्बन्ध राख्तछन्। यीमध्ये धेरै जसो कथाका पात्रहरूका ससाना खुशी पनि लुटिनु उदेकलाग्दो छ। यी कथाका ग्रामिण आकाश दैवले काली बादलले ढाकिदिएको देखिन्छ। सात कथाहरू मध्ये केवल दुइवटामा मात्र अन्धकारको बादलले ढाकिएको कठिनाइका समक्षमा साहसको सूक्ष्म किरण चम्कन्छ। किरपू एउटा गरीब कृषक, गाउँको मेलामा जान्छ र आफ्ना साथी शिवुबाट २० रु० ऋण लिएर आफ्ना पत्नी प्रीतोको निम्ति एउटा नकली सिल्कको कमिज किन्छ। गाउँमा त्यो कमिज चर्चाको विषय बन्छ, अनि त्यो कमिज विहा-बटुल वा चाढ़मा लगाउने प्रीतोको इच्छा अधुरो रहन्छ; कमिज चोरिन्छ।

छबुको घरेलु सुख र पारिवारिक शान्ति गाउंमा प्रख्यात हुन्छ मनि छबुलाई यसको गर्व हुन्छ तर आफ्ना ढुइ-बुहारीहरू आपस्तमा बाझेको सुनेर उसलाई घात हुन्छ अनि उसको अभिमान मात्र होइन उसको हृदय पनि भांचिन्छ। एउटी गरीब विधवीको निम्ति एउटा मेलाको उपलक्षमा आफ्नो साना नानीलाई खुशी-तुल्या उने इच्छा अलंघनीय पहाड़ जस्तै समस्या बन्छ किनकि उसकी थैलीमा केवल सात पैसा मात्र हुन्छ अनि उ जान्दिन कि त्यतिले नानीको निम्ति गुड़िया किन्तु कि मिठाई। यदि उसले गुड़िया किनिदिई भने नानीको घुमौरी खेल्ने इच्छा उसले कसरी पूर्ण गरिदिन सक्छे र त्यो सत्यता उसले नानीलाई कसरी बताउन सक्छे। उसले नानीलाई मेलामा छोड़िराख्छे अनि विक्षुब्ध बनी घरतिर दौड़न्छे अनि आमा फर्केपछि घुमौरी खेल्न पाउने आशामा नानी उसकी प्रतीक्षा गरिरहन्छ। आफ्नो एकलौते छोरो ठूलो हुनेछ भन्ने आशामा एउटी विधवी बाँच्छे र मनको लड्डु घिउसित खान्छे अनि एक दिन उसकी आठ वर्षीय छोरो गोपूले एक बिटा दाउरा बेचेर ६ पैसा कमाउँछ, तर दोस्रो दिनमा उसको दाउरा कसैले किन्दैन अनि अँध्यारोमा घर फर्कंदा उ आँधीको लपेटमा पर्छ र आँधीद्वारा नदी तटमा फयांकिइन्छ र मर्छ। एउटी तीन वर्षीया बालिका विस्णीको आमा मर्छ र उसकी सानिमाले अत्यन्त कष्ट दिन्छे; उ ठूली भएपछि एउटा अधवैंशे विधुर [राँड़ा] सित उसको विवाह गरिदिन्छे। के गर्न पर्ने हो सो नजानी त्यसले मृत्युलाई आह्वान गर्छे अनि भित्र कोठामा लुकिरहेको समयता एउटा साँपले ठुंदा उसकी मृत्यु हुन्छ। गोपू र विष्णीको मृत्यु केही अस्वाभाविक र योजनायोजित देखिन्छ अनि यस्तो लाग्छ कि लेखिकाले आफ्ना कलम मृत्युको मसीमा चोबेकी छिन् र गोपू, गोपूकी आमा र विष्णीको संसारलाई अलकत्रे कालो रंगले रंगाइदिएकी छिन्।

'बेबु' र 'सुइधागा' कथाहरू आदर्शवादी छन्। बेबु एउटी साहसी आत्म-विश्वासी डोग्रा स्वास्नी-मानिसको चित्रण हो, जसले आफ्ना घर, खेत, वस्त्रहरू, खाद्यहरूलाई माया गर्छे अनि आफ्ना छोराहरू र तिनीहरूका र पत्नीहरूका समस्यामा अल्झि दिन अनि आफैमा यति आत्म-विश्वासी हुन्छे कि अकेली हुंदा पनि उ डाकुर जंगली जानवरहरूसित डराउँदिन। 'सुइधागा' की तारा एउटी आत्म-निर्भरित डोग्रा केटी हो जो कठोर परिश्रम र आफ्ना कलाद्वारा समाजमा प्रतिष्ठा प्राप्त गर्छे। उ धागो र सियोको प्रयोग जान्दछे र तीद्वारा सुन्दर वस्तु-हरू तयार गर्छे अनि उ कलाद्वारा नाम मात्र होइन तर आफ्ना जीविकाको निम्ति सम्मान र धन पनि आर्जन गर्छे।

ललिता मेहताको शैली सरल छ अनि उसकी कथाका भाषा डोग्रा ग्रामिण बोलचालको भाषा छ तर कथानक र चरित्र-चित्रण केही कमजोर छन् अनि उसकी आग्रह यथार्थवादीभन्दा बढ़ी आदर्शवादी छ।

'काले हाथ' नामक वेद राहीका कथा संकलनमा सातवटा कथाहरू छन् । यीमध्ये पाँचवटाका स्थान जम्मु शहरको उपनिवेश वा मोहल्ला छ । तीमध्ये एउटा आंशिक रूपमा शहरमा र आंशिक रूपमा गाउँ छ र अर्कोको स्थान अस्पताल छ । कथाहरूका पात्रहरू विधवी, एउटा वृद्ध मानिस, एउटा काश्मिरी श्रमिक, एउटा शिक्षक, शहरमा विवाह भएकी एउटी ग्रामिण युवती र त्यसकी स्नेहको भोको भाइ अनि आफ्ना काला हातहरूका मनोवैज्ञानिक विकार ग्रस्त एउटी नारी डाक्टर छन् । प्रत्येक पात्र वा पात्राले आफ्ना सामाजिक स्थितिबाट उत्पन्न समस्या आफूभित्र वहन गर्छ अनि कथानकको विकासले समस्याको गाँठो फुकाउँछ ।

'मुन्ना दा कुर्ता' कथाकी विधवीलाई सदैव हँसिली र सुखी देखिन्छ, यस्तो लाग्छ कि आफ्ना विधवीपनमा उ दुःखी छैन । तर उ आफ्ना नातीलाई आफू नजीक आउन दिदिन अनि बुहारीले त्यो नातीलाई आफ्ना छेउमा राख्दा उ दुःखी बन्छे र रिसाउँछे । यो नातीको मृत्युसंगै उसको आनन्द र सुखको श्रोत अचानक शुष्क बन्छ ; उ मुर्झाउन थाल्छे र पगली स्त्री झैं बोल्न थाल्छे । कथाले नातीको निम्ति स्वास्नीमानिसको प्रेम प्रकट गर्छ । तात्तुलाई उसको गाउँमा सबैले आदर गर्छन् र सबै उसित डराउँछन् किनकि मानिस सम्झन्छन् कि उसित प्रशस्त धन छ । तर, वास्तवमा उसित धन हुँदैन; उसले केवल स-साना ढुंगाहरू केही बाकसमा भरेको हुन्छ अनि उसित रूपियाले भरिभराऊ बाकसहरू छन् भन्ने मानिसहरू सम्झन्छन् । त्यो भ्रम हटेपछि उप्रतिको सम्मान र भय लुप्त बन्छ । आफ्ना छिमेकी काश्मिरी श्रमिक हातोको छोराप्रति तोशीको हृदयमा दया र सहानुभूति जाग्छ अनि उसले बाबुको पिटाई पाउँदा उ [तोशी] आफ्ना विछ्यौनामा बेचैन बन्छे । एक दिन उसले त्यो श्रमिकको छोरालाई एउटा सानो काम गराउँछे, तर त्यो कामको ज्याला उसले दिदिन उसको बाबुले उसलाई रूपिया नलिनु भनेको हुन्छ अनि तोशी चाहृदिन कि उसले फेरि पिटाई पाओस । अनि आफ्नो परिश्रमको उचित पारिश्रमिक स्वीकार नगरेकोमा त्यो केटोले पिटाइ पाएकोले उसलाई घात हुन्छ । 'चिट्ठ' कथाका रत्ना आफ्ना पतिप्रति सन्देह गर्न थाल्छे जसले एउटी तरुणी केटी कान्तालाई ट्युशन पढ़ाउँछ अनि इंगित आवाजमा कान्ताले विनोदी वार्ता गर्दा शिक्षकको हृदयमा पनि शंका दृढ़ बन्छ । कान्ताले उसकी भाइलाई प्रेम पत्र लेखेकी कुरो आफ्ना पत्नीबाट शिक्षकले थाहा पाएपछि कथाको विकाससितै यो सन्देह लोप हुन्छ । 'काले हाथ' कथाकी निशा बाल्यकालदेखि नै आफ्ना काला हातहरूका मनोवैज्ञानिक विकारले ग्रस्त हुन्छे, उसकी काला हातहरूका कारणले नै उसकी सखीले आफ्ना पुरुष गुड़ियासित निशाकी स्त्री-गुड़ियाको विवाह गरिदिदिन अनि आफ्ना काला हातहरूका कारणले आफ्नै विवाह पनि हुन नसकेको अनि स्थिति बचाउन बेहुलाले उसकी बहिनीलाई विवाह गरेकोले त्यो विकार अझ

गम्भीर बन्छ। आफूलाई विवाह गर्न अस्वीकार गर्ने त्यो व्यक्तिलाई उसले ती काला हातहरूले नै बचाउँछे। 'वेहनू दे घर' कथाको गोपीको हृदयमा शहरमा विवाह भएर जाने बहिनीप्रति धेरै माया हुन्छ अनि बहिनीको घर जाँदा स्नेह विषयको भ्रम चकनाचूर बन्छ। 'लेहरां' कथाले प्रेम र घृणाको बदलँदो प्रवाह प्रदर्शित गर्छ। दुइ जना नानीहरू झगड़ा गर्छन् अनि विनीहरूका झगड़ाको लहर विनीहरूका आमासम्म पुग्छ अनि उनीहरूले त्यो कुरो आफ्ना लोग्नेहरूलाई सुनाउँछन्, जो दाज्यू-भाइ हुन्छन् अनि तिनीहरू परस्पर पृथक बस्ने निर्णय गर्छन्। तर, फेरी आफ्ना नानीहरू मिलेर खेलेको देखेर त्यो लहर साम्य हुन्छ र तिनीहरू आफ्ना विचार परिवर्त्तन गर्छन्।

वेद राहीको भाषा ग्रामिण छ र तिनको शैली कथाको कथानकको विकास र पात्र-पात्राका चित्रणसित उपयुक्त छ। एक जना खुबै उदीयमान लघु-कथाकारको रूपमा'वेद राहीलाई टड्कालो पार्ने विशेषताहरू गम्भीर मानवतावाद, मनोवैज्ञानिक अन्तर्दृष्टि र शिल्पको परिपक्वता हुन्।

रामकुमार अब्रोल, मदन मोहन र नरेन्द्र खजुरियाका कथाका स्थानाधार मूलत: डोग्रा गाउँ छ अनि विषयको प्रतिवादनमा संवेदनशीलता र आदर्शवादको धसी छ जुन 'आत्म सम्मानको मूल्य', 'देशभक्तिको ऋण', 'पाइला छाप', 'भूमि-पुत्री' आदि कथाका शीर्षकमा देखन सकिन्छ। मदन मोहनको वर्णनमा ग्रामिण भूखण्डका प्राथमिक ज्ञानको न्यूनता पाइन्छ। खजुरियामा अभिव्यक्तिको आनन्द र शब्दानुभूति पाइन्छ। अब्रोल अन्य दुइ जनाभन्दा बढ़ी आदर्शवादी र नीतिज्ञ छन्। तीनै जनाले सामाजिक सचेतता र सुधारगत औत्सुक्य प्रदर्शित गर्छन्।

अब्रोलको एउटा कथाले जमीनको बण्डासित सम्बन्ध राख्तछ जसमा एउटी वृद्धा स्त्रीको आफ्ना जमीनप्रतिको माया देखाइएको छ। उ र उसकी बुहारीको निम्ति तिनीहरूका जमीन सबकुछ हुन्छ अनि नातीहरूले जमीन बण्डा गर्दा उ एउटा डाँड़ाबाट हाम फालेर आत्म-हत्या गर्छे। उसकी मृत्युबछि नातीहरूलेआफ्ना भूल थाहा पाउँछन् अनि जमीन एक गराएर मिलेर कमाउना थाल्छन्। बाह्य रूपमा रुष्ट र अवरोधक भए तापनि मित्र कोमल र भेद्य हृदय हुन सक्छ भनी देखाउने एउटा असल कथा हो 'बांकां पहलवान'। आफ्ना शत्रुसित मंगनी गरिएको एउटी युवतीको सौन्दर्यले उसको हृदयको द्वेष र घृणा लोप गराइदिन्छ र उसलाई करुणामय बनाइदिन्छ। 'गहरटू दा मुलल' ले ५० वर्षीय साहूको घृणित इच्छाका पृष्ठभूमिमा स्नेह र आत्मसम्मान र नीच कर्मका विरोधमास वर्णन गर्छ। श्रमदान-द्वारा खेतलाई बाढ़देखि बचाउने विचार 'पैरें दे निशान' कथामा छ। आफ्ना छिमेकीको सहायताले आफ्ना खेत उद्घर्षणबाट बचाउने संकल्प गर्छ रामु, तर उसलाई बाढ़ले बगाउँछ। तैपनि उसले आरम्भ गरेको काम गाउँका अन्य जनता-बाट पूर्ण गरिन्छ। उसले देखाएको मार्गमा हिंड़ेर उसले त्यो काम पूर्ण गर्छ।

अन्तिम वर्णित कथाको नाम शीर्षक पुस्तकको कथाहरूका विषय जमीनको महत्व, तिनका सुदृढ़ीकरण र विकास छन् ।

'खीरला म्हान्' मदन मोहनका छ कथाहरूका एउटा संकलन हो एउटै घरमा बस्ने दुइ दाज्यू-भाइका पत्नीहरूका पारिवारिक कलहको जीवन्त पुनर्कथन को एउटा कथालाई छोड़ेर अन्य कथाका विषयहरू उद्देश्यपूर्ण छन् जुन डोग्रा जीवनमा गुंथिएका घटनाहरू र दृश्यहरूले प्रकट गर्छन् । कथाको बुनाइ खकुलो छ अनि अन्त्य ठीकसित कसिएका छैनन् । 'प्रासिवत' विवाह टारिएको अनि यसको जिम्मावारीहरू र आनन्द समेटेका विवाहसित सम्बन्धित छ । साधु जस्तै जीवन भोग्ने पुन्नू चाचा अनि एउटी विधवी रत्नो बासी पारम्परिक मान्यताका जीवन भोग्छन् । एक दिन तिनीहरू अरुका निन्दा र आलोचनाका वास्ता नगरी विवाह गर्ने निश्चय गर्छन् । यो निर्णयमा तिनीहरू जीवनको नया मान्यता अंगाल्छन् जसले तिनीहरूलाई नयाँ धैर्य र नयाँ आशा प्रदान गर्छ । 'भन्द' सबैलाई हँसाउने ग्रामिण हजामको एउटा कथा हो जसलाई गाउँका गम्भीर शिक्षकले मानवता, मानवको इतिहास र मानवको महानताका विषयमा लामो व्याख्यान दिन्छ । 'खीरला म्हानूं' संवेदनशीलपूर्ण छ; कथाकी मूल पात्राले देशको स्वतन्त्रताको निम्ति गाउँ-गाउँमा प्रचार गर्ने उसकी युवा सुन्दर वीरको प्रतिमूर्ति आफ्ना पुत्रमा देख्छे, जसको स्मृति उ सजाउँछे, यो संसारबाट कष्ट र दरिद्रता हटाउने उसको सपनाहरू पुत्रले पूर्ण गरिदिने आशा गर्छे । सकोलड़ेको शान्या आफ्ना ससुरालीको घरबाट कोसेलीको प्रतीक्षा गर्छे, गाउँमा विहा भएर गएकी बहिनीलाई उ ईर्ष्या गर्छे जसलाई चाढ़को उपलक्षमा ससुरालीबाट एउटा राम्रो उपहार पठाइदिएको हुन्छ । यस्तो लाग्छ कथाकार जीवनको नवीन मान्यतामा पुग्न चाहन्छन् तर ती सबै सामाजिक व्यवस्थाको सुदृढ़ पर्खालको विरुद्धमा ठोकिएर चकनाचूर बन्छन् र लुप्त हुन्छन् ।

"कोले दियां लीक्रां" नामक नरेन्द्र खजुरियाको लघु कथा संकलनमा पनि छ कथाहरू छन् । छ वटाकै क्षेत्र डोग्रा ग्रामिण समाज छ जसमा धनको महत्वले अद्भूत कौशल देखाउँछ र विभिन्न कथाका सूत्रलाई अघि बढ़ाउँछ । 'कोले दियां लीक्रां' कथामा एउटी तरुणी छोरीलाई उसकी माता-पिताले पश्चातापको एउटा सम्म आभास र छोरीको माया बिनानै ३०० रु० मा बेचिदिन्छन् । आमा सोच्छे छोरीको मूल्य ३०० रु० सस्तो भयो र बाबु सोच्छ यदि यो केटी अरू कोहीसित भागेकी भए ३०० रु० पनि ठगिने थियो । 'धरती दी बेटी' मा ५०० रु० को ऋणले रमी र उसकी परिवारको जीवन दुस्स्यह बनाइदिन्छ । घरदेखि टाढ़ा सेवारत पतिले प्रति महीना पठाएको रुपियाबाट उसले केवल २० रु० मात्र दिएर टार्छे । गाउँको साहूकां तिनीहरूका जमीन बन्धक राखिन्छ । आफ्ना दुइ नानी-हरूलाई सासूसित छोड़िराखेर उ शहरको कुनै परिवारकां काम गर्न जान्छे अनि

दुइ वर्षपछि ५०० रु० लिएर घर फर्कन्छे जुन रकमले उसले साहूबाट आफ्ना जमीन छुटाउँछे। 'एहसदे बसदे लोक', मा गाउँकी युवतीलाई सासू र नन्दहरूका निन्दाले दुःखीनी तुल्याउँछ, किनकि उसकी आमा गरीब विधुवी हुन्छे जसले धनी परिवारका अन्य बुहारीहरूलाई जस्तै आफ्नी छोरीलाई कोसेली पठाइदिन सक्तिन। आमाले पठाइदिएकी घरमा बुनेको वस्त्र, वयरहरू र लौकाले तिनीहरूलाई केही प्रभाव पार्दैन, अनि केवल उपहास प्राप्त गर्छ। 'की फुल बनी गे अंगारे' मा, उच्च शिक्षालाभ गर्न चाहने एउटा बुद्धिमान केटो, फकिरूले आफ्नो अध्ययन जारी राख्न सक्तैन किनकि बाबुले लिएको ऋण तिर्न उसले साहूको घरमा काम गर्न पर्छ। 'दिनवार' की भागां साहूको ऋण तिर्ने प्रक्रियामा मर्छे अनि उसकी परिश्रम र समय बाहेक उसकी एउटै छोरो पनि साहूकां जान्छ। धन र उच्च जातको मात्र मर्यादा राख्ने, जात-पात ग्रस्त कट्टर समाजमा एउटा पछौटे गरीब समुदायका 'परमेशरा दी करनी' को गुलबुले उसकी पिताको आशाहरू धराशायी बनाइदिन्छ र मर्छ। यी कथाहरूमा यत्र-तत्र विवेचनीय बदलँदो समाजका चिन्हहरू 'कालो बादलमा चाँदीको घेरा हुन्छ' भन्ने उक्ति जस्तै उत्तम दिनका संकल्पसहित प्रकाशमान देखिन्छन्। 'हसदे वसदे लोक' कथामा अरूले एउटी ग्रामिण युवतीको भावनालाई बुझ्न नसकला र उसकी आमाले पठाइदिएकी ग्राम्य कोसेलीलाई पनि प्रशंसा नगर्ला तर उसकी पतिले तीहरूलाई प्रशंसा गर्छ र उसकी भावनालाई बुझिदिन्छ र केही दिनमा नै शहरका कोसेलीका महत्व पनि लुप्त हुन्छ। 'कोले दियां लीकरां' की मायाकी माता-पिता उसकी निम्ति मातृ-पितृस्नेहहीन र अविवेकी हुन सकलान् तर उसले स्नेहमय र समझदारी पति पाउँछे। गुलबु समाज परिवर्तन गर्न समर्थ हुन नसकला तर उसले आफ्ना केही छात्रहरूका हृदयलाई जित्छ। धरती-पुत्रीको साहस अरूका निम्ति प्रेरणादायी उदाहरण हुन्छ। 'दिनावार' को साहू र उसको पुत्रले मुर्कुको भोटको मूल्य बुझ्न नसकला तर उ वृद्ध भइसकेको समयसम्म अत्यधिक रूपमा समय परिवर्तन भइसकेको हुन्छ। फकिरूलाई शिक्षा लाभदेखि वञ्चित गराइयो होला तर आउने दिनहरूमा उसको बुद्धिले उसलाई दलितवर्गको नेता बनाउन सकला।

साधारणदृष्टिमा सबै कथाहरू चाखलाग्दा छन् अनि भाषामा गेयता छ अनि ठाउँठाउँमा अलंकार र उपमाद्वारा सज्जित असल बुनोट छ। ठाउँ-ठाउँमा संवेदनशीलता र भाषिक सजावटका अंशहरू छन् जसले कथाका गतिलाई मन्द पारिदिएको छ। कथाकारले यत्र-तत्र आफ्नै विचार र भावनाले बुर्कुसी मार्ने प्रवृत्ति दर्शाएका छन्, यसरी तिनले कथाको अन्तर्गठन र गतिलाई हानि पुर्याएका छन्।

७

अघिल्लो दशकमा केवल एउटै मात्र नाटक लेखिए र मञ्चित गरिएको थियो अनि यो 'बावा जित्तु' थियो। तर, यी नाटक कहिल्यै छापिएन। यो दशकमा धेरैवटा रेडियो नाटकहरू लेखिए अनि प्रसारित गरिए अनि तीमध्ये दुइवटा छापिए। ती रामनाथ शास्त्रीको 'बरोबरी' र प्रशान्तको 'देवको जनम' थिए। मञ्चनको निम्ति लेखिएका दुइवटा नाटकहरू पनि यो दशकमा प्रकाशित भए अनि ती थिए रामनाथ शास्त्री, दीनू पन्त र अब्रोलले संयुक्त रूपमा लेखेका 'नमाग्रां' अनि वेद राहीको 'धारें दे अत्थारू'। यसरी डोग्री साहित्यमा अन्य दुइ विधाहरू थपिए—रेडियो नाटक र मञ्च-नाटक।

चारवटा प्रकाशनहरूमध्ये 'देवका जनम' सबैभन्दा सानो र हलुका छ। यसमा पदमा पुराणमा वर्णित देवका खोलाको जन्मकथामा आधारित, त्यस अञ्चलमा लोकप्रिय भएको कथाबाट नाटक गठन गर्ने प्रयास गरिएको छ। तर नाटकमा नाटकको मुख्य तत्वका अर्थात् संघर्ष वा तनाव, मानव चरित्र रकथानक। को न्यूनता छ। कथा यस्तो छ। चेनाहिनीको एउटा ठाउँमा शौनक र गोमुखमा आफ्ना दुइ शिष्यहरूका सहायताले ऋषि कश्यप एउटा यज्ञको बन्दोबस्त गर्छन्। यो स्थान शुधान्त नामक राक्षसको सीमाभित्र पर्छ। कठोर तपस्या र आराधना पश्चात शुधान्तले भगवान शिवबाट यस्तो वरदान पाउँछ कि उसलाई कसैले पनि मार्न सक्तैन अनि यो आश्वासन उसले सदैव सम्झन्छ। उसले ऋषि कश्यपलाई यज्ञ गर्न रोक्छ। कश्यपले आफ्ना दुइ शिष्यहरूलाई शिव र पार्वतीकां पठाउँछन्। तिनीहरू गएर पार्वतीलाई भन्छन् कि उनको जन्म-स्थान र विवाह-स्थानमा यज्ञ गर्न शुधान्तले बाधा दिइरहेको छ। पार्वती चेनाहिनीमा आउँछिन् अनि शुधान्तलाई हाँक दिन्छिन्, जो आफ्नो काममा अडिग रहन्छ। शुधान्तमाथि पार्वतीको त्रिशुलको प्रहार बेकार बन्छ अनि उसलाई सहायता प्रदान गर्न उसलाई [शुधान्त] मार्न शिव आउँछन्, जो आफ्ना प्रभूको हातद्वारा मारिइन आनन्दित हुन्छ। कश्यपले पार्वतीलाई एउटा नदी बहाइदिन बिन्ती गर्छन् अनि पार्वतीले आफ्ना त्रिशुलले जमीनमा हिर्काउनसाथ एउटा नदी बहन थाल्छ, जसलाई शिवले 'देवका' नामकरण गरिदिन्छन्। पार्वती त्यो ठाउँलाई महादेव नामकरण गर्न इच्छा गर्छिन् तर शिव आफ्ना नाममा आफ्ना भक्तको नाम जोड्छन् अनि त्यो ठाउँ 'शुद्ध महादेव' भनी कहलाइन्छ। यो 'शुद्ध महादेव' को मन्दिर र यसको छेउबाट बग्ने 'देवका' नदीको उपाख्यान हो। प्रथम दृश्यमा यज्ञको बन्दोबस्त र बन्दोबस्तको क्रममा शुद्धांतको बाधा देखाइन्छ। दोस्रोमा शिवलोकमा कश्यपका शिष्यहरूले पार्वतीलाई भेटेको देखाइन्छ अनि तेस्रो दृश्यमा, पृथ्वीमा शिव र पार्वतीका अवतरण, शुधान्तको मृत्यु र देवकाको जन्म देखाइन्छन्। शिव र पार्वती मानव

पात्र-पात्रा होइनन् अनि यदि हामीले शुधान्तलाई मानव मान्यौं भने ऋषि कश्यप र शुधान्तको बीचको संघर्षलाई नाटकको मूल विषय मान्न सकिन्छ। तर शुधान्तको विरोध केवल शिवको हातद्वारा मुक्ति प्राप्त गर्ने एउटा बहाना मात्र हो, अनि नाटकमा उसको विरोधको कुनै अन्य व्याख्या गरिएको छैन न ता विरोधको विकास नै देखाइएको छ। नाटकको अग्रगतिसंगै शुधान्त वा कश्यपका चरित्रमा प्रगति छैन।

'बरोबरी' मा वर्णित सामाजिक स्थितिमाथि धेरै नाटकहरू छन्। एउटा डोग्रा गाउँमा स्थित पाँचवटा लघु दृश्यहरूमा सामाजिक असमानताका विषयहरू रोचक संवादमा लेखिएका छन् जसले चरित्र चित्रणमा सहायता पुरयाउँछन्। गियां चाँद र गन्धर्भुले दुइ स्तरका समाजलाई प्रतिनिधित्व गर्छन्, एउटाले जमीन्दारलाई र अर्कोले रैतीलाई प्रतिनिधित्व गर्छन्, एउटाले सम्पन्न व्यक्तिलाई र अर्कोले कृषकलाई प्रतिनिधित्व गर्छ। यो सत्य हो कि बाल्यकालमा तिनीहरू सँगै खेल्थे, तर सामाजिक वैभिन्यताले तिनीहरूका जीवन र हृदयलाई पूर्णरूपले पृथक गराउँछ। गियां चाँदले बौद्धिक तरूमा विचार्छ कि मानव सबै समान हुन्। तर उसले यथार्थ जीवनमा यस्तो समानता देख्तैन। उसकी सानी छोरीले पनि उसले जस्तै सोच्छे। गन्दर्भूले देख्छ कि एकातिर कोही नेताहरू मानवको समानताको बात गर्छन् र त्यस विषयमा वक्तृता दिन्छन्, तर वास्तवमा समानता छैन अनि नेताहरू श्रमिकहरू र कृषकहरूसित बस्दैनन् अनि तिनीहरूका खाद्य खाँदैनन्; तिनीहरूका निम्ति पृथक खाद्य तयार गरिन्छन्। भनाइ र गराइको बीचमा विचार र कार्यवाहीको बीचमा दुइ विभाग छ। ती दुइका बीचमा तनाव र संघर्ष छ। पुराना मान्यता र नया मान्यता स्थित ग्रामिण वातावरणको पृष्ठभूमिमा जीवनको यथार्थता प्रस्तुतिकरणमा सबै पात्रहरूले सहायता गर्छन्। यतिसम्म कि गन्दर्भुका सानो छोरो देवुर गियां चांदकी सानी छोरी उषाले पनि विषयको विकासमा योगदान दिन्छन्।

'नमग्रां' को विषयले पनि पुराना स्थापित सामाजिक व्यवस्थासित जीवनको नयाँ मान्यातको संघर्ष प्रस्तुत गर्छ। तर नाटक उति सफल हुन सकेको छैन। कथानकको गति यति धीमा छ कि यसको विकाससंगै तनाव शिथिल बन्छ। पात्र-पात्राहरू आन्तरिक अनिवार्यताले गतिमय बन्न र आफ्ना जीवन भोग्नुको सट्टामा लेखकको विचारको वाहन मात्र बन्छन्, जो नाटकको आधारभूत तत्वमा विस्तृतिद्वारा ग्रामिण सुधारका विषयलाई नाटकीय स्वरूप प्रदान गर्न असफल छन्।

नाटकको मूल पात्रा लाजो हो। आरम्भमा उ नाटकको नायक माधोदेखि टाढ़ो हुन्छे। तर, नाटकको अन्ततिर उ नायकको सन्निकट बन्छे। उसको हृदयको गति र स्नेहले नाटकलाई केही गति प्रदान गर्छ। नाटकको गतिको दोस्रो लहरमा गाउँमा विकास समावेश छ। आरम्भमा, हामी गाउँको कुवालाई नराम्रो

अवस्थामा पाउँछौं, त्यसपछि माधोले यसलाई विकसित तुल्याउँछ अनि उसको प्रेरणामा विकासका अन्य कार्यहरू गरिन्छन्। विपरीत गतिको प्रतीकस्वरूप पात्र छ सन्तु अनि यी दुइ विरोधी गतिहरूका बीचमा कथानकको विकासमा सीला र बांका साधनगत छन्। यी गतिहरूमा लाजोका पिनाले अंश ग्रहण गरे तापनि उ अलग्ग रहन्छ। संवेदनशीलता, निरर्थक शब्द प्रयोग र सुधारको सफलताको चाहनाले नाटकको सम्प्रेषनीयताको एकाइलाई नष्ट गरिदिन्छ।

शिल्पको दृष्टिले 'नमाग्रां' भन्दा 'धारें दे अत्थ्रू' बढ़ी सफल छ। यो नाटकले डोग्रा गाउँहरूमा वर्तमान कुप्रथा अर्थात् साटासाटद्वारा विवाह प्रथासित सम्बन्ध राख्तछ अनि कमभन्दा कम पात्रहरू र कमभन्दा कम संवाद लिए र सरल कथानक स्वाभाविकरूपमा अघि बढ़छ। कुनै पात्र वा सम्वादको वाक्य अत्यधिक छैन। अवस्थान उपयुक्त छ, चरित्रको प्रकटिकरण र कथानकको विकासमा सम्वाद स्वाभाविक र सहयोगी छ। अनि तनाव विस्तारै चुड़ान्त बन्छ जसलाई अचानक भएको देखिन्छ। प्रथम दुइ दृश्यमा गति धीमा छ, तेस्रो र अन्तिममा शीघ्रतर बढ़छ जसमा कि दर्शकले यता-उति हेर्ने र प्रश्न गर्ने समय पाउँदैन। यो नाटकमा पनि आदर्शवाद र उद्देश्यको एउटा तत्व छ तर यो अवगुण्ठित छ अनि 'नमाग्रां' मा जस्तै स्पष्ट घोषित छैन। यहाँ लेखकले आफ्ना सामाजिक उद्देश्यलाई सृजनात्मक कलाको आवश्यकताको अधीनस्थ गराएका छन् अनि समस्यालाई कल्पना र साहित्यिक नियन्त्रणसित योजनाबद्ध गरेका छन्।

८

अघि बताए जस्तै, पद्य अनुवाद बाहेक यो दशकमा तीनवटा गद्य अनुवादहरू पनि छापिए। यो दशकको प्रारम्भिककालमा संस्कृत 'दुर्गा सप्त शति' को कृपाराम शास्त्रीको डोग्री अनुवाद प्रकाशित भएको थियो अनि दुइ वर्षपछि, डोग्रा मण्डल, जम्मुले 'श्री सत्यनारायण व्रत कथा' को एउटा डोग्री अनुवाद प्रकाशित गरयो। त्यही वर्ष, डोग्रा मण्डलले देवान कृपारामको एउटा फारसी पुस्तक 'गुलाबनामा' को, राओ रत्तन सिंह र किस्नु पन्तद्वारा अनुदित, एउटा डोग्री अनुवाद प्रकाशित गरयो। यी अनुवादहरूले पाँच दशकको प्रारम्भिक कालको डोग्रा सूक्ष्मबोधमा दुइवटा तत्वहरूलाई निर्देश गर्छन्—पौराणिक हिन्दु धर्ममा गहीरो विश्वास अनि डोग्रा बीर गुलाब सिंहको सैनिक प्राप्तिमा गर्व।

'श्री दुर्गा सप्त सती' १३ सर्गमा ७०० श्लोकहरूका संकलन हो जसमा भगवतीका विविध स्वरूपका प्रशंसाका गीतहरू गाइएका छन्। पुस्तकमा संस्कृतको मूल श्लोकहरू छन् र प्रत्येक श्लोकको मन्तिर त्यसको डोग्री अनुवाद छ। 'श्री सत्यनारायण व्रत कथा' ले पूजाको वर्णन गर्छ अनि मूल संस्कृत मन्तिर डोग्री अनुवाद दिइएको छ।

डोग्री 'गुलाबनामा' प्रथम भाग, मौलिक फारसीको अंशको अनुवाद हो। यो केवल ३० पृष्ठको छ र यसले लाहोरका महाराजा रणजित सिंहलाई गुलाब सिंहले सेवा मागेको अवधिसम्मको महाराजा गुलाब सिंहको परिवारसित सम्बन्ध राख्तछ।

९

यो दशकमा एउटा त्रयमासिक पत्रिका प्रकाशित गर्ने प्रयास गरिएको थियो अनि जुलाइ १९५३ मा डोग्रा संस्था, जम्मुको सहयोगमा डोग्रा मण्डल, दिल्लीले 'नमिचेतना' शीर्षकमा प्रथम अंक प्रकाशित गरयो। सम्पूर्ण रूपमा डोग्रीमा यस्तो पत्रिका रुचिकर हुन नसकला भन्ने शंका थियो। त्यसकारण, प्रथम अंकको ४८ पृष्ठमा २५ पृष्ठ डोग्रीमा, १६ पृष्ठ हिन्दीमा, र ७ पृष्ठ अंग्रेजीमा थिए। ५२ पृष्ठको दोस्रो अंकमा ३३ पृष्ठ डोग्रीमा, नौ हिन्दीमा र अंग्रेजीमा ६ पृष्ठ थिए। तेस्रो अंकमा ३२ पृष्ठ डोग्री, १० हिन्दी र अंग्रेजीमा ६ पृष्ठ थिए। तेस्रो अंक पश्चात, प्रशस्त ग्राहकहरूका कमी र पत्रिकाले क्षति वहन गर्न परेकोले यसको प्रकाशन बन्द भयो। यो दशकको अन्तिम वर्षतिर, लामो अन्तराल पश्चात्, यो पत्रिकाको चौथो अंक जम्मुबाट प्रकाशित गरियो। यसको ३८ पृष्ठ डोग्रीमा, दुइ हिन्दीमा र तीन अंग्रेजीमा थिए। यो दशकमा यो पत्रिकाको अन्तिम अंक यही थियो।

यो पत्रिकाद्वारा डोग्री लोक साहित्य अनि हिन्दी र अंग्रेजीमा प्रकाशित डोग्री कला, भाषा र साहित्य विषयक डोग्री लेखन र रचनाहरू प्रस्तुत गर्ने प्रयास गरिएको थियो। जनसाधारणमा डोग्रीप्रति रुचि सृष्टि गर्ने अनि डोग्री लेखनको निम्ति प्रेरणाको वातावरण सृजना गर्ने हेतुले यो पत्रिकाको पृष्ठहरूमा लेखकहरूलाई स्थान दिइन्थ्यो अनि डा० सिद्धेश्वर वर्माको डोग्री भाषा विषयक खूबै उपयोगी रचनाहरू र डोग्री कला, डोग्री तीर्थस्थानहरू र डोग्री साहित्यिक रचनाहरू सर्वप्रथम यो पत्रिकाको पृष्ठहरूमा देखिए। यो पत्रिकाले डोग्री साहित्यको प्रगतिमा केही हदसम्म सहयोग प्रदान गरयो।

१९५४-५५ मा कांगड़ा सेवक सभा, दिल्लीले आपना वार्षिकीको दुइ वा तीन अंकहरू प्रकाशित गरयो जसमा हिन्दी र अंग्रेजीमा रचनाहरू थिए। यसले मातृभाषामा लेख्ने उत्साह प्रदान गरयो र डोग्री लोक साहित्य विषयक निबन्धहरूका निम्ति पुरस्कारका घोषणा गरयो। पत्रिकाको १९५५ को अंकमा डोग्री लोक गीत र उखानहरू हिन्दीमा लेखिए। यो अंकमा ललितका दुइ कविताहरू डोग्रीमा थिए। यो पत्रिकाको प्रकाशन पनि चाँड़ै बन्द भयो, तर यसले कांगड़ाका डोग्राहरूमा आपना मातृभाषाप्रति रुचि सृष्टि गर्न सहयोग पुरयायो अनि यसले लोकगीत संकलन र केही कविता लेखनमा प्रेरणा प्रदान गरयो।

अध्याय ६

# १९६० तिरका डोग्री लेखन : विकासका वर्षहरू

१९६० का वर्षहरू डोग्रीको निम्ति प्राप्तिको महत्वपूर्ण मापका वर्षहरू थिए जसलाई अगष्ट १९६९ मा साहित्य अकादमीले एउटा स्वतन्त्र आधुनिक साहित्यिक भाषाको रूपमा मान्यता दियो। यो दशकमा अरू पनि केही मुख्य विकास र घटनाहरू घटे जसले डोग्री साहित्यको विकासमा सहायता र स्वरूप प्रदान गरयो।

जे एण्ड के एकाडेमी अफ आर्ट, कल्चर एण्ड ल्यांग्वुएजेस्ले डोग्री प्रकाशनमा बढ़ी रुचि लिन र बढ़ी सहयोग प्रदान गर्न शुरू गरयो फलतः अघिल्लो दशकमा-भन्दा यो दशकमा पुस्तकहरू दोबर संख्यामा प्रकाशित भए। यसले आफ्ना प्रकाशनको गतिविधि विस्तार गरयो अनि डोग्री लोक-गीत, लोक-कथा, उखान र वाग्धाराका संकलन, डोग्री लेखनका चयन र ६ महीने पत्रिका 'शिराजा' प्रकाशित गरयो। यसले डोग्री लेखकहरूलाई प्रकाशन सहयोगको रूपमा आर्थिक सहयोग प्रदान गरयो, तिनीहरूका कृतिहरू प्रकाशित गरयो अनि केही चयनित पुस्तकहरूका अनुवादका निम्ति लेखकहरूलाई नियुक्त गरयो। यसले प्रलोभनको रूपमा यो भाषामा प्रकाशित सर्वोत्तम पुस्तकहरूका निम्ति पुरस्कारका स्थापन गरिदियो।

जम्मु र काश्मिर सरकारले प्राथमिक श्रेणीहरूमा शिक्षाको माध्यम डोग्रीमा आरम्भ गर्ने वांछालाई मान्यता दियो अनि जम्मु र काश्मिर विश्वविद्यालयले तिलक, प्रवीण र शिरोमणि नामक डोग्री प्रवीणताका तीनवटा परीक्षाहरू स्थापित गरयो। यसले केही डोग्री पाठ्य पुस्तक तयारीमा योग गरयो, डोग्री पाठक-ग्राहक वृद्धि गरयो र डोग्री प्रकाशनको विक्रयमा वृद्धि गरायो।

१९६२ मा, भारतीय सीमामा चीनिया आक्रमण रपछि १९६५ मा भारत-पाक युद्धले डोग्रा जन-जीवनमाथि गम्भीर प्रभाव पारयो अनि डोग्राहरूका सामरिक उत्साह र गुप्त गर्वलाई र तिनीहरूका देशभक्तिको चेतनालाई स्पर्श गरयो जुन यो अवधिको तिनीहरूका लेखनमा व्यक्त छ।

डोग्री संस्थाले डोग्री लेखकका प्रथम सम्मेलन आयोजना गरयो जसमा डोग्री भाषा र साहित्यका क्षेत्रमा प्रगतिको लेखा-जोखा गरियो र गत २० वर्षका प्राप्तिका आलोचना गरियो।

दिल्लीमा भएका डोग्राका समस्त सांस्कृतिक र सामाजिक संस्थाहरूले 'डोग्रा हिमाचल संस्कृति संगम' नामक एउटा संयुक्त संस्था गठन गरे। यो संस्थाले सम्पूर्ण डुग्गर क्षेत्रका डोग्राहरूलाई एउटै मञ्चमा एकत्रित बन्न र यो क्षेत्रको भाषिक र सांस्कृतिक स्वरूप स्थापित गर्न सहायता गरयो। हिमाचल प्रदेशमा पंजाबको डोग्री-भाषी क्षेत्रको विलयनलाई यो संस्थाले 'हिमाचल स्मारिका' अंक प्रकाशित गरेर स्वागत गरयो जसमा डोग्रा संस्कृति, कला र साहित्य विषयक डोग्री लेखन र रचनाका नमुनाहरू थिए। यो दशकले पनि हिमाचल प्रदेशका डोग्राहरूका आफ्ना मातृभाषाप्रति रुचिको वृद्धि देख्यो। जम्मुका डोग्री कविहरूले हिमाचलमा कवि गोष्ठीमा अंश ग्रहण गरे अनि हिमाचलका धेरै लेखकहरूले जम्मुबाट प्रकाशित हुने डोग्री पत्रिकाहरूमा रचनाहरू दिए।

डा० सुनीतिकुमार च्याटर्जी, डा० बाबु राम सक्सेना र श्री मीनाक्षी सुन्दरम लगायत एउटा भाषिक विशेषज्ञ कमिटिद्वारा डोग्रीलाई एउटा स्वतन्त्र भाषाको रूपमा मान्यता दिइएको थियो। यो कमिटिको ऐक्यमत सिफारिशमा साहित्य अकादमीद्वारा यो भाषाले मान्यता प्राप्त गरयो, जसले अल्प डोग्री लेखक र डोग्री भाषीहरूलाई नैतिक-शक्ति प्रदानको काम गरयो अनि तिनीहरूमा गर्वको चेतना थोपा-थोपा गर्दै भरिदियो। यसले हिमाचल प्रदेशको जनतामा पनि मातृभाषाको निम्ति उत्साह उत्पन्न गरिदियो अनि हिमाचल प्रदेश सरकारले डोग्री पहाड़ी भाषाको शोधकार्य र विकासको निम्ति एउटा संस्था स्थापित गर्ने निश्चय गरयो।

यो दशकमा, डोग्री भाषामा सृजनात्मक गतिविधिको प्रयत्नले प्राय: १०० पुस्तकहरूका प्रकाशन देख्यो—२६ वटा कविताका, नाटकका ६वटा, तीनवटा उपन्यासहरू, दशवटा लघु-कथा संकलन, आठवटा निबन्ध चयन, २० वटा गद्य अनुवाद र ६ वटा समकालीन डोग्री लेखन संकलन, तीनवटा पत्रिकाहरू। धेरै उदीयमान लेखकहरू लेखन क्षेत्रमा उत्रिए। पहिलेदेखि विद्यमान रहेको स्वरूपमा निबन्ध, साहित्यिक समालोचना र उपन्यास जस्ता साहित्यिक अभिव्यक्तिको नया विधाहरू थपिए। डोग्री साहित्यको आकारमा अनुवादले निकै योग दियो।

## २

गत दशकले कविताका १९ पुस्तकहरू देखेको थियो तर कविहरूका मोठ संख्या २० भन्दा बढ़ी थिएन। यो दशकमा कविताका २७ पुस्तकहरू प्रकाशित भए अनि कविता लेख्न प्रयत्नशीलहरूका संख्या १०० पुग्यो।

यो दशकमा लगातार लेखिरहने चौथो दशकका पुराना कविहरू र श्लोक लेखकहरू दीनू पन्त, किसन समयल्पुरी, रामनाथ शास्त्री, वेद पाल दीप, यश शर्मा र अलमस्त थिए। दीनू पन्त र किसन समयल्पुरी प्रत्येकको योगदान सात वा आठवटा ससाना कविताहरूमा सीमित छ अनि यश शर्माका तीनवटा कविताहरू र आठवटा गीतहरूमा सीमित छ जुन पत्रिका र संकलनतिर प्रकाशित भए। चीन-भारत र भारत-पाक संघर्ष विषयक तिनीहरूका कविता वा गीतहरू खुबै प्रकरण सम्बन्धित र साहित्यिक गुणशून्य छन्। देश र वीरहरूका प्रशंसा-कविताहरूले पनि सस्तो नारावाद र मीठो संवेदनशीलतालाई छोड्‌न सकेका छैनन्। दीनू पन्तका तीनवटा कविताहरूमा र यश शर्माका केही गीतहरूमा बाहेक नवप्रदानको निम्ति तिनीहरूसित केही नभए झैं र तिनीहरूका प्रेरणाका श्रोत पनि शुष्क भए जस्तै देखिन्छ।

यो दशकको यश शर्माका गीतहरूमा उनका पांचौ दशकतिरका गीतहरूमा जस्तै उही पीछा नछोड्‌ने उदासीनता र सुमधुर स्वभाव छन् अनि ती उनका मातृभूमिका ध्वनि र दृश्यका कोमल स्मृतिका भावमाथि विखरित बन्छन्, एउटी डोग्री युवतीको चम्पकको कोपिला जस्तै सौन्दर्य, प्रेमपीड़ित हृदयका उत्कण्ठा अनि गीतका शक्ति र सौन्दर्य जसले यात्रीको निम्ति विपत्तिदर्शक प्रकाशको काम दिन्छ अनि प्रियतमाको अधरमा खेलिरहने मुस्कान जसले हृदयलाई प्रज्ज्वलित पारिदिन्छ :

गीते दे डिये बाली करी
सुर लान्ना, सुरता नेइं राहन्दी आइं
म मेरा गीत-दीप जलाउँछु
अनि गाउँदा म वेहोश बन्छु !

दीनूका तीन कविताहरू 'मिलन विछोड़ा', 'नाले दे आले' र 'न्हेरे नेइं नारायण राउन्दे' ले केही मात्रामा उनलाई उनको शीर्षस्थमा प्रदर्शित गर्छन्। अघिल्ला दुवै कविताहरू उनी सुन्दर ढंगले आरम्भ गर्छन्, उत्कृष्ट चित्रहरू लहराउँछन् अनि त्यसपछि उनका कल्पना थाक्नु र मुझाउँन् थाल्छ। 'मिलन विछोड़ा' मा, बिहानीको शीत र पुष्परूपी सूर्यकिरणका चित्रहरू सुन्दर छन्। 'नाले दे ओले' मा पनि प्रथम डेढ़ श्लोकहरूले उपमायुक्त खोला-नालाका चित्रका नियोजनले यसको गति जीवन्त बनाउँछ, तर त्यसपछि भने तिनका कल्पना र सृजनात्मकता भोका गाई-वस्तुहरू, शुष्क खेतहरू र असहाय कृषकहरूका खोला लगिदिने तिनको इच्छाको पूर्व ग्रस्ततामा हराउँछन्। कवि संवेदनशील बन्द-छन् र यो संवेदनशीलताले एउटा मिथ्या ध्वनि सूचित गर्छ। माथि बताइएको तेस्रो कविता यो दोषले मुक्त छ। यसमा आजको डोग्रा स्त्रीको सत्यता उनकी पूर्वकालका र संसारका अन्य भागका समकालीनहरूका सन्दर्भमा जबर्जस्त र

यथार्थरूपले चित्रण गरिएको छ । सावित्रीथिई जसले यमराजबाट आफ्नो भाग्य पुन: प्राप्त गर्छे, शून्याकाशमा यात्रा गर्ने भ्यालेन्टिना छे, दाइजो र गहना जस्ता दैनिक समस्याका स-साना तुच्छ विषयमा आफ्ना दिन व्यतीत गर्ने डोग्रा स्वास्नी-मानिसहरू, जो अझ पनि समयको किनारमा छोड़िएका रूढ़िगत व्यवस्था र अन्धविश्वासमा फँसेका छन् ।

यद्यपि तिनका प्राय: ३० वटा कविता र गजलहरू पत्रिकाहरू र संकलनहरूमा छापिएत।पनि रामनाथ शास्त्रीले यो दशकमा पनिआफ्ना कविताका कुनै पनि संकलन प्रकाशित गरेनन् । तैपनि तिनले दुइवटापद्यानुवाद प्रकाशित गरे—ती हुन् टेगोरको 'गीताञ्जली' र भर्तृहरिको 'वैराग्य सतक' । तिनले भर्तृहरिको 'शृंगार शतक' पनि अनुवाद गरे अनि यसको प्रकशनले समयमा डोग्री श्लोकका बाहुल्य-तामा योगदान दियो । अघिल्लो परिच्छेदमा 'नीति शतक' विषयमा कथित कथन 'वैराग्य शतक' को अनुवादमा पनि प्रयोग हुन्छ । 'गीताञ्जली' को अनुवाद बढ़ी संगीतमय र सन्तोषजनक छ। यो सत्य हो कि मौलिक बंगालाको भावनाको सौन्दर्य र संगीत पूर्णरूपले समाहित छैन तैपनि गीतका सुप्त दर्शन, सर्वज्ञाता र सर्वव्यापक ईश्वरको लीला अनि त्यो लीलाप्रति कविको उपासना, प्रेम र आश्चर्य समावेश गर्न निकै सफल भएको छ । गीत संख्या ३९, ४५, ५०, ५४, ६०, ६४, ७३, र १०० डोग्रा आवरणमा विशेषरूपले सुन्दर देखिन्छन् ।

चीनी-भारतीय र भारत-पाक संघर्षद्वारा अनुप्रेरित रामनाथका कविताहरू उति हृदयग्राही अनुभवहरू होइनन् तर हिमालयमाथिको उनको गद्य कविता रचना खुबै सशक्त र प्रभावशाली छ । कविलाई यस्तो लाग्छ कि एकपल्ट भारतको मुकुट रहेको हिमालय, अजेय बार, देवताहरूका वासस्थान र तीर्थस्थान घाइते भएको छ र जमीनमा लम्पसार छ, राष्ट्रिय गौरवको बहुरंगी फूलहरूका लाश-माथि रोइरहेको छ र हिमालय विषयका सबै सत्यहरू असत्य प्रमाणित भएका छन्, त्यसर्थ अब नयां हिमालय निर्माण गर्नु आवश्यक छ ।

उनका गजलहरू र अन्य कविताहरूले उनका व्यक्तिगत अनुभव र भावनाका वर्णन गर्छन्—वेदनामय सम्झनाहरू, जीवनको कटु यथार्थ, परिवर्त्तनशील समय र अवस्था, समुद्र छालका अबाध गति, चन्द्रज्योत्सना र फूलहरूका सुगन्ध, भयपूर्ण सत्य, विश्वासघातनिहित स्नेह, देखावटी, वर्तमान फेशन अनि ती सबप्रति कविको उदासीनता । कवि अनुभव गर्छन् कि उमेरको वृद्धिसंगै फूलहरूले पनि उनलाई मोहित पार्न सक्तैनन् अनि अवस्था यति शीघ्रतासाथ परिवर्त्तन हुन्छ कि उनी आफ्ना लक्ष्य पनि जान्दैनन् । कहिले काहीं उनलाई आफ्नो हृदयाकाश अन्धकार र रित्तो लाग्छ अनि एउटा उड्दो हाँसले केही प्रकाश छरिदिन्छ र स्वरूप प्रदान गरिदिन्छ अनि उनलाई एउटा शिशुले अथवा बन्धनमा परेको यौवन र स्नेहको पुकारा वा जंगली मौरीहरूले घेरेका कोपिलाहरूका पुकारा वा गुमाएका अवसर-

हरूका निम्ति रोइरहेको वृद्धावस्थाको पुकारा वा मातृभूमि र प्यारी पृथ्वीको निम्ति प्रेमको पुकारा जस्तै जीवनले बोलाउँछ। यी आह्वानले कविलाई नव-मार्ग प्रदर्शन गर्छन्। कहिले काहीं भुन्भुन गर्ने मौरीहरूले उसलाई जीवन र प्रेम, तारा, चन्द्रमा, समुद्र र बादलहरू, पृथ्वी र पवित्र हृदयको रहस्य बताउँछन्। कहिले कवि आफ्ना कमरामा लड्रिहेको फूलदानीबाट भियतनामका जनताका पीढ़ा र कष्ट बुझिदिन्छन् अनि फूलदानीका सट्टामा उनी आफ्ना मातृभूमिको निम्ति प्राण विसर्जन गर्ने युवक-युवतीका चिहान देख्छन् अनि आफ्ना घरको छानुमाथि भएको कयाक्टस् एउटा झाड़ीप छिको बन्दूकमा परिवर्त्तन हुन्छ। आह्वान विषयक कविता संगीत, ताल र शब्द सौन्दर्यपूर्ण छ भने सबैलाई जीवनको रहस्य विषयमा जिज्ञासा प्रकट गर्ने हावा विषयका कविता जीवनको डोग्रा मान्यताको परम्पराले ढाकिएको न्यानो चिन्तनपूर्ण छ। चन्द्रमा सोच्छे कि आफूले सापटी लिएको ज्योति नै यसको काला दागहरूका दायी हो। किनकि चन्द्रज्योतिलाई एउटी विधवीको फीका हाँसो जस्तै देखिन्छ। सागरको जीवनको लक्ष्य आफ्नो परम्परा र गरिमा कायम गर्नु हो तृषित भूमिको आत्माको निम्ति बादल तृषित बन्छ, अनि कन्था प्रकृति र महामाया शक्तिको प्रतिमूर्ति हो जसको प्राप्ति जीवनको खेल वा निरन्तरमा रहन्छ।

यो अवधिमा वेदपाल दीप कवितामाभन्दा बढ़ी गजलहरूमा केन्द्रीभूत भए अनि तिनले 'आशा ते औं बन्जारे लोक' शीर्षकमा ११३ वटा गजलहरू प्रकाशित गरे। यी गजलहरूका क्षेत्रले प्रेम, वेदना, नैराश्य, गर्व, धैर्य्य र सामाजिक संकल्प जस्ता मानव आवेगका सम्पूर्ण हेतुलाई अंगाल्छ। दीप प्रगाढ़ र स्थायी प्रेम, साहस र गरिमाका व्यक्ति हुन् भनी तिनीहरूबाट थाहा लाग्छ। तिनका गजलका गुण विषम छ—केही श्लोकहरू गम्भीर अर्थपूर्ण उत्तम छन् भने अरु केही अर्थहीन शब्दहरू मात्र छन् वा केवल कोरा संवेदनका अनुकरणशील पुनरावृत्ति मात्र छन् जसले उर्दू गजलको व्यापारिक भण्डारको रूप लिन्छ। गालिब र फिराक गोरखपुरीका प्रभाव स्पष्ट छ। 'काला म्हानु' र भारत-पाक संघर्ष विषयक जस्ता तिनका कविताहरूमा बढ़ी ताजापन छ। यतिसम्म कि 'नमां जुग' मा पनि तिनका कल्पनाले वाकपटुताको छाप लगाउँछ अनि तिनी सोच्छन् कि कवि-हृदयको गीत, वीणाको झन्कारमा संगीत, एक थोपा शीतमा वहुरंगी इन्द्रेणी, दिनको आकाशमा तारा जस्तै यो युगमा एउटा नया युग उम्लिरहेछ अनि मानवको निम्ति एउटा उज्ज्वल भविष्य छ। 'काला म्हानु' ले शताब्दीको दासत्वबाट मुक्त गराउन संघर्षरत निग्रोको चित्रण गर्छ। कविलाई यस्तो लाग्छ कि काला मानिसलाई देखेर सेतो सभ्यता लड़खड़ाएको छ। नया आग्रह, दृष्टिगत व्यापकता र उग्र शैलीले गर्दा 'गीत मेरा इक्कला नेइं' भारत-पाक र चीन-भारत संघर्षका सायद सबैभन्दा प्रभावशाली र सुन्दर डोग्री कविता हो। कविले डुग्गरको सीमित

सन्दर्भलाई त्यागेका छन् अनि विभिन्न स्तर र विभिन्न देशका स्वतन्त्र संग्रामका विषयमा बक्छन्। तिनी शब्दरूपी सैनालाई आफ्ना धारिलो कलमले चिल्लाउँछन्, तिनीहरूलाई ताल र युद्ध-रागले सिंगार्छन् अनुप्रासयुक्त गराउँछन् तिनीहरूमा विचारको स्पन्दित कम्पन प्रदान गर्दै अग्रसर गराउँछन्। लुमम्बा वा कुनै भियतनामीलाई ह्किर्काउने गोलीले कविको हृदय क्षत-विक्षत पारे जस्तै लाग्छ अनि तिनले लेखेका प्रत्येक अक्षर तरवारले सुसज्जित भए जस्तै देखिन्छ र तिनले गाएको प्रत्येक गीत फलामे ढाल बन्दछ अनि तालबद्ध तिनका शब्द-सैन्य चाँड़ो-चाँड़ो हिड्न थाल्छन्, दगुर्न थाल्छन् अनि यस्तो लाग्छ कि तिनीहरू शत्रुका किल्ला तोड्न कटिबद्ध छन्। भाषा, वाक्य-विन्यास र गति सबै विषयानुसार उपयुक्त छन् अनि कविता विचार-उत्तेजक, गम्भीर र उग्र छ।

यो दशकमा परमानन्द अलमस्तले प्रायः ८० वटा नया कविताहरू र गीतहरू प्रकाशित गरे। तीमध्ये ६७ वटा 'झनक' मा र १३ वटा विभिन्न पत्र-पत्रिकाहरू र संकलनहरूमा प्रकाशित भए। तीमध्ये धेरै जसो चार मुख्य विषयमा छन्—देशभक्तिको भावना, अस्तित्वका समस्यामाथि गम्भीर विचार, हृदयको विश्रृंखल भावनाहरू र प्रेम कविताहरू।

प्रथम प्रकारको कविता चीन-भारत र भारत-पाक संघर्षको पृष्ठभूमिमा लेखिएका थिए अनि ती जन-जागरण गराउने उद्देश्यले नारावादी छन्, मानव-जीवनका समस्याहरूमाथिको गम्भीर विचार पनि निष्तेज छ; ती पद्यावरणमा साधारण वर्णन मात्र हुन्—हृदय चञ्चल र अनियन्त्रित हुन्छ, समय सर्वशक्तिशाली हुन्छ, यो संसार एउटा पाटी हो अनि मानिसले कर्मको फल भोग्छ इत्यादि। हृदयको भाव-प्रवाहका तिनका गीतहरू सरल र हृदयस्पर्शी छन्। तर, प्रेमविषयक गीतहरूमा तिनी आफ्ना शीर्षस्थमा छन्, ती सुन्दर र मिठासपूर्ण छन्। तिनी वर्षा ऋतु, गोरीका नयनहरू, उसको आकृति र विविध वस्त्रका वर्णन गर्न मन पराउँछन् :

सुन्धुर लपेतिआइ अक्खन लपेतियाइ
सुरतां मने बिच बस्सियां न
मोकले सोकले फिरनवा दे आलड़े
दौलतां जोवनी खट्टियां न

सिन्दुरी लालिमा र मखन जस्तो कोमल तिम्रो चेहेराले मेरो हृदयमा घर बनाएको छ। तिमीले आफ्नो ठूलो फिराना [काश्मिरी खकुलो पोशाक] मा तिम्रो यौवन लुकाउँछ्यौ।

यी गीतका विषयहरू साधारण जीवनबाट लिइएका छन् अनि यी गीतहरू लोक-गीतका ढाँचमामा छन् र जन-साधारणका हृदयलाई सोझै प्रभाव पार्ने उत्कण्ठाले गाइन्छन्।

## ३

पचास तिरका पाँच कविहरूले आफ्ना कविता र गीतका संकलनहरू प्रकाशित गरे। ती थिए स्वामी ब्रह्मानन्द [ब्रह्मानन्द भजनमाला], पदमा [मेरियां कवितां मेरे गीत], रामकुमार अब्रोल [मेरियां कवितां मेरियां कहानियां], शम्भुनाथ [डोग्री रामायण] र मधुकर [डोला कुन ठाप्पेया]। रवीन्द्रनाथ ठाकुरको [एकोत्तरशति] एक सय एक कविताका मधुकरको डोग्री अनुवाद जे एण्ड के एकाडेमीले प्रकाशित गरेको थियो। गत दशकका दुइ अन्य कविहरू तारा समाइल्पुरी र दुर्गा दत्तले समय-समयमा लेखिरहे अनि तिनीहरूका कविता र गजलहरू पत्रिकाहरूमा प्रकाशित भए।

'ब्रह्मानन्द भजनमाला' मा ७८ भजनहरू, २० दोहाहरू र २७ कवित्तहरू उही पुराना डोग्री लोकप्रिय वेदान्त विषयक छन् जुन पचास तिरका स्वामीजीका प्रकाशित कृतिका विषय छन्। संवेदन वा प्रस्तुतिकरणमा कुनै नवीनता छैन। स्वामीजीको यो अन्तिम कृति थियो अनि यही दशकमा तिनको मृत्यु भयो।

पदमाका कविता डोग्रा स्वास्नीमानिसको कविता हो जसको भावना र आवेग, विचार र समस्या, आशा र चिन्ताहरूले उसको कवितामा अभिव्यक्ति पाउँछन्। यो दशकमा प्रकाशित उनका सयमा धेरै जसो कविताहरू नारीसुलभ संवेदनमा चुर्लुम्म डुबेका छन्—बाल्यकालका नशालु स्मृतिहरू, बैंशालु व्यग्रता, प्रेमीको निम्ति उत्कण्ठा, भूमि-प्रेम र प्रतीक्षा। यी कविताहरूलाई बैंशको भारले झुकेकी एउटी तरुणी धीमा तर सुन्दर पाइलाले नम्रतासाथ हिंडे जस्तै अघि बढेको देखिन्छ। तिनका कविताहरू आफ्ना मातृभूमिको निम्ति कोमल माटोको हल्का सुगन्धले युक्त र डोग्री, डोग्रा जीवन व्यवस्था र डोग्रा वनस्पति र पशु-पक्षीप्रतिको उनको प्रेमले उद्वेलित छन्। एउटा कवितामा उनी आफ्ना आगनमा भएको बयरको रूखमा आत्मियता प्राप्त गर्छिन् अनि अर्कोमा आफ्ना प्रियतमसितको विछोड़मा तिनको चञ्चल हृदय समयको ज्वारभाटा र देशको विशृंखलतामा डुब्न थाल्छ अनि आफैलाई हेर्दै आफ्ना अपूर्ण जीवनमा दु:खको अनुभव गर्छिन् :

> नां जिन्डाड़ी पौंगरी, नां पीले
> पट्ट झड़दे न

देश रक्षाको निम्ति डोग्रा नारीका उत्सर्गको विषयमा तिनी सचेत छिन् अनि सीमामा शत्रुका अतिक्रमणले, नयाँ चुनौतीको सामना गर्न जनतालाई सावधान गराउन तिनलाई जागृत गराउँछ। यतिसम्म कि सबभन्दा दु:खको घड़ीमा पनि तिनी आशा गुमाउँदिनन् अनि कष्टमा तिनको धैर्य पृथ्वीको धैर्य जस्तै हुन्छ अनि प्रेमी-मिलन र उसको प्रेम-प्राप्तिको उत्कण्ठा आदि पूर्णिमाको रातको समुद्रको जस्तै हुन्छ।

'छलाइया' कवितामा, पहाड़को चुचुरा वरीपरी खेल्दै नीनीनानी गीत गाउने पूर्वीय हावा, स्वच्छ तलाव, नुहाएका कमल-पुष्पहरू, जवाकुसुको हाँसो, खेतमा नाचिरहेकी तरुणीको रुन्झुन गर्ने बालाहरू, पर्वतको शिखरबाट उठिरहेको धुवाँ, घुम्टोभित्रको विनीत र भयप्रद चेहेरा, पर्वतका चुचुरातिर आँखा घुमाउने पाठाहरू, विचारमग्न धुपीका चञ्चल वृक्षहरू आदि प्रकृतिको सुन्दर चित्रण छन्। 'देश निकाला' मा संवेदनशीलताको गहीरो रंग छ अनि कविताको विषय माइती घरको सम्झनाले रुझेको छ—साथीहरूसित गीत गाउँदै, कृष्ण र गोपी खेल्दै, नदीमा बाढ़ हेर्दै, सतही पानीमा पौड़ी खेल्दै, आफैले रोपण गरेको उद्‌भिद्‌को वृद्धि हेर्दै, आमाको स्नेहमयी बोलाहटलाई नसुने झैं गर्दै जीवन निष्फिक्री र एउटा अविराम खेल थियो। 'भाद्रो' एउटा खुबै सुन्दर कविता हो जसमा पानी-झरीमा रूझ्दै आफ्ना वियोगी प्रेमी-प्रतीक्षु नारीको भावना खुबै काल्पनिक र सूक्ष्मग्राही-रूपमा प्रकृति र नारीलाई एकात्म्य गराउँदै चित्रण गरिएको छ।

पदमाका कविता र गीतका वर्ग सीमित छ तर त्यो वर्गभित्र तिनी अब्बल छिन् अनि तीन वर्णित कविताहरू तिनका उत्तम र प्रतिनिधिमूलक कविताहरू हुन्।

अघिल्लो दशकमा प्रकाशित 'कवि ते कविता' द्वारा अव्रोलले जगाएको आशा 'मेरियां कवितां' का दश कवितासंगै निशेष देखिन्छ। तिनका कविताका विषय-हरू— देशभक्ति, दरिद्रता, मान्छे, राष्ट्रिय एकता सबै अल्पज्ञतापूर्वक लेखिएका छन्, एउटा बाहेक अन्य कविताहरू काव्यात्मक गुणरहित छन्, जसमा पपीहाको गीतले रातको निस्तब्धतालाई चकनाचूर पारिदिन्छ, पूर्वीय समीरले कलिहरूका हिच्किचाहट तोड़िदिन्छ र तिनीहरूलाई आफ्ना सौन्दर्य र सुगन्धको निधि फुकाउने प्रेरणा दिन्छ र प्रेम-पीढ़ा वर्णन गर्छ।

२३० पृष्ठको शम्भुनाथको डोग्री 'रामायण' डोग्री काव्यमा ठोष योगदान हो। यो वाल्मिकी रामायण वा तुलसी रामायणमा आधारित छ सो स्पष्ट छैन। यस्तो लाग्छ लेखकले डोग्रा स्वभावलाई सुहाउँदो केही तत्वहरू दुवैबाट लिएका छन् अनि तिनका प्रभाव विषयरूपमा वितरित छ। पुस्तकका दुइवटा विशेषताहरू उल्लेखयोग्य छन्—वर्णनात्मक अवतरणहरूका सौन्दर्य अनि डोग्रा परम्परामा आधारित जीवनको मान्यताका विस्तार। अघिल्लाका उदाहरणहरू 'फुलवाड़ी' दृश्यको वर्णनात्मक अवतरणहरूमा पाउन सकिन्छ जहाँ राम र सीताले परस्पर-लाई प्रथम पल्ट देखछन्, सीताले रामलाई पुष्पहार चढ़ाउन वर्णन गरिएको दृश्य-हरू, सीताकी गमन समयमा जनकको अवस्था, अयोध्यामा राजकुमारहरूका आगमनमा दशरथका पत्नीहरूका हर्ष, नांगो पाउले जंगलमा रामलाई भरतको आग्रह अनि सीतासितको वियोगमा रामको अवस्थाको वर्णन छन्। कोही ठाउँमा कुम्भकर्णसितको युद्धमा अतिशयोक्ति छ। प्रारब्धको अनिवार्यता र निष्ठूरता

एउटी आदर्श पत्नीका गुणहरू, परनिर्भरताको अप्रिय जीवन र वीरहरूका गुणहरूका मान्यतालाई जोड़ दिइएको छ ।

यो दशकमा शम्भुनाथले डोग्री 'रामायण' बाहेक चार कविताहरू र नौवटा गजलहरू विभिन्न सामयिकीहरूमा दिए। कविताहरूमा उही चिरपरिचित देश-वासी, मातृभूमिको सुन्दरता र उसको सैनिकहरूका वीरताका प्रशंसाहरू छन् । 'निराशा' कविता र गजलहरूले उदासीनता, खिन्नता र नैराश्यका ध्वनि प्रस्तुत गर्छन् ।

मधुकरको 'डोला कुन ठप्पेया' मा उनका केही सर्वोत्तम कविताहरू छन् । तिनले डोग्री गीतहरू, भजनहरू र गजलहरूमा पनि कलम चलाए तर ती तिनका कवितहरूका तुलनामा तुच्छ छन्। प्रेम र वर्षा ऋतुका तिनका कविताहरूले अलमस्तकाभन्दा भिन्नै नयाँ स्वर र नवीन आग्रह प्रदान गर्छन् । मधुकरको निम्ति रोदन र वेदनाको कारण प्रियतमासितको वियोग होइन अनि प्रेमीहरूका निम्ति प्रेम अस्थिर बन्धन होइन; प्रत्युत प्रेमको आवेगको गतिशीलता एउटा शान्त नदीमा ढुंगाको खसाइ जस्तै हो जसले लहरहरूलाई प्रेमिका र व्यग्रकां पुरयाउँछ अनि निष्फल प्रेम श्रावणको वर्षावाहक बादल शुष्क बन्नु जस्तै हो अथवा गर्जंदो हावाको वक्षमा प्रकाश जगमगाउनु जस्तै हो। 'साउन', 'दिग !' र 'सन्हेड़ा' शीर्षक कवितामा तिनको श्रावणको बादलको वर्णन खुबै सुन्दर छ :

जोवन दे भारें हुट्टि री
बद्लें दी सेजा सुत्ति री
नागन जन मीन्ढी खुल्लि री
खबरे किस सोचा भुल्ली री
बुड्ढे बाबा इस गारसा लेइ
धरनी वरमाला लेई चली—ए।

बैंशले झुकेकी, बादलको वैवाहिक विछ्यौनामा सुतेर, साँप जस्ता हल्लँदा मुक्त केशराशी लिएर, विचारमग्न पृथ्वीले यो वृद्ध आकाशको निम्ति विवाहको वरमाला बोकिरहेकी छे।

'कविता दी पंगित' कवितामा चराका बचेराका चित्रण खुबै काव्यमय छ। 'देहरी' को भाव अधिक वेदनामय छ। धुवाँ र अन्धकार व्याप्त 'ध्रुवतारा' मा पनि उदासीनताको स्वर छ। तर, उनका धेरै जसो कवितहरूका भावभूमि सुनिश्चित आशावादी, भविष्यमाथि आशा र आस्थापूर्ण र मानव कल्याणमय छ।

मन्दिरमा, दोबाटोमा र एउटा घरभित्र जलिरहेको दीपको दृश्यमा उनी जीवनको-रहस्य प्रतिबिम्बित पाउँछन्। प्रकृतिको विभिन्न पक्षमा उनी जीवनको विविध स्वरूप देख्छन्; गाउँको पूर्वमा बयरका वृक्षहरू, शिशुहरू, हाँसो र किशोर जीवन छन्; उत्तरमा किक्करका वृक्षहरू, तरुण-तरुणीहरू, प्रेम र खोला छन्;

पश्चिममा छायादार वरवृक्ष, चिन्ता, दु:ख र वृद्धावस्थाको आगमन छन् अनि पथिक दोबाटोमा उभिएर जीवनको बदलँदो चेहेरा हेरिरहेको छ। मार्ग—'रास्ता'—ले उनको कल्पनालाई कुत्कुत्याउँछ अनि विगतलाई हेरेर उनी छक्क पर्छन् कि मानिसले वर्तमानमा के निर्माण गरेको छ।

'छल्ली', 'सौग', र 'लेहरां' सुन्दर कविताहरू हुन् जसमा कवि पानीको छालको पछि समय-सागरको छाललाई देखछन् :

जो लेहर कनारा टप्पी जा
ओ लेहर कनारा होई जन्दी
मिट्टी दी गोदा सेई जन्दी
मिट्टी दे रंग रंगोई जन्दी

किनारा छोड्ने छाल किनारा पारी जान्छ अनि पृथ्वीको काखमा सुतेर पृथ्वीसित एकात्म्य बन्छ।

'हीले' मा धेरै अतिशयोक्ति र कल्पनाको बाहुल्यता छन् जहाँ कवि चन्द्र ज्योत्सनालाई पवित्र हाँसोसित, अलिखित कविता र नकाटिएको मोतीसित तुलना गर्छन्। तर उनी चन्द्र ज्योत्सनाको वरीपरी रिंगिने छायालाई भुल्दैनन्। 'पंछां' कवितामा ईश्वर प्राप्ति अनि प्रकृतिसित एकात्म्य हुनको निम्ति केही धार्मिक, आध्यात्मिक आग्रह छ जहाँ कवि कल्पना गर्छन् कि सिमसिमे पानी र बिजलीको झलाक-झिलिकमा, छालहरूका गीत र पूर्वीय समीरमा, इन्द्रेणी रंगमा, युवतीको सालमा र उसकी बालाका रुन्झनमा, शून्याकाशको महलमा, समयको दलानमा आपना विगत जीवनको झाँकीहरू र पुराना संस्कारहरू समात्छन् अनि उनका आध्यात्मिक तृष्णा विस्तृत बन्छ। 'छलिया' मा भविष्यको सपनामा विभोर बनेकी यौवनको प्रवेशद्वार टेकेको एउटी केटीकी खुबै हृदयस्पर्शी चित्रण छ। 'हाम्ब' साहस र उल्लासको गीत हो जसमा कविताका चरणहरू नाचे जस्तै अनुभव हुन्छ। 'मच्छुये दी माया' मा, कवि संसारलाई माछावालाको व्यापार र विभिन्न भाषामा गीतहरूलाई जीवनको अर्केष्ट्रा जस्तै देख्छन्। भावनाको एक निश्चित गहिराई र दृष्टिको विस्तृति, भाषामाथि दखल, भावना र शैलीको सुरिलो संयोग, लय, अनुप्रास र अलंकारका प्रभावपूर्ण प्रयोग अनि आशा र मानवताका संवेगहरू मधुकरका कविता र गीतका वैशिष्टय हुन्।

रवीन्द्रनाथ ठाकुरका १०१ चयनित कविताका डोग्री पद्यानुवाद मधुकरको डोग्री काव्यप्रति एउटा महत्वपूर्ण योगदान हो। 'निर्झरा दा स्वप्नभंग', 'वाधु', 'मेघदूत', 'वसुन्धरा', 'सुखना', 'मन्दलगन', 'पेहली पुजा', 'चयनचला', 'तपभंग', 'घरोंदी चेतना दी गोधुली बेला' जस्ता कविताहरूका डोग्री पद्य खुबै सुन्दर भएका छन्। केही अन्य अंशका अनुवाद उति असल छैन। 'डोला कुन ठप्पेया' मा संकलित मधुकरका मौलिक कविताहरूमा टेगोरबाट प्राप्त प्रेरणा दर्शन्छ।

दुइवटा कविताका शीर्षकहरू, केही युगल कविताका विषयहरू र तिनका कवितामा प्राप्त आशावादीका साधरण तात्पर्यसम्म टेगोरद्वारा अनुप्रेरित देखिन्छन्।

यो दशकमा तारा समाइल्पुरीले प्रायः १५ वटा नयाँ कविताहरू र गजलहरू दिए अनि उनका गजलका केही दोहाहरू र 'महारथी' र 'कुथे अइं किन्यां तुगी पुकारां' बाहेक यीमध्ये धेरै जसो तुच्छ छन्। दुर्गा दत्त शास्त्रीका पाँच वा छ कविताहरू पनि त्यस्तै छन्। ताराले सामाजिक परिस्थितिको केही अवचेतन पक्ष देखाएका छन् र यसलाई आफ्ना केही गजलहरूमा व्यंगसाथ स्पर्श गरेका छन्। 'महारथी'मा उनी प्रकृति र मानव मूल्यको हानिमा मानिसको अविवेकी तकनिकि अनुसरणद्वारा उत्पन्न संकटप्रति निर्देश गर्ने चेष्टा गर्छन् अनि 'कुथे अइं किन्यां तुगी पुकारां' मा उनी ईश्वरको निम्ति मानिसको अनन्त खोजसित बाहुयुद्ध गर्छन्।

४

यो दशकमा कविता प्रकाशित गराउने ८० असम्बद्ध व्यक्तिहरूमध्ये केवल आठ जनाले मात्र डोग्री कवितामा गुणात्मक र मात्रारूपमा उल्लेखयोग्य योगदान दिए अनि प्रायः एक दर्जनले केही सकल्प दर्शाए। यी व्यक्तिहरूले विस्तृत भाग ढाके—डा० करण सिंह, एक जना केन्द्रीय मंत्री, जसले डोग्री भजनहरू लेखे, हिमाचल प्रदेशको एक जना मंत्री, लाल चन्द प्रार्थी, जसले आफ्ना हिमाचलको प्रशंसामा कविताहरू लेखे, प्राध्यापकहरू, कृषकहरू, विद्यार्थीहरू, विभिन्न पेशागत व्यक्तिहरू र गृहिणीहरू अनि शिमलादेखि फैलिएर मण्डी, कांगड़ा, नूरपूर हुँदै जम्मुको भित्री भागमा रामनगर, भद्रल, जन्द्राह जस्ता स्थानहरूसम्म। एकातिर बरकत पहाड़ी, पारस राम पुरुरवा, श्रीकान्त प्रत्युशा गुलेरि, राम कृष्ण शास्त्री, रोमल सिंह भद्रल, अमर सिंह अदल, श्यामदत्त पराग, कृष्णवत्त, सुतीक्ष्ण आनन्दम, श्रीमतिविमल, चम्पा शर्मा र शीला सन्तोषले अभ्यासद्वारा प्रौढ़ताको केही संकल्प दर्शाए भने रामलाल शर्मा, रामलाल तपिहर, चरण सिंह, नरसिंह देव जम्वाल, मोहनलाल सपोलिया, पीयुष गुलेरि, गौतम व्यथित र शिव दीपले आफ्ना कविता संकलन निकाले।

रामलाल शर्माले आफ्ना पद्य रचनाका दुइवटा संकलन प्रकाशित गरे—२२ वटा कविताका 'किरण' र २९ कविता र २४ वटा गजलहरूका 'इन्दर धनखा'। उत्साहहीन सरल शैलीमा प्रणय संवेगलाई विविध रूपमा, बदलंदा ऋतुहरू—होली, वसन्त, ग्रीष्म र वर्षा, जब कालो बादलले जीवनको नव-सन्देश ल्याउँछ, बिजलीको हाँसोले पहाड़लाई प्रकाशमय पार्छ, पृथ्वी-माताको दानशीलताको विषयमा, देशको समस्याका विषयमा अनि गान्धी, नानक, र गुरु

गोविन्द सिंह जस्ता महान पुरुषहरूका विषयमा लेख्छन् । केही कविताहरूमा तिनी अत्युक्ति र संवेदनशीलतालाई प्रतिपादन गर्छन् वा सुधारक जस्तै प्रचार गर्छन्, अनि केहीमा तिनका उपमाहरू उपयुक्त छैनन्। तर, तिनका 'वसन्त', 'सवेरा' र 'नदी' जस्ता केही कविताहरू प्रकृति चित्रण र चरणहरूका संगीतमा निकै सुन्दर छन्। त्यस्तै प्रकारले खेड समें दी', 'कुचज्जी' र 'शेर' पनि प्रभावशाली छन्। तिनका गजलहरूका भाव स्वच्छन्दभन्दा बढ़ी विचार प्रतिविम्बित छ अनि विषय-वस्तु प्रबोधक छ।

रामलाल पपिहा एक जना कृषक कवि हुन् जसले 'लेहरां' नामक १९ कविताका संकलन प्रकाशित गरे। तिनका कविताहरूमा आफ्ना समकालीन दीनू पन्त र तारा समाइलपुरीका प्रभाव पाइन्छ अनि तो डोग्रा र तिनीहरूका पराक्रम, डुग्गर र उसको सुन्दरता, बारह ऋतुहरू, ऋतुहरूका समयमा प्रकृतिका स्वरूप जस्ता पुराना जीर्ण विषयहरूसित शुद्ध र ग्रामिण शैलीमा सम्बन्ध राख्तछन्। केदारनाथ मिश्र पनि ग्रामिण डुग्गरका एक जना कवि हुन् अनि तिनका कविता-हरू नीतिवादी छन्। 'मनइ दे लाउ' तिनको कविता संकलन हो अनि ईश्वर प्रार्थना, नैतिक शिक्षा, मृत्युको अपरिहार्यता एउटी विधवीको आंसू र मातृविहीन छोरीको दशा तिनका पद्यका केही विषयहरू छन्।

चरण सिंहका 'जोत' नामक कविता संकलनका तुलिका सीमित छ—वैंशालु प्रेमको आशा र नैराश्य, शैशव स्मृति, दैनिक अस्तित्वका चिन्ताहरू, मृत्युको अपरिहार्य्यतामा असहायपनको भावना, प्रथम प्रेमको धार्मिक उपसना र त्यसको असफलतामा हृदयको विदीर्णता—तर तिनको निष्कपट र आवेगमय अनुभूतिका गाम्भिर्य रयो अनुभूतिको इमान्दार अभिव्यक्ति विचारणीय छ। कवि आफ्नाअंतर अस्तित्वलाई जाँच गर्ने चेष्टा गर्छन् र ती बाहिर निकाल्छन्। तिनका शैली मुक्त छ; विभिन्न शैली तिनी प्रयोग गर्छन् र विषयलाई सुहाउँदो योजनामा राख्छन्। प्रकृतिको निम्ति तिनमा सूक्ष्मानुभूति छ अनि 'चुब्बां' मा एक थोपा शीत वा पहा-ड़का टुप्पाहरू अंगाल्ने मुस्काउँदा बादलहरू वा यो पृथ्वीको प्रांगणमा नीला-द्वारा आगनमा चन्द्रज्योत्सनाको झराइ जस्ता चित्रण खुबै सुन्दर छन्। यो दुःखको विषय हो कि यस्ता संकल्पपूर्ण युवा कवि २८ वर्षको कलिलो उमेरमै जुन १९६९ मा मरे। त्यस समयसम्म तिनले केही गीत र गजल लगायत २० वटा कविताहरू लेखिसकेका थिए जुन डोग्री पत्रिकाहरू र संकलनमा छापिए। यीमध्ये केही 'लाचारी', 'एक पौखड़,' एक कन्डयारी', 'बाहना' र 'जीवन' जस्तामा तिनी जीवन र मृत्युको प्रश्नले पूर्वग्रस्त छन्। तिनलाई अचम्भ लाग्छ, जीवन र यसका उद्देश्य के-के हुन्। तिनी मानवतालाई पिंजड़ामा कैद र मानिसलाई असहाय पाउँछन्। तिनी मत प्रकट गर्छन् कि सुन्दरता, यौवन, प्रेम, संगीत र जीवनको तथाकथित आनन्दहरू सबै मायावो र व्यर्थ हुन् अनि आफ्नै जीवन पनि

तिनलाई अर्थहीन लाग्छ र शब्दहरू केवल झन्झनाउँछन् । 'न्याना', 'सोच सिर्जना', 'होली', 'दाउँकिंगरे' तिनका यो दशकको उत्कृष्ट डोग्री कविताहरूमध्ये हुन् । 'सोच सिर्जना' कविता-बौद्धिक छ; कवि विचार गर्छन् कि मननै सबै विषय हो जसको मूल भूतलमा र शिर स्वर्गमा हुन्छ अनि आत्म-ज्ञानद्वारा मनलाई पूर्णरूपले बुझ सकिन्छ । 'ढाउँ किंगरे' मा सन्ध्या वर्णन सृजनात्मक कल्पनापूर्ण छ । पर्वतको दुइ चुचुरा पछिल्तिर चन्द्र उदय र पश्चिमका तालवृक्षका पछिल्तिर अस्तले तिनलाई आफ्ना प्रणयको सम्झना गराउँछ जुन चन्द्र ज्योत्सना जस्तै फक्रियो त्यसपछि विलुप्त भयो अनि :

दुइ चुचुराहरू जस्ता, हामी
तालका दुइ वृक्षहरू
अँध्यारामा उभियौं, प्रेतात्मा जस्तै
आफ्ना हृदयमा प्रेमाग्नि
समेटेर,
चूपचाप जल्दै
काँचा दाउरा जस्तै ।

यो दशकमा नरसिंह देव जम्वालले कविताका दुइ पुस्तकहरू प्रकाशित गरे —२९ कविताका एउटा संकलन 'नमी कविताका नमे रास्ते'र अर्को ८८ गजलका संकलन 'शमा जलाई की ढाड़की ढाड़की' । तिनका गजलहरू असल छैनन् सृजनात्मक कल्पना विचार-विषय र आवेगमय आग्रह सब तुच्छ छन् । कविताहरू केही असल छन् । 'रास्ते', 'अंसम्बी खेड', 'वर्षान्त', 'निक्का नेया दिया', 'हिरख', 'त्रय सन्धां' र 'इन्तजार' असल कविताहरू हुन् । तिनले विस्तृत क्षेत्रबाट विषय टिपेका छन् तर ती सबै जीवन्त छैनन् ।

लोक प्रिय कविको रूपमा, विशेष गरी कवि गोष्ठीमा, देखाइ पर्ने मोहनलाल सपोलियाले 'सजारे फुल' शीर्षकमा ३१ वटा कविताहरूका संकलन प्रकाशित गरे । यसमा, 'साड़ा भारथ', 'मेरा देश', 'डिडो', 'शहीद' र 'कोइ होग तां अखोग' जस्ता देश भक्तिका तीव्रता [संवेदनशील नारावादी प्रवलता दर्शाउने], डोग्रा ग्रामिण अवस्थासित सम्बन्ध राख्ने 'काण्डी' जस्ता अनि डोग्रा कृषक 'हाली' जस्ता कविताहरू भोक [फाका] र अभाव [मूरतां] सित सम्बन्ध राख्ने विषयका कविताहरू अनि प्रेमीको प्रथम झलकको दिनको पुनःस्मृति र (हाड़ चड़े दा प्रीतां दा छल्ला लेर) 'यादां', 'भौड़ा' र 'दो तीर' जस्ता कविताहरूमा प्रेमको प्रथम ज्वारभाटा, अनि 'मेरि कहानी', 'जीवन जोत', 'जवानी ते बड़ेपा', 'बसन' र 'प्यार' जस्ता अन्तर्वलोकनका कविताहरू समाविष्ट छन् । 'सुत्ती दी प्रीत जगा करना' र 'छल्ले' जस्ता कविताहरूमा सपोलियाका महत संकल्प उद्घाटित छ; अघिल्लोमा आशावादिता र आत्मविश्वास अनि जीवनप्रति प्रेमको स्वर छ अनि कवि स्वयंलाई स्वतंत्ररूपले उच्छाल गतिमा बहँदो नदीसित परिचय गराउँछन् ।

धरती दे कोमल अंगे चा
सुत्ती दी प्रीत जगा करनां
[भूमिको कोमल अंगमा प्रेम जागृत गरउँदै]
माउती शा जीवन पा करनां
मस्ति बिच बगदा जा करनां
[मृत्युबाट जीवन खोसेर म उच्छाल बहन्छु]

अनि उनी सम्झन्छन् कि सबै रंगहरू तिनकै निम्ति प्रकाशमय छन्, सबै फूलहरू तिनकै निम्ति फुलेका छन् अनि तिनकै आनन्दका निम्ति सबै संगीतका साजहरू बजाइन्छन्, मुस्काइरहेकी चन्द्र ज्योत्सना तिनलाई नै स्वागत गरिरहेकी छे; पछिल्लो कवितामा तिनी एकलो शुष्क पातशून्य वृक्षको हृदयस्पर्शी चित्रण गर्छन् । तथाकथित लोकप्रिय विषयहरू लेख्ने लालचलाई तिनले रोके भने यो संकल्प पूर्ण गर्न सकिन्छ ।

शिव दीप अर्का युवा डोग्री कवि हुन् जसको प्रथम प्रकाशन १९ कविता र १९ गजलहरूका 'एक लीकर केई परछामे' ले महत संकल्प प्रदर्शित गर्छ । मोहनलाल सपोलियाबाट डोग्री कविता लेखन अनुप्रेरित भएका तिनी संवेदनवाद र नारावादका विकारहरूबाट ग्रसित छैनन्, तर तिनका गुरुका पद्यहरू ग्रसित छन् । तिनको अनुभव सीमित छ, तर तिनी चारैतिर र स्वयंमित्र दृष्टिगोचर गर्छन् र आफ्ना मत र विचारहरू सरल तर प्रभावशाली शैलीमा चित्रण गर्न सचेष्ट छन् । तिनका कविताहरूमा केही ताजापन र कठिनाइहरूलाई सामना र विजय गर्ने साहस र विकासका उदाहरण छ । 'निश्चा', 'छल्ले', 'लीक बलीकर', 'मन' र 'हीखी' असल कविताहरू हुन् । तुलनामा तिनका गजलहरू निकृष्ट छन् ।

२५ वर्ष अघि नै जम्मुमा उम्रेको आञ्चलिक भाषिक पुनर्जागरणको बीज, पीयुष गुलेरीको 'मेरा देश म्हाचल' र गौतम व्यथितको 'चेते' को प्रकाशनसित कांगड़ाको माटोमा अंकुरित भएको देखिन्छ । मातृभूमिको सौन्दर्यमा—हिमाचल, कांगड़ा र बाल्यकालमा धारण गरेको दृश्य र आवाजका निम्ति आवेगमय आसक्तिको प्राचुर्य्य—हिमपूर्ण धौलाधार, तृणहरित पहाड़हरू, गीतांगे खोलानालाहरू, सुस्केरा छोड्ने धूपीका रूखहरू, कुकु-कुकु गर्ने कुक्कुहरू, जुनेली रातमा संगीत भर्ने कीराहरू, सुन्दरी युवतीहरू र साहसी युवकहरू, होली, लोहड़ी र मेलाहरू र मल्ल-युद्धहरू, कुञ्जु, चैनचलो, बाबु र ईशारीका प्रणय-गीतहरू र चिया-पसले र गरीब श्रमिक स्त्री, गोरी र देवर बीचको प्रेमस्फुरण, टाढ़िएको प्रेमीसितको वियोग-व्यथा, उत्कण्ठा र आशा अनि झरीको अँध्यारा रातहरू र हिउँदको जाड़ोमा प्रेम प्रज्वलनमा विस्मयरूपी चेतनाको सादृश्यता छ । विषय र शैली दुवैमा दुइ कविका कविताहरू लोक गीत जस्तै छन् अनि तीमध्ये धेरै जसो लोकप्रिय डोग्री लोक-गीतहरूद्वारा अनुप्रेरित र तिनीहरूका ढाँचामा ढालिएका

छन् । भाषा, कांगड़ा र हिमाचलका वरपरका क्षेत्रहरूमा बोलिने सरल डोग्री छ। व्यथितका कविता र गीतहरूमा पहाड़ी खोलाको जस्तै प्रवाह र संगीत छ। यो गुण गुलेरीका कवितामा उति स्पष्ट छैन ।

५

१९६० मा डोग्री लघु कथाको क्षेत्रमा १२५ नयाँ कथाहरू र २० वटा नया नामहरू देखाहृ परे। अघिल्लो दशकको छ जना लेखकहरूले लेखिरहे, तीमध्ये एक जनाले बढ़ीभन्दा बढ़ी ३० कथाहरूले योगदान दिए तर २० जना नयां लेखकहरूमध्ये १३ जना प्रत्येकको एकेक कथाभन्दा बढ़ी प्रकाशित भएन ।

डोग्री लघु कथाका अग्रदूत, बी० पी० साठेले केवल पाँचवटा कथाहरू लेखे—ग्रामिण डुग्गर विषयक दुइवटा अनि बम्बई, मद्रास र वैष्णव देवीका आफ्ना यात्रा विषयक तीन वटा। ग्रामिण डुग्गरका कथाहरू—'पारोख' र 'मसाहनी'—तिनका 'पेहला फूल' को उत्कृष्ट अनुकरणीय शैलीमा छन् अनि पाठकको हृदयमा गहिरो प्रभाव पार्दछ, विशेषतः रहमत बिबि अनि वाचकसित उसकी गहिरो स्नेहलाई दीगो पार्ने चित्रण जीवन्त छ । अन्य कथाहरू निकृष्ट छन् अनि लेखक आफ्ना विषय प्रयोगमा निश्चित छैनन् ।

प्रशान्तका नया कथाहरू पनि शिल्पमा विषम छन् अनि ती स्वच्छन्द प्रेम ['चयनचलो', 'उचियां धारां र 'अखर मिस्दे गे'], भारत-पाक संघर्ष ['मलाइम हाथ'], घरेलु तनावहरू [झुम्के] र वीरतापूर्ण विगतका पौराणिक कथाहरू वा केही अर्द्ध ऐतिहासिक घटना आदि विषयहरूमा श्रेणी विभक्त छन् । 'खिरली बल' को जस्तो विषयले तिनलाई लोभ्याउँछ अनि यथार्थिक र मनोवैज्ञानिक वर्ताविको आवश्यकता चाहिने समकालीन समाजको समस्याहरूभन्दा स्वच्छन्द, विगतका वीरताका पौराणिक कथाहरूका विषय प्रयोग राम्ररी गर्न सक्छन् । द्विविधाको कथा र रहस्यको वातावरण सृष्टि गर्न यथार्थ र कल्पना, इतिहास र पौराणिक कथा सुहाउँदो प्रकारले संयुक्त गराउन सक्ने क्षेत्रमा उनी रमाउँछन् । 'उचियां धारां' का कथाहरू त्यस प्रकारका छन् ।

वेद राही एक जना बढ़ी इमान्दार र यथार्थवादी कथाकार र उत्कृष्ट [पूर्ण] कलाकार हुन् । यो दुःखको कुरो हो कि हिन्दी लघु कथाद्वारा आकर्षित भएकोले यो दशकमा उनले डोग्रीमा केवल दुइवटा लघु कथाहरू मात्र दिए। दुइमध्ये 'आले' असल हो। यो एउटी वृद्धा अन्धीं स्त्रीको कथा हो जसलाईशत्रु आक्रमणको अघि गाउँ छोड़ेर भाग्ने गाउँलेहरूले एकलै छोड़िराख्छन्। हातमा लौरी लिएर उ यता-उता जान्छे, आफ्ना परिचित सबैलाई बोलाउँछे तर कसैबाट पनि जवाप पाउँ-दिन । उसकी असहायपनको चित्रण उसकी रोदन-क्रन्दन सुनिदिने कोही नभएको गाउँको असहायपनको प्रतीकस्वरूप छ । गाउँको सम्पूर्ण जीवन-कथा त्यो वृद्धा

स्त्रीको असम्बद्ध गन्थनद्वारा खुबै हृदयस्पर्शी प्रकारले उद्घाटित हुन्छ।

रामकुमार अब्रोलका पांच लघु-कथाहरू, डुग्गरका सामाजिक समस्याहरूसित तिनका पूर्वाग्रह, तिनका आदर्शवाद र आग्रहका केही उद्देश्य प्रदर्शित गर्दै उही पुरानो झुकावमा छन्। यो वाचकप्रति राजकुमारीको प्रेम वर्णित 'चित्तरकार', भारतप्रति गोवाको एउटा युवको प्रेम र त्यो युवाप्रति एउटी सुन्दरीको प्रेम वर्णित 'रंगले हाथ' अनि प्रेमावेग सम्बन्धमा एउटी विदेशी र डोग्री युवतीको विरोधाभास वर्णित 'सावत आदमी' जस्ता कथाहरूमा स्पष्ट छ।

यो दशकमा नरेन्द्र खजुरिया र मदन मोहन शर्माले डोग्री लघु कथामा सबैभन्दा बढ़ी योगदान दिए। नरेन्द्र खजुरियाका कथाहरू दुइ संकलनमा संकलित छन्—'नीला अम्बर ते काले बादल' र 'रोचक कहानियां' अनि मदन मोहनका 'चाननी रात' र 'तारें दीं लो' मा छन्। तिनीहरूका केही कथाहरू पत्रिकाहरूमा पनि छापिए।

नरेन्द्र खजुरियाले 'रोचक कहानिया' मा नयाँ प्रयोग ल्याए—१३ वटा बालकथाहरूका संकलन, जसका पात्र-पात्राहरू नानीहरू, विषय नानीहरूका रुचि (स्वार्थ) र नानीहरूका विश्वासको संसारती कथाहरूका भावभूमि छन्। अध्ययनप्रति निष्ठा (कमल र प्रकाशको जस्तै), साहसिक कार्यको उत्साह (अफजल, अशोक र मुन्शीका जस्तै), वीरता (तारक, मोहन, जगबहादुर र प्रेमका जस्तै), ज्ञान र विवेकको श्रेष्ठता (मोहन, सोहना र किश्नुका जस्तै) अनि सत्य र पूर्णताको निम्ति श्रद्धा (अशोकको जस्तै) प्रति प्रकाश पार्दै नानीहरूका निम्ति गुलियो लगाइएका पाठ्य-चक्की प्रदान गर्ने हेतु हुनाले ती उपदेशात्मक कथाहरू छन्। तीहरूमा पठनीय गुण पनि छन्।

'नीला अम्बर ते काले बादल' का कथाहरू अनि पत्रिकाहरूमा प्रकाशित कथाहरू बढ़ी गम्भीर छन् अनि आफ्ना सामाजिक स्थितिसित जुध्ने लेखकको प्रयास दर्शाउँछन्। देशभक्तिको भावना र देशको निम्ति उत्सर्गसित सम्बन्ध राख्ने 'नाटक दा हेरो' र 'मा तू लोरी गा' अनि प्रेमिकाको निम्ति बलिदान विषयक र विगतका सम्झनामा बाँच्ने 'पैंछी पारतोए पार' र 'कास्तू दा काला तित्तर' जस्ता केही कथाहरू संवेदनशीलतामा ज्यादै डुबेका छन्। हालिमा विषयको कथा त्यही सदृश्य छ। 'मकदे लोरे सइलियां बुतियां', 'सच झेरा त्रामे दे पतेपर नेईं लखोआ', 'नीला अम्बर काले बादल', 'अपना अपना धरम', 'सद्दरो ढाई' र 'धुयें आला अन्दर', जस्ता कथाहरूमा बढ़ी सामाजिक अवचेतना र मनोवैज्ञानिक हितसित संयुक्त उत्तम शिल्पका प्रमाण छ। यी कथाहरूमा, बदलँदो सामाजिक परिवर्त्तन अनि जागरूकता, पुराना व्यवस्थित मान्यताहरूसित नयाँ चुनौती र मान्यताहरूका संघर्ष अनि आशा र सपनालाई चकनाचूर पार्ने जीवनको यथार्थता देखिन्छ। 'इनामी काहनी', 'एक सम्हाल', 'कवता दा अन्त' र 'एक

पत्तर पतझड़ दा' सायद नरेन्द्र खजुरियाका यो दशकको उत्कृष्ट कथाहरू हुन्। सामाजिक उद्देश्य, मनोवैज्ञानिक हित र असल शिल्प बाहेक ती चरित्र-चित्रणमा पनि सुन्दर छन्। 'इनामी काहनी' को प्रेमु र 'एक सम्हाल' को नानी खुबै कोमल र स्नेहपूर्ण चित्रित पात्रहरू हुन् जो पाठकको स्मृतिमा बाँचिरहन्छन्। 'कवता दा अन्त' को पात्रा कवता त्यस्तै एउटी कोमल हृदया स्त्री हो, जो काला बाजारको निम्ति थुपारिएका बोराहरूद्वारा पुरिइन्छे। 'एक पत्तर' को कथा-वाचक पनि त्यस्तै एउटा बुद्धिमान स्वतंत्र-प्रेमी युवक हो, जो एउटा घिनलाग्दो एक-आंखे लम्पट युवक दुलहाको प्रतिनियुक्ति गर्दै एउटा अनैतिक कामको सम्भागी बन्छ। यी अन्तिम दुइ कथाहरूमा प्रतीकवाद र अर्थ-गम्भीरताको गुण छ। कवत्ताको भाग्य व्यवसायी प्रतिस्पर्धाको समाजमा कलाको भाग्य हो। दुर्भाग्यवश, 'एक पतर' को कथा वाचकको भूमिका धेरै बुद्धिजीवी, वैज्ञानिक, लेखक, घृणास्पद कार्य गर्ने उच्च अधिकारी, असंदिग्ध छली राजनैतिकहरूले खेलेका भूमिका हो। भावुकता र मनोवैज्ञानिक जाँचलाई घेरा मार्ने गहन मानवता नै यो दशकको मदन मोहन शर्माका कथाहरूका मूल भाव-भूमि हुन्। तर शिल्पको दृष्टिले तिनीहरू तिनका गत दशकका कथाहरूभन्दा धेरै विशिष्ट छन्। 'चार बुड्ढे चार परियां' जस्तो क्षुद्र व्यंग कथामा पनि तिनी वृद्ध मानिसका हृदयमालुप्त कामेच्छा का पत्रहरू खुलस्त गर्ने प्रयास गर्छन्। 'O' ले अनावश्यक नानी हुनुको मनोवैज्ञानिक प्रतिक्रियासित सम्बन्ध राख्तछ—नानीप्रति अपराधबोध र स्वयंप्रति तिरस्कार। 'पथरी' ले अस्पतालमा शल्य चिकित्सा पर्खिरहेकी एउटी स्वास्नीमानिसको मानसिक कार्य कलाप र त्यहांको वातावरणद्वारा उद्भुद भय र चिन्ताका चित्रण गर्छ। 'मेरी गली दा पाप', (एउटी दरिद्र विधवी क्षिमेकी स्त्रीको एक मात्र पुत्री-लाई भूलले कालो रंग पोतिएको), 'कूहक', (अवकाशप्राप्त गर्न लागेको अधिका-रीको चिन्ता र व्याकूलता), 'चार थम्म चुरासी बरगे' (साथीको विवाह र आफ्ना अन्य विवाहित साथीहरू हेर्दा बस छुटेकी केटीले आत्महत्याको निरर्थकताको बुझाइ) 'पाहारी कां' (एउटा पहाड़ी ग्वाला केटोप्रति नोकर्नीको प्रेम प्रदर्शन र केटालाई पर्वतको आह्वान), 'नन्द शाह दी बिल्ली' (नानी प्राप्तिको गुप्त इच्छाले प्रभावित पसलेको व्यवहार वर्णन), 'लालटैयां' (लालटेनवालाको जीजिविषा), 'दो लफाफे' (प्रथम पल्ट घुस पाउँदा मनोवैज्ञानिक प्रतिक्रिया) अनि 'दहौन्द अम्बर उल्लरदी बान्ह' (प्रेममा असफल दुःखी अधिकारीको मानसिक मनोवैज्ञानिक क्रिया कलाप, बाल्यकालको दरिद्र सायोसितको पुनर्मिलन जसले हाँस्दै-हाँस्दै कठिन वेदना र करुण परिस्थितिहरू झेलेको छ र झेल्दै छ) मदन मोहनका अन्य मनो-वैज्ञानिक कथाहरू हुन्। शहरिया जीवनका कथाहरू धेरै छन्। तैपनि, 'कनका दे सिट्टे' र 'जोआरी दा फुल', मा कथाकार गम्भीर प्रेम र स्थायी स्वामीभक्ति खोज्न डोग्रा गाउँलेको हृदय चियाउने चेष्टा गर्छन्। 'चाननी रात' र 'तारें दी

लो' का भावभूमि पनि ग्रामिण डुग्गर छ र तिनीहरूमा चन्द्र ज्योति र तारा ज्योतिले मानव-हृदयमा रहस्यमय प्रकारले गरिरहेको काम को जादु गीति रूप र स्वच्छन्द-रूपले वर्णन गरिएको छ। 'मुन्दु' एउटा डोग्रा पहाड़ी घरेलु नोकरको कथा हो। 'सुरज सद्धरो दा', 'सिप्पी-विजन मोती' र 'मुन्सामरवी' पनि ग्रामिण डुग्गरमा सजाइएका छन् तर महत्व डोग्रा नारीत्वमाथि छ—सद्धरोमा आदर्शमूर्त र 'सिप्पी विजन मोती' का दुई स्त्रीहरूमध्य रूपले यथार्थिक र वास्तविक विषय छ(तित्तरू र उसकी बुहारी)र 'मुन्समरवी' को गगरी मा। गाउँका ठालूहरूद्वारा अन्याय गरिएको 'जल्ली' की एउटी बहिरी र गुंगी केटी डोग्रा ग्रामिण समाजप्रति एउटा प्रभावशाली अभियोग हो। 'रानीजी' की विधवी रानीसंगं स्थिति शहरमा पुग्छ जुन चरित्र-चित्रणको एउटा असल नमूना हो।

मदन मोहनको शैली सरल र प्रभावशाली छ 'चाननी रात' र 'तारें दी लो' जस्ता कथाहरूमा केही अवतरणहरू गीति गुणयुक्त हुनु बाहेक तिनको भाषा अलंकारहीन र कार्यात्मक छ। केही सामाजिक र मनोवैज्ञानिक समस्याहरूका सञ्चालन खुबै सुन्दर छ अनि 'पथरी', 'जल्ली', 'नन्द शाह दी बिल्ली', 'सिप्पी-विजन मोती', 'मेरी गली दा पाप', र 'O' यस दशकका सर्वोत्तम कथाहरूमध्येका हुन्।

६

'धुखदे गोहटे' का नौवटा, 'ठरमां रोज' का तीनवटा र डोग्री पत्रिकाहरूमा प्रकाशित दुइवटा मोठ १४ कथाहरूका सबैभन्दा बढ़ी योगदान दिनेयो दशकको नवोदित लघु कथाकारहरूमध्ये नरसिंह देव जम्वाल हुन्। यीमध्ये चार कथाका पृष्ठभूमि १९६५ को भारत-पाक संघर्ष छ, चारवटाका स्थानीयता शहर छन् अनि छ वटा ग्रामिण डुग्गरका जीवनसित सम्बन्धित छन्। सबै कथाहरू एउटा उद्देश्यले लेखिएको देखिन्छ अनि डोग्री भाषामा डोग्रा पात्रहरूद्वारा डोग्राहरूका संस्कृति, तिनीहरूका स्वार्थ-त्याग र सामाजिक विकारहरूका प्रस्तुति लेखकको एक मात्र स्पष्ट उद्देश्य हो। भारत-पाक संघर्षका कथाहरू खुबै सीमित हित र मूल्यका छन्। तर तिनका अन्य कथाहरू आफ्ना घोषित उद्देश्यप्राप्ति दिशातर्फ सन्तोषजनक छन्। यी कथाका पात्र-पात्राहरूका हृदयमा अन्तर्जलन छ अनि कथाकार त्यसको गहिराइ शब्दले माप गर्ने प्रयास गर्छन्। आफ्ना जीवनमा प्रेम र स्नेहको अभावलै जमादार भित्र भित्रै जल्छ, एक शहरिया परिवार घरेलु शान्तिको निम्ति तड़पन्छ, अनि एउटा ग्रामिण परिवार दुइ दाज्यू—भाइका पत्नीहरूका झगड़ा रकलह हुँदा हुँदै पनि शान्ति कायम गर्ने संघर्षरत छ। आफ्ना पति र परिवारको नाम र मर्यादाको चिन्ताले नैनी पिरोलिन्छे, मेजर कपूर भ्रष्टाचारको परिणामको भयले व्यग्र छ। पुष्पको हृदयमा प्रेमको अवशेष छ, किरपूको हृदयमा पश्चातापको ज्वाला

छ अनि पतियानीको क्षीण नातामा प्रतिवादको अशान्ति छ। चित्रणको प्रयास सुवांछित छ तर कथाहरू गठनको शिथिलता, संवेदनशीलताको तत्व र साहित्यिक नियमका न्यूनताले ग्रसित छन्।

श्रीवत्स वकिलले पत्रिकाहरूमा छ वटा कथाहरू प्रकाशित गरे। एउटा अनुशासित छोरोको चरित्र-चित्रण प्रयास गरिएको 'सोहनु' र एउटा वृद्ध मानिससित विवाहित एउटी तरुणी केटीको दुःखमय कथा 'दरटी दा फट्टा' सुगठित र प्रभावशाली छन्। अन्य चार कथाहरू (जसमध्ये दुइका मूल पात्रहरू बालक छन्) उति राम्रा छैनन्। अर्कोतिर, चञ्चल शर्माका चार कथाहरू उच्च स्तरका छन् अनि आफ्ना कथाका विषयानुकूल वातावरण सृष्टि गर्ने कुशलता तिनमा छ। 'भूत चड़ेलां तो दैनीं' मा निर्जनस्थानमा एकलो पथको वातावरण, पथिकको हृदयमा भयको प्रभाव संक्षिप्त र सरल चित्रणमा प्रभावपूर्णरूपमा सृजित छ, 'बद्री माली' छिन्जा (मल्ल युद्ध मेला) अनि शहरिया मल्ल योद्धासित ग्रामिण मल्लयोद्धाको भीड़न्तप्रति गाउँलेहरूका भावनाको एउटा असल चित्रण हो; एउटा प्रेमविह्वल मानिसको हृदयको मनोवैज्ञानिक वर्णन हो 'मिट्टी दी खदाल', अनि 'गूड़े रंग' इन्द्रधनुषी पृष्ठभूमिमा एउटा गरीब किरानीको घरेलु दृश्यको सुन्दर रेखाचित्र हो। ओम प्रकाश शर्मले पनि आफ्ना तीन कथाहरूमा संकल्प दर्शाउँछन्—'सलामती ताईं' (शहरका जमीन्दारका हृदयहीन र व्यापारिक हृदय जसको फलस्वरूप एउटा काश्मिरी श्रमिकको तरुणा छोरीको मृत्यु हुन्छ, को कथा), 'लाम' (युद्धका विभीषिका दर्शाउने) अनि 'सुक्का वारूद' (एउटा गरीब कृषक र उसको आत्महत्याको कथा)।

रामनाथ शास्त्री, कवि स्वर्णकार (जो अल्पायुमै स्वर्गवास भए) अनि बन्धु शर्माले यो अवधिमा डोग्री पत्रिकाहरूमा प्रत्येकले दु-दुईवटा कथाहरू दिए। शास्त्रीको एउटा कथा 'गरजदे बद्दल ते मिलकदी बिजली' ले डुग्गरका सहाड़ी इलाकामा प्रचलित बेमेल विवाहको परिणामसित सम्बन्ध राख्तछ। कथा उपदेशात्मक छ र कथाकारको स्वरमा भर्त्सना र प्रतिवाद छ। तिनको दोस्रो कथा 'त्रिया अखण्ड पाठ' ले मानव हृदय परिवर्तन गराउन गुरुको शब्द शक्ति देखाउने प्रयास गरेको छ। एउटा कम आय भएको चौकिदारको पूर्ण पवित्रता र उदार हृदयको वर्णन र अर्को एउटी निष्ठावान पत्नीको मौन वेदनाका वर्णन गरिएका स्वर्णकारका दुईवटा कथाहरूका स्वरमा आदर्शता छ। बन्धु शर्माका कथाहरू—'परशामे' र 'लीकर ते पुल' मा मनोवैज्ञानिक पुर छ अनि 'परशामे' एउटी वृद्धा स्त्रीको आफ्ना शालप्रतिको आसक्ति दर्शाउने सुन्दर कथा हो।

प्रसिद्ध उर्दू लघु कथाकार, ठाकर पून्छीको एकमात्र डोग्री कथा 'बरफ दे अथ्रू' एउटा सुपारी विक्रेताको सुन्दर चरित्र चित्रण हो। डोग्री कविहरू, मोहनलाल सपोलिया, चरण सिंह र यश पनि लघु कथामा तैरिए अनि प्रत्येकले

एकेक कथा लेखे। सपोलियाको कथा 'चूहे दी मौत' व्यंगपूर्ण र लाक्षणिक छ। चरण सिंहको 'कल्पना' कल्पनासित यथार्थको संघर्षद्वारा आत्म-विवेचनाको एउटा राम्रो नमूना हो। यशको 'खाली पेप्पे' एउटा किरानीको असहायपनको चित्रण हो।

यो दशकमा एक-एकवटा कथा दिनेहरू हुन् नीलाम्बरदेव शर्मा (पाहुड़े दी कहानी), गोपिनाथ कौशिक (सुखना), मदन सिंह ठाकर (सुर्ग सीड़ही), कृष्ण दत्त पध (शम्भू दी बां), विजया सुमन (श्रीमानजी), कुलदीप सिंह जम्वाल (बढ़ी सुआरी), कीमति लाल विजया (मूर्ति), कृष्णलाल मोदी (फैसला) र प्रकाश गोस्वामी (राजपरत) यी नवोदित कथाकारहरूलाई एक-एक कथाको आधारमा मूल्यांकन गर्न कठिन हुन्छ। तर तिनीहरूमा संकल्प छ र तीमध्ये कोहीले नीलाम्बर र प्रकाश गोस्वामीका कथाहरूमा जस्तै डोग्रा समाजको सामाजिक समस्याहरूप्रति तीव्र बोध र ती समस्याहरूलाई कलात्मक ढंगले प्रस्तुत गर्ने र सामाजिक विकारहरू र असमानताहरूलाई मर्मज्ञ प्रकारले जिज्ञासा गराउने योग्यता दर्शाउँछन्।

७

नाटकहरू र एकांकीका क्षेत्रमा दुई पूर्णांकी नाटकहरू, हिन्दीका अनुदित दुई पूर्णांकी नाटकहरू, टेगोरका तीन लघु नाटकहरू, छ रेडियो नाटक लगायत १७ वटा एकांकीहरू र सातवटा एकांकी नाटकहरू शिशुहरूका निम्ति थपिए।

दीनू पन्तका 'सरपञ्च' र रामकुमार अब्रोलका 'देहरी'—दुई मौलिक डोग्री नाटकहरू—ग्रामिण डुग्गरका भूमिमा छन्; अघिल्लो सचाइ र न्याय चेतनाको निम्ति प्रसिद्ध दाता रनूको चरित्रमा केन्द्रीभूत छ, अनि पछिल्लोले गाउँको मुखिया र धनीवर्गले गरीबको शोषण गर्ने पुरानो जमीन्दारी प्रथाको विरुद्धमा विद्रोह गर्ने एउटा आदर्शवादी युवकको वर्णन गर्छ। दाता रनू बावा जित्तु जस्तै छ। मुखियाको विरुद्धमा न्यायपूर्ण निर्णय दिंदा उसले मुखियाद्वारा घुस थाप्न अस्वीकार गर्छ अनि उसको क्रोधसित डराउँदैन; यसको मूल्य उसले आफ्नो जीवनले चुकाउंछ तर ३ शहीद बनेर स्थानीय दन्त्यकथामा आजसम्म जीवित छ अनि उसको समाधि पनि जित्तुको शहीदस्मारक जस्तै तीर्थस्थान बन्छ। कथानक दुर्बल छ अनि यो नौवटा दृश्यमा विभाजित छ। आदर्शवाद र उपदेशात्मक आग्रहले संवादको प्रवाहलाई नष्ट गरिदिएको छ र चरित्र चित्रण स्वाभाविक विकासको अभावले ग्रसित छ। नाटक डोग्रा लोककथाको एउटा वीरको अनुकूल प्रतिमूर्ति उभ्याउने वांछाले प्रेरित भएको स्पष्ट छ। अब्रोलको 'देहरी' पनि आदर्शवाद, भावुकतावाद र चरित्र-चित्रणको शिथिलताले ग्रसित छ। लेखकको आफ्नै लघुकथाको विषय नाटकको विषय छ र त्यहाँ गाउँको

मुखिया चौधरीलाई अंध्यारो र विद्रोहका पताकावाहक शमुलाई उज्यालो रंग दिने प्रयास छ। चौधरीले शमुकी बहिनी बेलालाई आंखा गाड्छ, उ जान्दछ शमुको पितालाई उसको ऋण छ र शमुले चौधरीकी झड़केलो छोरी राधालाई प्रेम गर्छ। चौधरी यो स्थितिको फायदा उठाउन चाहन्छ; बेलाको विवाह आफूसित गरेर उ शमुलाई राधासित विवाह गर्न दिन्छ। शूभु आफ्नो तरूणी बहिनीलाई एउटा वृद्ध मानिससित दिन तयार छैन। बरू उ पर्खन्छ, धेरै अन्न फलाएर ऋण तिर्न कठोर परिश्रम गर्न तयार हुन्छ। आफ्नी बहिनीलाई विवाह गर्ने चौधरीको मांग उसको निम्ति आत्म-सम्मानको एउटा चुनौती बन्छ अनि चौधरीका अभिकर्ताहरूले उसलाई नमारिञ्जेल उ संघर्ष गर्छ। तर, उसको मर्यादा बचाइन्छ। चौधरीलाई गिरफ्तार गरिन्छ, तर राधा, उसकी प्रियतमा पगली बन्छे अनि गाउँलेहरूले शमुको नाममा एउटा 'देहरी' निर्माण गरिदिन्छन्। रामकुमार अब्रोल दुई विषयहरूमा सचेत देखिन्छन्—'दोहरी' (साटासाटद्वारा विवाह) कुप्रथाको भर्त्सना अनि पुराना जमीन्दारीको विरुद्धमा आत्माभिमानी कठोर परिश्रमी युवकको विद्रोह, तर, नाटकमा तिनीहरूलाई समन्वय गर्नु तिनी सफल आन्तरिक बनेका छैनन् अनि नाटकका पात्र-पात्राहरू केवल तिनका विचारका प्रवक्ता र आफ्ना व्यक्तित्वहीन जीवन्त देखिन्दैनन्। नाटकमा मिलान छैन।

धर्मवीर भारतीको 'अन्धा युग' र मोहन राकेशको 'आषाढ़का एक दिन' दुई सफल हिन्दी नाटकका डोग्री अनुवादको तुलनामा यी नाटकहरू निम्न स्तरका देखिन्छन्। गान्धारीको श्राप र कृष्णको मृत्युसित सम्बन्धित 'अन्धा युग' हिन्दी मूलसहित गद्य कवितामा छ र यसको सन्देशमा समकालीन अन्ध युगको अनुरूपता छ। 'आषाढ़ का एक दिन' को अनुवाद 'मल्लिका', कालिदास र उसको यौवन—ज्वाला, मल्लिकाको एउटा स्वच्छन्दवादी र भावुक नाटक हो, जसलाई (मल्लिका) कालिदासका महान नाटकहरू र उसको सुन्दर काव्य 'मेघदूत' का नारी पात्राहरूका प्रेरणा मानिन्छ। दुवै अनुवादहरू सन्तोषजनक छन्।

डोग्रीमा अनुदित रवीन्द्रनाथ ठाकुरका तीनवटा नाटकहरू 'विसर्जन' (डोग्रीमा 'बलिदान') 'डाक घर' र मालिनी' हुन्। ती ठाकुरका नाटकीय कार्यको पर्याप्त रूपमा अभिकर्ता हुन् र ती डोग्री भेषमा स्वाभाविक देखिन्छन्।

यो अवधिमा प्रकाशित १७ एकांकीहरूमध्ये ६ वटाका पृष्ठभूमि युद्ध छ। प्रशान्तका 'वीर जोरावर' जनरल जोरावरको ल्हासा युद्ध अभियानसित सम्बन्धित छ अनि अरूहरू क्रमैसित १९६२ र १९६५ का चीन-भारत र भारत-पाक संघर्षहरूद्वारा प्रेरित छन्। 'वीर जोरावर' अनि कवि रत्नाको 'मोर्चे उपर' नरसिंह देव जम्वालको 'आं मर्यादा' यशको 'हीखियां' र मदन मोहनको 'नीच' जस्ता नाटकहरूमा डोग्राका शौर्य र आत्माभिमान अनि स्वार्थ-त्याग र देश-

भक्तिको भावना छन्। अन्तिम नामको नाटक द्विविधापूर्ण छ। जीतेन्द्रको नाटक 'कर्त्तव्य' र रामनाथ शास्त्रीको 'वरण्डी' ले युद्धमा शहीद बनेका वीरहरूका तरुणी विधवाहरूका पुर्नविवाहको समस्यायाई प्रकाश पार्छ र आफ्ना देवरहरूसित विवाह गर्ने समाधानको सुझाव दिन्छ। यी नाटकहरूमा चरित्र चित्रण कमजोर छ अनि पात्र-पात्राहरू प्रत्यक्षत: लेखकको विचारको वाहन भएका छन्।

रामनाथ शास्त्रीको 'नाथी दा होटल', नरेन्द्र खजुरियाको 'ऐतवार दी सैर', 'अपने पराये', र 'प्यासी धरती', विश्वनाथ खजुरियाको 'घुन्डियां' र मदन मोहनको 'माउती दी छामा हेठ' र 'सड़इं' सामाजिक विषयका नाटकहरू हुन् अनि शहरिया डोग्राहरूका दैनिक जीवनका रोचक उपघटनाहरू र केही विशिष्ट पात्र-पात्राहरूका मानसिक प्रतिक्रिया प्रस्तुत गर्छन्—एउटा सानो शहरको होटल मालिक, एउटा किरानीको परिवार, एउटा अवकाशप्राप्त शिक्षक, आफ्नै समुदायको एक गरीब परिवरसित संगै बस्ने अवकाशप्राप्त अधिकारी र तिनकी पत्नी, वृद्ध व्यक्ति, र तिनकी शिक्षित बुहारी, जसका छोरो बाजेप्रति आसक्त छ र ससुरा-बुहारीका आग्रहमा विरोधिता छ; हीनता-बोध, नैराश्य र काल्पनिक असहायपनद्वारा ग्रसित किरानी, अर्थहीन फुरसद, विषय सुख, नैतिक अधोगति-व्याप्त आफ्नै सामाजिक घेरोको विरुद्धमा विद्रोह गर्ने एउटी स्त्री।

मधुकरको 'लेहरां' कञ्जु र चैनचलोको प्रेम-कथा मायिको काव्य-नाटक हो, जसको विषय लोकप्रिय लोककथा छ; कथानक कमजोर छ तर मधुकर यसलाई सांगीतिक स्वरमा बुनेर असल परिणाम प्रदान गर्न सफल बनेका छन्। जीतेन्द्रको 'न्हेरे दी तानी, सन्जोगे दे मेले' डब्ल्यू० डब्ल्यू० जेकोबको एउटा कथाको रूपान्तर हो अनि यो पुष्ट र प्रभावशाली छ।

नरेन्द्र खजुरियाको 'अस भाग जगाने वाले आं' शिशुहरूका निम्ति लेखिएको सातवटा एकांकीका संकलन हो। यी नाटकहरूका नानीपात्राहरू वा चरा-हरू र पशुहरू छन् अनि उद्देश्य उपदेशात्मक छ। 'बुद्धुराम' ले एउटा पछौटे केटोको पुर्नर्व्यवस्थाको समस्यासित सम्बन्ध राख्तछ। त्यस्तै प्रकारले यी नाटक हरूमध्ये एउटाको मूल पात्र, मोहन, भकभक गर्ने एउटा विकलांग केटो हो। अरूहरूमा आत्म-निर्भरता र समयनिष्ठा, र पाठशालामा नियमित उपस्थितिका शिक्षाहरू छन् अनि अझ अरूहरूले नकली लोकसभा र शिशुहरूका साहसिक कार्यहरूका वर्णन गर्छन्। नाटकहरू सरल र रोचक छन्।

८

तीन लघु उपन्यासहरू—मदनमोहनको 'धारां ते धूड़ां', नरेन्द्र खजुरियाको 'शानो' र वेद राहीको 'हार, बेड़ी, ते पत्तन' संगै यो दशकमा डोग्री उपन्यासको प्रादुर्भाव भयो। ती गत दशकका तीन खुबै सफल डोग्री लघु कथाकारका कृति

थिए। तिनीहरूमा ग्रामिण डुग्गरका समस्याहरू समाधानका एउटा सुविवेचित प्रयासको छाप छ अनि सामाजिक भावभूमिअनुरूप छन्। वर्ग वैभिन्यतामा आधारितपुरानो जमीन्दारी सामाजिक व्यवस्था सम्पन्न वर्ग, गाउँका मुखियाहरू, साहूहरू गरीबको शोषण, मानव महत्ता, समानता र स्वतन्त्रको नव-सामाजिक मान्यताका बढ्दो सचेतता, खोक्रो सामाजिक व्यवस्थाको दृढ़ पर्खालमा प्रहारका चित्र उत्रन्छ। उपन्यासहरूमा केही अनिपुणता छ, तुलिका सांधुरो छ अनि नारी पात्राहरू अझ आदर्शोन्मुख छन्, तर प्रयास प्रशंसनीय छ, उपन्यासहरू पठनीय र रोचक छन्।

'हाड़, बेड़ी, ते पत्तन' डुग्गरको मध्यमा मनसर-सरूइंसर अञ्चलको एउटा गाउँ, मध्यमा यसको मञ्च छ। ताविको तीरमा ठक्करहरूका एउटा गाउँ छ। दोस्रो विश्वयुद्धको अन्तसाथै एउटा सिपाही रमलू ठक्कर एउटा खुट्टा गुमाएर गाउं फर्कन्छ, जहाँ उसको जमीन आफन्तहरूले ओगाटिसकेको हुन्छ। केही मुद्दा पश्चात् उसले त्यसको एक भाग फिर्ता पाउंछ र आफ्न समुदायकी एउटी बुद्धिमती केटी-लाई विवाह गर्छ। तर, एउटा छोरो जन्मनासाथ उ मर्छ। उसकी पत्नी मायाले त्यो जमीन र छोरी रनूको हेरचाह गर्छे तर रनू नौ वर्ष मात्र पनि नपुग्दै उ पनि मर्छे। आफन्तहरूले त्यो जमीनमा आंखा गाड़ेको हुन्छ तर मायाकी सखी कुन्तोले रनू र उसको जमीन हेरचाह गरिदिन्छे। उसलाई बदनाम गर्ने आफन्तका षड्यन्त्रलाई उ सामना गर्छे। उ पनि मर्छे अनि रनुका पिताको लोभी निर्दयी साथीले आफ्ना कलिलो छोरी एउटी केटीसित साटासाट गर्ने र रनुको जमीन लैजाने चेष्टा गर्छ तर त्यसको योजना माया र कुन्तोका निम्न जातको एक जना हितैषी छिमेकी खैरूले, ग्राम सेवकको सहायताले निष्फल बनाइदिन्छ अनि उसले शहरमा रनुको शिक्षाको व्यवस्था गरिदिन्छ। उपन्यासको कथानकको विकास स्वाभाविक छ, भाषा सरल र वाग्धारापूर्ण छ। कथानकमा वर्ग शोषणको सामाजिक विकारको भर्त्सना र साटासाटद्वारा विवाह प्रथाको विषयको एकीकरण प्रवाहमय छ।

'शानो' एउटी साहसी, उत्साही र साधनपूर्ण गृहिणीको कथा हो जो विषम परिस्थितिमा पनि आफ्नो हार स्वीकार्दिन। उसको लोग्ने शंकरले एउटा खुट्टा गुमाउंछ र भय र मनोवैज्ञानिक विकारग्रस्त बन्छ तर उसले पतिलाई प्रेम, श्रद्धा, आशा र आत्म-विश्वास दिन्छे। सिलाइ-बुनाइबाट आर्जित रकमले उ एउटा फल-बघैंचा लगाउने योजना बनाउँछे, तर गाउंका ठालूहरू—सरनु शाह र मेहती बजि कसैलाई आत्म-निर्भर र प्रतिष्ठित रूपमा देख्न सक्तैनन् अनि शानोका सिलाइ-मशीन र फल-बघैंचा खोस्छन् र तिनीहरूका घर पनि छली, ईर्ष्यालु शाह र मेहतोले जलाइदिन्छन्। निर्धन र भोकी शानो अरूका निम्ति काम गर्छे, फाल्तु कामहरू गर्छे तर हतोत्साहित बन्दिन। उसको लोग्ने कुसंगतको

शिकार बन्छ, मद पिउन थाल्छ र पत्नीलाई सन्देहको दृष्टिले हेर्न थाल्छ, तर उसले पतिलाई त्यसबाट धैर्य्य र पट्ताले विमुख गराउँछे, जब गाउँमा बाँच्न असह्य हुन्छ तब उसले आफ्ना पति र छोरासित गाउँ परित्याग गर्छे। शानो र उसका पति दुबैले काम पाउँछन्, केही रूपिया बचाउँछन् र साहू देखि आफ्ना फल-बघैंचा फिर्ता लिन फर्केर आउँछन्। आदर्शवादी पात्र सृजनार्थ परिस्थिति र कथानकलाई ढाक-छोप गरिएको छ। अरू सबै पात्रहरू शानोका पति पनि ओझेल छन् अनि सत्यताको घेरो बाहिर छन्। सबै विषयमा कृत्रिमताको छटा, झूठा उपमाहरू र मिष्ट संवेदनशील अवतरणहरू विशेषत: कर्कश छन्।

'धारां ते धुरां' का पात्र-पात्राहरू र परिस्थितिहरू सत्यरूपले चित्रित छन्। उपन्यासले पुरानो जमीन्दारी प्रथा र नया सामाजिकमान्यताहरू अनि पछिल्लोको विस्तारमा अघिल्लो टुक्रिंदै जानुसित सम्बन्ध राख्तछ। रामगढ़ीका राजा, शिब दयाल र तिनका विश्वस्त अनुचर पण्डित टीकारामले पुरानो व्यवस्थाका प्रतिनिधित्व गरेका छन् अनि नयाँ व्यवस्थाका प्रतिनिधिहरू रसल सिंह [घर फर्केको एउटा भूतपूर्व सैनिक], तुलसीराम (गाउंको पछौटे वर्गको गरीब तर तेजी युवक) र तारो (सहज गुणयुक्ता स्त्री) छन्। अन्य सह-पात्रहरू पनि छन्—ककलो, रसल सिंहकी प्रेमिका, जसलाई जबर्जस्ती खोसेर राजाले लैजान्छ अनि रूकमो, जसलाई उसकी पिताको २०० रु० को ऋणको सट्टामा वृद्ध साहूले विवाह गर्न कर लाउँछ तर रसल सिंह र तुलसी रामले बचाउँछ तर राजाले लैजान्छ। तारो, रसल सिंह र राजाको मृत्युमा संघर्ष समाप्त हुन्छ। उपन्यासमा तीव्र सामाजिक सचेतताको प्रमाण छ र उपन्यासकारले आफूलाई रसल सिंह र तारोका पक्षमा उभ्याएका छन्। चरित्र-चित्रणमा गहिराई छैन अनि आदर्शवाद, उपदेशवाद र भावुक स्वभावका स्वरहरू कथानकमा द्रवित छैनन्।

चौथो उपन्यास वा उपन्यासको प्रचेष्टा धरमचन्द प्रशान्तको 'रुक्मीणी' थियो। यसको तीन किश्त उनको पत्रिका 'रेखा' मा क्रमश: छापिए, त्यसपछि त्यो पत्रिकाको प्रकाशन बन्द भयो र उपन्यास बारे केही सुनिएन। यसको मूल पात्रा रुक्मिणी एउटी बालिका विधवी हो अनि यसको वर्णन प्रथम पुरुषमा छ। यसको प्रारम्भ असल थियो र रोचक हुने संकल्प यसमा थियो।

यसै बीच, गोर्कीको 'आमा', शरत्चन्द्रको 'दत्ता' र प्रेमचन्दको 'गोदान' यी तीन अनुवादहरूले डोग्री उपन्यास अझ धनी भयो। यीमध्ये अन्तिम चाहिं डोग्री उपन्यासमा ठोष योगदान हो। गोदान धेरै भाषाहरूमा अनुदित छ र यसलाई भारतीय ग्रामिण जीवनको एउटा महान उपन्यास मानिन्छ। भगवत प्रसाद साठद्वारा अनुदित डोग्री 'गोदान' मौलिक जस्तै पठनीय छ र अनुवाद राम्रो छ।

९

डोग्री उपन्यास जस्तै, डोग्री गद्य १९६० तिरकै विषय हो। श्यामलाल शर्मा र शक्ति शर्मा, पति-पत्नीका संयुक्त प्रयास "त्रिवेणी" डोग्री निबन्धको प्रथम पुस्तक हो; यो १९६१ मा प्रकाशित भयो। त्यसपछि १९६३ र १९६४ मा डी० सी० प्रशान्तले एउटा विशुद्ध डोग्री पत्रिका 'रेखा' निकाले जसले डोग्री गद्यको विकासमा ठूलो योगदान दियो। १९६४ मा कल्चरल एकाडेमी अफ जम्मु एण्ड काश्मिरले डोग्री साहित्यको वार्षिक संकलन र ६ महीने साहित्यिक पत्रिका 'शिराजा' को कार्यक्रम बनायो। यिनीहरूले डोग्री गद्यको विकासमा थप प्रोत्साहन प्रदान गरे अनि यिनीहरूमा प्रकाशित भएका केही निबन्धहरूले, निबन्धका डोग्री पुस्तकहरूका निम्ति प्रेरणा र घड़ेरीलाई स्वरूप दिए, जुन तदन्तरमा त्यो दशकको उत्तरार्द्धमा देखिए। प्राय: त्यही समयतिर डोग्री संस्थाले 'डोग्री साहित्य दर्पण' शीर्षकमा १९६७ मा प्रथम डोग्री लेखक गोष्ठीमा पठित कागजका संकलन र 'डोग्री लेख माला' नामक डोग्री निबन्ध संकलन निकाल्यो अनि लक्ष्मी नारायणले एउटा साहित्यिक पुस्तक 'डोग्री साहित्य चर्चा' प्रकाशित गरे। डोग्री संस्थाको एक अंगको रूपमा त्रय मासिक पत्रिका 'नमी चेतना' फेरि देखाह्र परयो, जसले नवोदित लेखकहरूलाई अवसर प्रदान गरयो र डोग्री गद्यको विकासमा योगदान दियो। डोग्री रिसर्च इन्स्टिट्च्युटका 'निबन्धावली' मा पनि डोग्रीमा केही रचनाहरू छापिए।

यो दशकको डोग्री गद्य लेखनलाई तीन प्रमुख शीर्षकमा राखन सकिन्छ :

(क) एक विशेष विषयको वर्णनमा रचनारूपमा डोग्री निबन्ध;

(ख) एउटा विषयको प्रयोगात्मक, काल्पनिक र व्यक्तिगत प्रबन्धका डोग्री निबन्ध; अनि

(ग) साहित्य सम्बन्धी डोग्री निबन्ध।

तीनै प्रकारका डोग्री गद्यले एउटा विषय व्याख्या गर्ने, एउटा भाव, एउटा पात्र वा एउटा वातावरण चित्रण गर्ने, दैनिक अस्तित्वको पक्ष वा जीवनको गम्भीर सत्य प्रकट गर्ने; आवेग संचार गर्ने र साहित्यिक मूल्यांकनको निम्ति एउटा लचकदार वाहनको रूपमा डोग्री भाषाको विविध सम्भावनाहरू र सम्भाव्यताहरू प्रदर्शित गर्छन्।

डोग्री भाषा, डोग्री संस्कृति, रितीरिवाजहरू र परम्पराहरू, पर्यटन स्थानहरू, तीर्थस्थान, मेलाहरू, लोककथा, कला, चित्रकला, मन्दिर-खोदाइ र वास्तुशिक्ष्प, इतिहास र डोग्रा जनरल जोरावर सिंह र विज्ञान आदि विषयमा प्राय: ३० व्यक्तिहरूले रचना लेखे। सबभन्दा धेरै रचना, डोग्री भाषा र यसका समस्यामाथि धेरै जनाले लेखे। श्यामलाल शर्माले आफ्ना शिक्षक शैलीमा डोग्री

भाषा र यसको लक्षण र समस्याका अध्ययनलाई आफ्ना अध्ययनको विशेष क्षेत्र बनाए। डोग्री भाषामाथि लेख्ने अन्य लेखकहरू शक्ति शर्मा, सत्यपाल वत्स, विष्णु दत्त, सोम दत्त, देवप्रकाश, जगदीश साठे, ओम प्रकाश, बन्शीलाल गुप्त र रामनाथ शास्त्री हुन्। शक्ति शर्मा, विश्वनाथ खजुरिया, रामलाल शर्मा, रामनाथ शास्त्री र सुरज सरफले डोग्रा संस्कृति र परम्पराहरू द्वारा ग्राह्य र रोचक रचनाका विषय बनाए। केदारनाथ शास्त्री, शक्ति शर्मा र विश्वनाथ खजुरियाले ज्वलन्त गद्य लेखे अनि तिनीहरूका रचनाहरू रचनाभन्दा महत्वपूर्ण थिए—भाषाको सृजनात्मक र काल्पनिक प्रयोग प्रदर्शन गर्ने साहित्यिक निबन्ध थिए।

यो दशकमा शुद्ध निबन्धका तीनवटा मात्र पुस्तकहरू देखिए। ती विश्वनाथ खजुरियाका 'डुग्गर दा जीवन दर्शन', लक्ष्मीनारायणको कन्डयारी दे फुल' र शक्ति शर्माको 'स्याड़याहं' थिए। शक्ति शर्माले 'त्रिवेणी' का 'वैर ते बिरो','बस्सोआं' र 'तमीज' निबन्धहरूमा प्रदर्शित गरेकी साहित्यिक प्रबुद्धताका संकल्प 'स्यड़हां' का 'सीता दा ब्याह', 'म्हिसदियां लीकरां', 'अन्नी आस्था', 'चान', 'सोच', 'चन्नु' र 'भर्गे दा फेर' जस्ता निबन्धहरूमा पूर्ण गरेकी छिन्। तीहरूमा डोग्री भाषाको प्रभावशाली प्रयोग संयुक्त भएको प्रबल भावुकता को हल्का छिटा परेको भाव गाम्भीर्य र डोग्रा जीवनको यथार्थ चित्रण छन्। 'चन्नु' मा शैली गीतमय बन्छ र चन्नुको चित्रण करुण छ। डोग्रा नारीको आकर्षण र मोह हुनाले उसकी शैली आदर्शरूपमा नारीसुलभ छ।

लक्ष्मीनारायणले पनि व्यंग्यात्मक रसिकता र विस्तृत चातुर्यको आवरणमा मानवका दुर्बल चरित्रहरू र कमजोरीहरू चित्रण गर्ने डोग्री भाषाको प्रभावशाली प्रयोग गर्छन्। तिनका होटलवाला, शाहजी, नक्कोतक्का र तरुणानन्द जस्ता केही चित्रणहरू स्मरणीय छन्। 'छरें दा कोठा' पनि एउटा रोचक र ग्राही निबन्ध हो। शैली व्यंगपूर्ण र वाग्धारापूर्ण छ, तर यो साहित्यिक साधनाको अभावले ग्रसित छ अनि प्रभावपूर्ण बनाउन वाग्धाराको अत्यधिक प्रयोगले तिनका केही सुनौला अवतरणहरूमा पनि सत्यताको वृत्त देखिंदैन।

विश्वनाथ खजुरियाका 'चन्द्रभागा दी आत्मकथा','बारा भाई होर','खटोला अपने बरे च', 'वैहम' र 'ए नजरां' जस्ता निबन्धहरू लेखकको निम्ति मादक र पाठकको निम्ति रोचक साहित्यको आकर्षक अंगहरू हुन्। तिनका शैली खुबै निजी छ। तिनी पाठकको सहानुभूति प्राप्त गर्न सफल छन् अनि विगत बनिसकेको डग्गरको जीवन-व्यवस्था पुनः सृजना गर्छन्।

संस्मरण, वृत्तान्त र यात्राविवरणी लेखनमा प्रयोग गरिए। प्रा० गौरी शंकरले पदमा विभूषण डा० सिद्धेश्वर वर्मासित अघिको आफ्नो सम्बन्धको एउटा संक्षिप्त संस्मरण लेखे, धिजयु सुमनले जम्मुमा बिताएका पूर्व दिनहरू विषयमा लेखें, भगवत प्रसाद साठेले रामनगरका आफ्ना बाल्यकाल विषयमा लेखे, पदमाले

आफू जम्मुको अस्पतालमा बसेको विषयमा संस्मरण लेखिन् अनि विश्वनाथ खजुरियाले 'मेरी डायरी दे किश पत्तरे' र 'पाहड़ी यात्रा' मा १९३१ को आफ्ना शिक्षक-जीवन र पछिबाट दोद्धा वसन्तगढ़को दर्शन-विषय लेखे। रामनगरदेखि भद्रवतसम्मको यात्रा वर्णन गरिएको मदन मोहनको यात्रा-विवरणी 'ओ एक सफर' एउटा सुन्दर निबन्ध हो। धउनथलीदेखि नग्रोटासम्मको यात्रा वर्णन गर्ने तात्पर्यको रामन थ शास्त्रीको निबन्ध 'चल मना देया मौजिया' यात्रा विवरणी-भन्दा बढ़ी उनको भावना अल्झाउने खुटी मात्र भएको छ। यश शर्माले पठानकोट देखि कांगड़ासम्मको आफ्नो यात्राको अनुभव लेखे, नारायण मिश्रले आफ्नो लेह् उड़ान र त्यहाँ देखिएका विषयमा एउटा निबन्ध लेखे। नारायण दत्त मिश्रले पनि प्रथम डोग्री लेखक सम्मेलनमाथि वृत्तान्त लेखे अनि नरेन्द्र खजुरियाले कांगड़ाको डोग्री-हिन्दी सम्मेलनको एउटा विवरण लेखे।

'त्रिवेणी' संगै साहित्यिक मूल्यांकनका निबन्धहरुका शुरूआत भयो जसमा श्यामलाल शर्माको डोग्री साहित्यिमाथिको संक्षिप्त सर्वेक्षण र शक्ति शर्मा 'डोग्री लोकगीतमा नारी' निबन्धहरू छापिए। 'रेखा' का पृष्ठहरूमा डोग्री लोक गीत विषयमा कृष्ण जम्वालका निबन्धहरू, अनि डोग्री उपन्यास 'हर बेरि ते पत्तन' माथि एउटी गायिकाको निरूपण, शम्भुनाथको डोग्री 'रामायण' र 'त्रिवेणी' र रामनाथ शास्त्रीको 'शिशु पुस्तकका अभाव' प्रकाशित भए। जे० एण्ड के० कल्चरल एकाडेमीको दुइवटा प्रकाशन 'शिराजा' र 'सारा साहित्य' ले साहित्यिक समालोचना र निर्धारणका धेरै रचनाहरू प्रकाशित गरे। बन्शीलाल गुप्तले डोग्री लोक साहित्यमाथि एउटा खुबै विवरणात्मक रचना लेखे। यसको पछि श्यामलाल शर्माको 'डोग्री उखानहरू', विश्वनाथ खजुरियाको 'डोग्री लोक कथाहरू' र शक्ति शर्माको 'डोग्रो लोक गीतहरू' प्रकाशित भए। विश्वनाथ खजुरियाले 'डोग्री लोक गीतमा वर्षा' माथि पनि लेखे अनि बलनेव सिहले 'डोग्री लोक साहित्यमा धुम्रपान' विषयमा लेखे। स्व० चरण सिंहले डोग्री कवि 'लक्खु' विषयमा एउटा खुबै विवरणात्मक निबन्ध लेखे अनि दीनू पन्तले ब्रह्मानन्दको कवितामाथि एउटा समालोचना लेखे। रामनाथ शास्त्रीले पनि डोग्री भक्ति कविता विषयक आफ्नो निबन्धमा ब्रह्मानन्दलाई स्पर्श गरेका छन्। नीलाम्बरदेव शर्माले डोग्री काव्यमा भारतमाथि चिनिया आक्रमणको प्रभाव पहिल्याएका छन्। चञ्चल शर्माले पनि डोग्री कविता र डोग्री उपन्यासमाथि लेखे। प्रशान्तले डोग्री रिसर्च इन्स्टीच्यूट वार्षिकीको निम्ति डोग्री गद्यमाथि एउटा निबन्ध लेखे। डोग्री लेखक सम्मेलनलाई दिएको आफ्नो पत्रमा मदन मोहनले डोग्री गद्यको विकास पहिल्याए। शक्ति शर्माले 'निबन्ध' विषयमा एउटा निबन्ध लेखे अनि जीतेन्द्र शर्माले रेडियो नाटक विषयमा दृश्य-विवरण अनि आफ्ना एउटा निबन्धमा डोग्री मञ्चन परम्पराको पृष्ठभूमिमा 'पांज रंग' को पांच एकांकीका निरूपण गरे। नीलाम्बर-

देवले भगवत प्रसाद साठे र तिनका लघु कथाहरूका विषयमा लेखे, साठेले पनि आफ्नै कथाहरूका निरूपण लेखे। मदन मोहन र नरेन्द्रले तिनीहरूका आफ्नै कथाका पात्रहरूलाई चर्चा गर्ने प्रयास गरे अनि रामनाथ शास्त्रीले मदन माहनको 'धारां ते धूड़ां' उपन्यासको मूल पात्र रसल सिंह विषयमा एउटा निबन्ध लेखे। साहित्यिक समालोचकका असल उदाहरणहरू नीलाम्बरदेव शर्मा, मदन मोहन र रामनाथ शास्त्री हुन्। रामनाथ शास्त्रीले पनि 'अन्ना युग' र 'अस ते आं बन्जारे लोक' को दृश्य निरूपण लेखे। 'डोग्री साहित्य दर्पण' मा संकलित डोग्री भाषा, शोधकार्य र साहित्यका विविध पक्ष वर्णन गरिएका लेखौटहरू पनि १९६६ सम्म का डोग्री भाषा र साहित्यका समस्याहरू र विकासका निर्धारण गर्ने यथार्थ प्रयास हुन्।

लक्ष्मीनारायणको 'डोग्री साहित्य चर्चा' ले डोग्री साहित्यभन्दा साहित्यको सिद्धान्त, साहित्यिक स्वरूप र तिनका लक्षणसित सम्बन्ध राख्तछ। पुस्तक साहित्यिक समालोचनाको सिद्धान्त विषयक अंग्रेजी र हिन्दी पुस्तकहरूबाट संकलित नपचेका सामग्रीहरूका पुनर्चचा जस्तो देखिन्छ अनि डोग्री लेखनका धेरै उदाहरणका न्यूनताले ग्रसित छ। यद्यपि, अति प्रारम्भिक भए तापनि, अर्कोतिर, चम्पा शर्माको 'डोग्री काव्य चर्चा' प्रकाशित कृतिहरूबाट लिइएका काव्यका लक्षणका दृष्टान्त र उदाहरणहरूले पूर्ण उत्तम र बढ़ी सन्तोषजनक परिचयात्मक छ।

## १०

यो दशकमा अनुवाद क्षेत्रमा महत्त्वपूर्ण गतिविधि भए। पद्य अनुवाद, नाटक अनुवाद र उपन्यास अनुवादको वर्णन अघि नै गरिएको छ। डोग्रीमा अनुदित र प्रकाशित अन्य कृति हुन्—'बाल-भागवत', 'बैताल-पचीसी', कालिदासको 'मेघ-दूत' गद्यमा र सी० राजागोपालचारीको 'महाभारत' र 'रामायण', विनोवा भावेको 'गीता प्रवचन', रवीन्द्रनाथ ठाकुरको २१ कथाहरू, जवाहरलाल नेहरूका 'पिताको पत्र पुत्रीलाई', महात्मा गान्धीको 'सत्यसित मेरो अनुभव' र मेक्सीम गोर्कीका कथाहरू र निबन्धहरू। अंग्रेजीबाट अनुदित नौवटा निबन्धका संकलन पनि प्रकाशित भयो। यस दिशातर्फ सबैभन्दा बढ़ी योगदान जे० एण्ड के० एकाडेमी, डोग्री संस्था, जम्मु, श्यामलाल शर्मा र रामनाथ शास्त्रीले दिए।

विविध सुत्रहरूबाटका अनुवाका स-साना अंशहरू डोग्री पत्रिकाहरूमा पनि देखिए। यीहरूमा उर्दू, पंजाबी, हिन्दी, रसियाली, जर्मनी, यहुदी कथाहरू र अंग्रेजी, मलायलम र बंगाली कविताहरू थिए।

११

जन्मेर जरा गाड़्न पत्रिकाहरूलाई धेरै समय लाग्छ। चारवटा अंकहरूपश्चात् मर्ने गत दशकको 'नमी चेतना' त्रय-मासिक रूपमा १९६७-६८ मा पुन: जन्म्यो। त्यसभन्दा अघि, जम्मुको एउटा पत्रकारले १९६३-६४ मा शुरू गरेको त्रय-मासिक 'रेखा' को चार अंकको संक्षिप्त जीवनपछि प्रकाशन बन्द भयो। तर 'रेखा' ले गरेको कार्य जे० एण्ड के० कल्चरल एकाडेमीले १९६४ मा निकालेको छ महीने 'शिराजा' ले अघि बढ़ायो। यो पत्रिकाले डोग्री लेखनलाई ठूलो प्रोत्साहन प्रदान गरयो। १९६९ मा शिमलाबाट 'वीर डोग्रा' नामक पाक्षिक पत्रिका शुरू गरियो। यसले राजनैतिक खबरहरू र विचारहरू अनि डोग्रा संस्कृति, लोक कथा, कला इत्यादि विषयको मिश्रित पठ्य-भोजन प्रदान गर्ने उद्देश्य राखेको थियो। केही अंकहरू पश्चात् नै यसको प्रकाशन बन्द भयो। जे० एण्ड के० गभर्नमेन्ट फील्ड सर्भे अरगामाइजेसनद्वारा आरम्भ र प्रकाशित गरिएको डोग्री मासिक 'फूलबारी' धेरै भाग्यशाली थियो। १९५९ को अन्त्यतिर केवल तीनवटा डोग्री पत्रिकाहरू प्रकाशित हुँदै थिए—छ महीने 'शिराजा' त्रय-मासिक 'नमी चेतना' र मासिक 'फूलबारी'।

अध्याय सात

# १९७० प्रारम्भिक कालका डोग्री लेखन

डोग्री साहित्यको विकास धीमा र स्थिर गतिमा भएको छ। ७० तिरका पूर्वार्द्धमा प्राय: ६० वटा नयाँ पुस्तकहरू डोग्री साहित्यमा थपिएका छन्। यस अवधिको अन्य महत्वपूर्ण घटनाहरू हुन्—नयाँ दिल्लीमा, प्रथम अखिल भारतीय डोग्री लेखक सम्मेलन, जम्मुमा दोस्रो डोग्री लेखक सम्मेलन, १९७०, १९७१, १९७२, १९७४ र १९७५ का निम्ति डोग्री लेखकहरूलाई साहित्य अकादमी पुरस्कार प्रदान; डोग्री लघु कथाका अग्रदूत, भगवत प्रसाद साठे, डोग्रीको प्रथम व्याकरणका लेखक, वन्शीलाल गुप्त, अनि दुई मरणोप्रान्त पुरस्कार विजेताहरू, नरेन्द्र खजुरिया र श्रीवत्स विकल—डोग्रीका चार वरिष्ट लेखकहरूका मृत्यु; चारैजना सृजनात्मक रूपले सक्रिय थिए अनि अन्तिम दुइ जना खुबै जवान र डोग्री साहित्यको भविष्यको निम्ति महान संकल्प थिए। केही नवोदित र युवा लेखकहरू पनि मैदानमा उत्रेका छन् अनि तिनीहरूका कृति जीवन्त र आशापूर्ण छ।

२

गत पाँच वर्षको अवधिमा प्रकाशित कविताका २३ पुस्तकहरूमध्ये हिमाचल-बाट केवल चारवटा मात्र छन्—शेष अवस्थीको 'धारां दीयां धुप्पां', जयदेव किरणको 'पथ्रो-रे-म्हानु', रिखी भारद्वाजको 'कुंजां दि कुक' र हिमाचल कविताको एउटा संकलन 'काव्यधारा'। जम्मुबाट प्रकाशित पुस्तकहरू हुन्—विशन दास दुवेद्वारा सम्पादित कविता संकलन 'धारें दे आले', श्यामलालशर्माद्वारा सम्पादित अर्को संकलन 'डोग्री काव्य सुषमा', रामनाथ शास्त्रीको 'धरती दा ऋण', मुन्शी रामको 'सुचे मोति', जगन्नाथ कालराको 'किश कन्दे किश कलियां', गोगाराम साथीको 'दिखाने आलि अख नयीं', नरसिंह देव जम्वालको 'कोरज', ओ० पी० शर्माको 'तंदां' र 'परतां', किशन समायलपुरीको 'मेरियां डोग्री गजलां', जीतेन्द्र उधामपुरीको 'चानती' र 'बन्जारा', अश्विनी मंगोत्राको 'खुबतियां', सन्तोष खजुरियाको 'त्रिचौली', प्रद्युम्न सिंह जिन्द्रहियाको 'फुहारां', दुनिचन्द त्रिपाठी

'धारां ते फुहारां', कुलदीप सिंह जिन्द्रहिको 'एक दबिर दि मौत' र शिवराम दीपको दुइ संकलनहरू 'कुंज कतरां' र 'गुन्जार'।

जब कि 'कुंज कतरां' ले डोग्री काव्यको सम्पूर्ण प्रकाश-प्रतिमूर्तिलाई अंगाल्ने अनि प्रथम पल्ट मेहता मथ्रा दास (१८५९-१९२६) र सागर पालमपुरी जस्ता उति नाम नसुनिएका कविहरूका कविताहरू संयुक्त गराउने चेष्टा गर्छ भने 'गुंजर' ले ४९ नवोदित र उदीयमान कविहरूका प्रतिनिधि रचनाहरू ल्यायो अनि हीरनगर, भाद्रोर, भग्वाल, बीरपूर, पैंथल, रेयसि, रामनगर, अख्नूर, नग्रोता, जिन्द्रह, गुरदासपुर, गुलेर, जगानून, कांग्रा, ज्योरियां जस्ता स्थानहरू ढाक्छ। यो नव-फसलको गुण उति राम्रो भएन अनि ४९ मध्ये एक दर्जनभन्दा बढ़ी कविहरूले भविष्यको निम्ति काव्यगत गुण र संकल्प देखाएनन्।

'फुहारां' प्रेमी-प्रेमिकाको विछोड़ विषयक स्वरलिपिसहितका ४४ गीतहरू र सातवटा भजनहरूका एउटा संकलन हो; ती सरल, रागमय, आवेगमय अनि विशेष रूपमा डोग्रा मान्यता र प्रतिमूर्तिहरू गुंथिएका छन्। 'एक दबरी दि मौत' मा कुलदीप सिंह जिन्द्रहिको सीमा क्षेत्र विस्तृत छ अनि केही कविताहरू मर्मस्पर्शी छन्। मुन्शी रामका पद्य उदासीन वस्तु हुन्। गोगाराम साथी एउटा अशिक्षित भूत-पूर्व सैनिक हो अनि साधारण मानिसको आस्था, फसल उठाउँदा कृषकको आनन्द, उसको देशभक्तिको भावना, पटवारी (गाउँमा कर-अधिकारी) द्वारा सताइएकी ग्रामिण अकेली स्त्रीको दशा इत्यादिका अभिव्यक्तिको सरलता तिनका कविता-हरूमा पाइण्छ। रामनगरका दुनि चन्द त्रिपाठीले आफ्ना 'धारां ते फुहारां' मा २० कविताहरू, चार गीतहरू र २५ गजलहरू लेखेका छन्। निद्रामस्त युवती जस्तै देखिने 'सियोज धार' को वा तावी, ताउ तरेलि देहिया दि जिन्यां चन्दि धाफि सुति दि, हृदय सागर (खउदल) मा प्रलय मचाउने चम्कीला तरल चांदी (सियोज धार), सम्झनाहरू अथवा चेतनामा व्यवस्थित बन्दै गएका धूला जस्तै विषाद (विकल दे चेते च)। जस्ता केही खुबै सुन्दर प्रतिमूर्तिहरू छन्। गजलह-रूमा केही असल लहरहरू छन् :

मने दे लंगारें गि
ताकि नीं पौन्दि
भयें सीं अकलि दे
दरिज बछरे

(जस्तै ज्ञानीले चेष्टा गरे पनि फुटेको हृदयका टुक्राहरू जोड्न सकिन्दैन)

शब्द बाहुल्यता भएतापनि शैली सरल छ। स्व-वेदना, प्रेमिकासितको वियोग पहाड़मा प्रकृतिको सौन्दर्यमाझमा वेदनाका भावनाहरूका प्रधानता छ।

जगन्नाथ कालराको 'किश कन्दे किश कलियां' मा तिनले आफ्ना सम्पूर्ण काव्य-जीवनभरी लेखेका २६ चयनित पद्यहरू छन्। त्यसको धेरै जसो सस्ता हास्य विषय छन्। यो सानो पुस्तिकाको तुलनामा, प्राय: तीन दशकको अवधिमा

लेखिएको ७९ वटा चयनित कविताहरूका संकलन रामनाथ शास्त्रीको 'धरती दा ऋण' गम्भीर छ। एक ठाउँमा यो पुस्तकले अघिल्ला अध्यायहरूमा वर्णित तिनको काव्यगत प्रयासका परिणाम दर्शाउँछ। यसमा समाविष्ट तिनका हालैमा लेखिएका कविताहरूले, अघिका कविहरू, जसमध्ये दीनू पन्त र शम्भुनाथ ले लेखन छोड़ेको देखिन्छ, मा देखिएका उत्साहका मुर्झाएको र सृजनात्मक कल्पनाको उद्गम शुष्क बनेको प्रदर्शन गर्छ।

नरसिंह देव जम्वालले आफ्ना 'कोरज' ले नयाँ प्रयोग ल्याएका छन् अनि गजल र कविताहरूमा आफ्ना अघिका प्रयोगदेखि टाढ़िएका छन्। यसमा 'परचोल' र 'एह दोआस रात' जस्ता आधुनिक स्वभावले रंगिएका केही उत्कृष्ट कविताहरू छन्। एक मृतको निम्ति भावाभिव्यक्तिको सरलता अनि शब्द मितव्ययिताले तीव्रताको भाव सृजना गरेको छ। 'कसक', 'अन्जानी', 'लीकर' र 'पींग' जस्ता कविताहरूमा मनोभाव घरेलु र ताजा छ तर अत्यधिक छ। कविका जीवन प्रतिको स्नेह, आत्मविश्वास र साहस प्रेरणादायक छन् :

प्रतिदिन एउटा नयाँ श्लोक रच्छु म
फौडँदो छ जीवन, द्रुत गतिमा
पुराना कुचिएका कागजहरू हेर्न
कीराले खाइसकेका पत्रहरूमा
सम्झना र भूलिएका चेहराहरू
खोज्न,
मेरो समय कहां छ र?

अनि तिनी जीवनको स्थूलतामा बाँच्न चाहन्छन् :

मानिसहरूका माझमा।
घटनापूर्ण छ जीवन;
यो शून्यताभन्दा बरू
वेदना प्यारो छ
साथीको रूपमा केही त हुन्छ।

नवोदित युवा कविहरूमध्ये सन्तोष खजुरिया, अश्विनी मंगोत्रा, जीतेन्द्र उधामपुरी र ओ० पी० शर्मा सारथीले बढ़ी संकल्प प्रदर्शित गर्छन्। सन्तोष खजुरियाका कविताहरू खुबै उद्धात, संवेगको अज्ञानता र सरल मर्मस्पर्शी, कोमलतासित कुंदिएका प्रतिमूर्तिमा सुन्दर र तीहरूका चरणका संगीतमा आनन्ददायक छन्। कवियत्रीको कल्पना मा केही बालसुलभता छ जसको निम्ति आकाश धरतीको गतिविधि हेर्दै बसिरहेको मान्छे जस्तै हो, छाल गीतमा बाटो हराएकी एउटी केटी जस्तै हो अनि पातहरू फक्रन लागेका कोपिलालाई सावधान-साथ हेरिरहने सन्यासीहरू जस्तै हुन् अनि बालुवाको भूँवरी बाटोमा खेल्ने भावुक

केटी जस्तै हो :

कुतइ अक्खीं लेतर
 प्यायी जन्दि
कुतइ छप्पर कोथे
 ध्यायी जन्दि
ते अन्दरें बाहरें
 फिरियाइ
मित्ति दे पोचे लाइ
 जन्दि

(कसैको आँखामा धुलो पर्याक्छ, अरूका झुप्रो र घरहरू भत्काइदिन्छ अनि घर भएर जाँदा त्यसलाई धूलाले पुरिदिन्छ।)

वर्तमानका अंगहरू, वृक्ष, भंगेरा, कुवाले भूतलाई पुनः सृजना गर्ने एउटा अति सुन्दर कविता हो—'खण्डरात' (महलहरूका भग्नावशेष)। 'अजि कुन्नइ बस्साखि मनायि नयीम' पदमाको 'राजे दियां मण्डियां' को संस्मरण हो—कविताको गतिमा विषादमा मुछिएको वैशाखी ढोलको बजाइ अनि अभावले पर्व मनाउन असमर्थ बनेकी डोग्रा स्त्रीहरूका चित्रण खुबै हृदयस्पर्शी छ। तिनकी 'आस', 'अगरि', 'उमेद', 'साउन', 'रखरि', 'होलि', 'झूठे लारे' जस्ता केही कविताहरू तुलनात्मक रूपमा राम्रा छैनन्।

अश्विनी मंगोत्रा केही अंशमा असल छन्—'खुबतियां' का कविताहरू गजलहरूभन्दा असल छन् अनि 'लालसा' जस्ता कोहीमा मधुकरको प्रभाव चम्कीलो र प्रत्यक्ष छ। तिनका शैली, तिनका भावुकतावाद, तिनका बाहुल्यता सबैले यो प्रभावलाई संकेत गर्छ। 'याद' जहां आशा र निराशाका बादल मडारिन्छन् र वज्रमा परिणत हुन्छन्, प्रकाश अंगालिरहेका पक्षीका प्रतिमूर्ति 'लारे' कहीं पुग्ने संकल्पले गतिमय चरणका 'ललकार', आशावाद र आशाका 'में गीत जेहरा बिगा करन' नशालु 'बजोग' र 'दुरी' जस्ता तिनका केही कविताहरू असल छन्। मंगोत्रा शब्द चेतना, गति, व्यक्तिगतता, तनावपूर्ण र अभिव्यक्ति चाहने होनहार कवि हुन्।

जीतेन्द्र उधामपुरी र ओ० पी० शर्मा प्रत्येकले कविताका दुइ-दुइवटा पुस्तकहरू प्रकाशित गरेका छन्। जीतेन्द्र उधामपुरीको पहिलो पुस्तक 'चाननी' चन्द्र ज्योत्सनासित सम्बन्धित एउटा लामो कविता हो। ओ० पी० शर्माको पहिलो काव्य-कृति पनि एउटै आत्म-अवलोकन विषयमा एउटा लामो कविता हो। यी दुइ प्रत्येकका दोस्रो काव्य-कृति धेरै कविताको संकलन हो। तर, सादृश्यता यहीं टुंगिन्छ। उधामपुरी सरल छन् अनि तिनका कल्पनाले वस्तुको धरातल सफा गर्छ जब कि ओ० पी० शर्मा ख्यातिप्राप्ति बुद्धिजीवी हुन् अनि विषयको

गहनतालाई जाँच्छन् । उधामपुरीको अभिव्यक्तिमा सरलता र स्पष्टताको हल्का स्वाद छ भने ओ० पी० शर्मा निपुण र आफ्ना वैचारिक प्रक्रिया र अभिव्यक्तिमा बढ़ी जटिल छन् । एउटा ग्रामिण र अर्को शहरिया छ ।

'चाननी' मा केही असल वर्णनात्मक अवतरणहरू र चन्द्रकिरण विषयमा भावुक सुकुमार पदहरू छन् । मानव हृदयको वेदना मूल संवेग भएको कविता र गजलका ३७ रचनाका संकलन 'बन्जारा' हो, जसको एउटा उत्कृष्ट कविता चन्द्रमा विषयमा छ—'ए चन्न तुंदा' । मानिसको पहुँचदेखि टाढ़ो नीलो आकाशमा झुण्डिएको सुनको कानको कुण्डल वा मैकेको रोटी (धोद्दा) जस्तो चन्द्रमा मात्र सम्झना, चिन्ता, विवशता, भय र आशाका माझमा एउटा प्रलोभन र चिरस्थायी सपना हुन्छ ।

ओ० पी० शर्माको निम्ति जीवन प्रपञ्च हो र तिनका 'तन्दां' र 'परतां' सत्यको खोजमा जीवनको तन्तु र तहलाई बदलाउने र जाँच्ने प्रयास हुन् । अघिल्लो एउटा लामो गद्य कविता हो जसमा कवि अहमद्वारा सृजित जीवनको एकाइ र वियोग-पर्खालको दार्शनिक सिद्धान्तमा फेरो मार्दै 'म को हूँ ?' भन्ने अनन्त जिज्ञासासित पुष्ट शैलीमा जुझ्छन् । अर्को पुस्तक, गहन विचार, तीव्र जिज्ञासा, मानव परिस्थितिको सुक्ष्म निरीक्षण ले पूर्ण र दृष्टि र यथार्थको अनावरण गर्ने ४७ कविताहरू र आठवटा गजलहरूका एउटा संकलन हो । मानिसको नसामा रगतको सट्टा बारूद छ भने वा फूलको सुगन्ध छ भने के हुनेथ्यो होला ? तिनलाई लाग्छ, तिनी जल्छन् किनकि तिनी घाँसको त्यान्द्रोभन्दा हलुका छन् । तिनी प्रेमलाई अस्वीकार गर्छन् किनकि तिनको निम्ति प्रेम नौनी घिउ हो र तिनी स्वयं चाहिं मही हो । आशा र आकांक्षाका बन्दूकले निशाना साध्नेहरूका निम्ति तिनी विचारको निशाना हो । तिनी प्रश्न गर्छन् कि क्षणहरूका कागहरू कहांबाट आउँछन् । तिनी यो संसारको अन्त्यको आह्वान गर्छन् । तिनी चारैतरि सबैजना शुलीमा झुण्डिरहेका देख्छन् । 'मेंह् बि बखल नयीं' एउटा सुन्दर र सशक्त कविता हो, जसमा तिनी मान्छेको असहायपनको वर्णन गर्छन्—तिनी स्वयंलाई समयको मुखमा विलिंदै गएको अन्जान चीनीको एक ढेका मान्छन् :

मैले सुन्दै आएको छु, कि
कोही सपनाको सबै घटना देखिरहेछ,
सपना देख्न नै उसलाई मन पर्थ्यो भने
एक ढेका चीनीको सट्टामा मलाई
एक टुक्रा ग्लास बनाएको भए हुन्थ्यो
ता कि उसले आफ्नो मुखलाई अनुभव गर्न सकथ्यो
अनि द्रवण र कष्ट भोगाइदेखि म बाँच्न सक्थें
अनि समयको मुखको कोमलता अनुभव गर्न सक्थें ।

'क्षेत्र', 'खीर होआजे', 'दिन दा दामन', 'सदियें मगर अ', 'अपन आप', 'ओ खुब्बेया ह्', संक्षिप्त नयाँ शैलीमा उत्तिकै सशक्त कविताहरू हुन् जसले डोग्री कविताको विकासमा नयाँ प्रयोग ल्याउँछन्।

३

नरेन्द्र खजुरिया र श्रीवत्स विकल, दुइ श्रेष्ठ स्रष्टाका मृत्यु भए तापनि डोग्री लघु कथा प्रबल बनिरह्यो। यी पाँच वर्षमा देखिएका लघु कथाका १४ पुस्तक-हरूमध्ये तीनवटा संकलन हुन्—मदन मोहनद्वारा सम्पादित र साहित्य अकादमी-द्वारा प्रकाशित 'डोग्री कहानियां', डोग्री संस्थाद्वारा प्रकाशित 'चोनमियां डोग्री कहानियां, जे० एण्ड के० एकाडेमीद्वारा प्रकाशित 'श्रेष्ठ डोग्री कहानियाँ, दोस्रो भाग'। बी० पी० साठेको 'खालि गोदे', आर० एन० शास्त्रीको 'बदनामी दि क्षण', मदन मोहनको 'दूध, लहु ते जहर', चञ्चल शर्माको 'नींहे दे पथर', ओ० पी० शर्माको 'सुक्का वारूद', बन्धु शर्माको 'परशामे', ओम गोस्वामीको 'नइं ते पोते' मा पहिले नै पत्रिकाहरूमा प्रकाशित भएका केही कथाहरू छन् जसलाई अन्तिम अध्यायमा वर्णन गरिएको छ। ओ० पी० शर्माको 'लोक गई लोक' ओम गोस्वामीका 'हशिये दे नोटेस' र 'न्हेरे दा समुन्दर', अश्विनी मंगोत्राको 'खीरलि बुंद', छत्रपालका 'तपु दा आदमी' र कुलभूषण कायस्थाको 'रींग्दी पिर' मा पूर्णतः नयाँ कथाहरू छन्।

'खालि गोदे' को १७ मध्ये प्रायः १२ कथाहरू नयाँ छन् अनि तीमध्ये प्रायः आधा दर्जनमा—सायद आफ्नै गाउँबाट लिइएका—उनका सर्वश्रेष्ठ संकलन 'पेहला फूल' कै माटोको गन्ध छ। त्यहाँ घरेलु नशा छ, संबेदन छ, वाग्धाराको घरेलु बुनाइ छ, आदर्शभूत डोग्रा ग्रामिण नामहरू छन्—गीगन, भानु, प्यारू, रहिम बिबि, कसम, लक्मी, शामसदिन, जगतु—त्यहाँ सरल भावुकता, सहजै वहन गरिएका र स्वीकार गरिएका समस्याहरू छन् जुन धेर थोर विगत बनिसकेका छन्।

रामनाथ शास्त्रीको 'बदनामी दि क्षण' का छ कथाहरूमध्ये चारवटा नयाँ छन्। प्रत्येक कथाले विशिष्ट र सशक्त पात्रको चित्रण गर्छ—'होर केह् करदि' की उमा—विधुरसित विवाहित एउटा लालची ब्राह्मणकी बुद्धिमता, सुन्दरी, चतुर र साहसी छोरी; 'गरजदे बादल' की सोमा, एउटी तरुणी केटी, जसको विवाह एउटा अवकाशप्राप्त वृद्ध सुबेदारसित हुन्छ, जसले उसलाई नियन्त्रण गर्न र उसको स्वतन्त्रता अवरोध गर्न सक्तैन; आफ्ना पतिका साथीद्वारा धोका दिइएकी र शोषित 'पति दा भैंवाल' की मोहिनी; कसैसित पनि खुशी नबन्ने 'नभे मसफर' की अचला; मोहल्लाको निन्दालाई वास्ता नगर्ने र निर्भय बाँच्ने 'बदनामी दे क्षण' की सीता र अन्तमा गुर्वाणी सुनेपछि तुमूल परिवर्त्तन हुने 'त्रियां अखण्ड पाठ' का

मंगल सिंह ।

मदन मोहनको सबैभन्दा पछिल्लो लघु कथा संकलन 'दूध, लहुते जहर मा १२ कथाहरू छन् । 'पथरी', 'मेरी गली दा पाप' र 'ओ' पछिका अध्यायमा चर्चा गरिएका छन् । ती उत्कृष्ट डोग्री लघु कथाहरू मध्येका हुन् । यो संकलनमा समाविष्ट नौ नयाँ कथाहरूमध्ये तीनवटा, 'कुक', 'माफी' र 'एक लमकदि लोथ' पनि त्यस्तै छन् । मदन मोहन आफ्ना पात्रहरूका हृदयका आन्तरिक मनोवैज्ञानिक कार्यकलाप जाँच्न र उदांगो पार्न, आफ्ना माध्यम, लघु कथामा पारंगत छन्— काम-स्वतन्त्रताको संघारमा, गाउँमा गएर बाँच्ने, अर्को पेशामा रूपियाको लोभमा परेको भरखरै अवकाशप्राप्त एक जना वृद्ध मानिस; आफ्नी पत्नीको ईर्ष्या गर्ने र आफ्नो स्वार्थ मात्र हेर्ने मानसिक विकार-ग्रस्त पति; आफ्ना सफलता र लोक-प्रियताले घात पाएकी एउटी सोझी तरुणी केटी जसलाई एउटा सपनाले सताइ-रहेको हुन्छ—एउटी तरुणी विधवी जो यो युवतीको बाजेको घरमा बस्छे र जसले यसलाई छेमाले जस्तै माया गर्छे, उसको अज्ञानता र निर्भरताको फायदा उठाएर आफ्नै पिताले त्यसलाई आत्म-हत्या गर्न वाध्य गराउँछ, सपना यति नै हो । मदन मोहन तिनका प्रातकालीन १९५० तिरका कथाहरू देखि धेरै टाढ़िएका छन् अनि मनोवैज्ञानिक चित्रण र सामाजिक वचनवद्धता विषयक कथाहरूका निपूण शिल्पी भएका छन् ।

चञ्चल शर्माको "नीन्हे दे पथर" मा भावुक दृष्टिद्वारा देखिएका, अन्ध-विश्वास र परम्पराले स्थिरता प्रदान गरेको साना शहर र ग्रामिण जीवनका अंशका असल चित्रण छन् जस्तै एउटी तरुणी भिखारिनी भोको हुन्छे, कामेच्छु आँखाहरूले त्यसलाई पीड़ित बनाउँछन् आफ्ना कौमार्यको रक्षा गर्दै कामको खोजीमा आफूलाई छोड़ेर शहर पसेको आफ्ना रामूलाई भेटने आशामा शहर पुग्छे अथवा गाउँकी केटी जसको चेहेरा जलेर कुरूप बनेको हुन्छ र उसलाई शहरकी आफ्नी सखीले आश्वासन दिएर धोका दिन्छे; वर्षौं पछि युद्धवाट घर फर्केको एउटा सिपाही जसको प्रेमिकाको अर्कैसित विवाह भइसकेको हुन्छ; वा अपुग र त्यसबाट उत्पन्न क्रोधको वातावरणमा लोग्ने-स्वास्नीको झगड़ा; वा बौलाही जस्तै एउटी तरुणी विधुवा जो युद्धमा मारिएको आफ्ना लोग्नेसित मिल्दो-जुल्दो व्यक्तिलाई लोग्ने हो मान्छे, यही विश्वासमा कि आफ्ना देशको निम्ति लड़्ने मान्छे कहिल्यै मर्दैन । यीमध्ये धेरै जसो कथाहरूका सेरोफेरोमा केही तीव्रता र चिन्तामग्न उदासीनता छ । शैली चुटकिलो छ । लेखक वातावरण र भाव सृजनामा कुशल छन् ।

ओम प्रकाश शर्मा, वन्धु शर्मा, ओम गोस्वामी, छत्रपाल, अश्विनी मंगोत्रा र कुलभूषण चन्द्र कायस्था लघु कथाकारका युवा मण्डलीका हुन् अनि प्रत्येक नै आ-आफ्ना ढंगमा असल छन् ।

अति संवेदनशील हुनाले धर्मशालाका कायस्था अरूभन्दा कमजोर छन्। उनी युद्धप्रयासको सहायतार्थ इच्छुक छन् अनि युद्धमा जीवनको क्षतिद्रेखि, पारम्परिक डोग्रा समाजको पुरानो प्रथाहरू र जन-साधरणको अविश्वासीपन र शोषण देखि दुःखित छन्। तिनी भन्छन्, रेखा जस्तै घस्रिने पीढ़ा जीवनमा हुन्छ र तिनी आफ्ना सरल र भावुक सूक्ष्मवोधले प्रज्ज्वलित पार्न त्यो रेखाबाट केही विन्दुहरू टिप्छन्। यीमध्ये धेरै जसो कथाहरूका मूल पात्र नारी छ—कालेज-जीवनमा तिनले मन पराएकी नारी, जसको अरू कसैसित विवाह भयो आज तिनले उसलाई युद्ध-विधवीको रूपमा भेटे; सराय निर्माण गर्न आफ्ना इच्छा-पत्रद्वारा छोड़िराखेकी धनले निर्मित कोठीमा सताइरहने स्त्री; वेश्यावृत्ति अपनाएकी नारीले तिनलाई मोहित पार्छे तर त्यसकी पेशा थाहा पारापछि त्यसदेखि विमुख बन्छ, लोग्नेदेखि टाढ़ा बसेकी नारी, काम गर्दै विछोड़को विचारमा डुब्छे तर छोरोको सम्झनाले त्यसलाई वाधा दिन्छ; आफूलाई विवाह गर्न अस्वीकार गर्ने व्यक्तिसित माता-पिताले विवाह गरिदिंदा आत्म-हत्या गर्ने स्वास्नी-मान्छे; एउटी नारी जसलाई कसैले बहिनीको पमा पालन-पोषण गर्छ र पछि रखौटि बनाउँछ; अर्की युद्ध-विधवी, जसको रूमानसिक सन्तुलन हराएको छ र जो पतिलाई भेटने आशाले रेल्वे स्टेशनमा आउँछे; एउटी तरुणी बेहुलाको पिताले रूपिया माग्दा विवाह गर्न अस्वीकार गर्छे र नर्स बन्छे; अनि एउटी तरुणी बेहुली जसले गाउँको एउटा धनी मानिसलाई 'दाज्यू' सम्बोधन गरेर उसको मोहभंग गरिदिन्छे।

मुख्यतः कवि रहेका अश्विनी मंगोत्रामा तिनका कथाहरू 'अन्दरे दि चुप्पी' र 'अधियां अधुरियां कहानियां' मा जस्तै अवलोकनको चेतना र 'अन्जामे गिल्लू दि मारिह' र 'लाल सारी' मा जस्तै हृदयको गतिलाई ठोष रूप प्रदान गर्ने काल्पनिक शक्ति र वाग्धारामय शैली तीव्र छ। कथाहरू यस्ता छन्—माता-पिताले दाइजोको रूपमा स्कूटर दिन नसक्दा विवाह हुन नसकेकी एउटी तरुणी केटी, आफ्नी दोजिया पत्नी दुर्घटनावश जलेर मर्नलागेकी अवस्थामा भेटन घर फर्केको पति, रूपियामा रक्त विक्रय गरिने अस्पतालमा हितैषीहरूबाट पनि रक्त नपाएरमर्न लागेको एउटा नानीलाई बचाउन आफ्नो जीवन बलि दिने एउटा सिपाही, अर्की स्त्रीसित आफ्ना पतिको मायाजाल देखने एउटी पंगु स्त्री, एउटी स्त्रीमथिको अत्याचारमा ग्लानिले युक्त अस्पतालमा भएको एउटा मान्छे, अरूको वलिदानमा फाइदा उठाउन चाहने विद्यार्थी नेता इत्यादिका विषयमा छन्। कथाहरूले उचित उद्देश्य लिंदैनन्; त्यहां आदर्शवाद र भावुकतावाद छ अनि पात्र-पात्राहरू र स्थितिहरू ओझेल र व्यवस्थित देखिन्छन्। 'तापु दा आदमी' का कथाहरू जीवन निकट, यथार्थिक र पुष्ट छन्। कथाकार आफ्ना पात्रहरूका अनुभवसित आफूलाई यति पूर्णरूपले अवगत गराउँछन् कि तिनीहरूका पीढ़ा, चिन्ता

र सन्तापका पुनः सृजनामा प्रमाणिकता छ। कथाकारको भाषामाथि पूर्ण दखल छ अनि तिनका शब्दहरू, बिम्बहरू र वाग्धाराका प्रयोग उत्तम छ—यसले वातावरण सृष्टि गर्छ र पात्रका मनोवैज्ञानिक क्रियाकलाप उदांगो पारिदिन्छ। मान्छे, तिनका कथाहरूमा एउटा असहाय प्राणी, परिस्थितिको दास हुन्छ अथवा कोयामा वा टापूमा भएर फर्कन नसके जस्तै आफ्नो निर्णय फिर्ता लिन्छ। 'सूंकदियां चीहरां' को परमा, जम्मु पहाड़को वत्तनि डांड़ामा स्थित एउटा बाटोको होटलमा काम गर्ने केटोकी पत्नीलाई तीन जनाले बलात्कार गर्छन् र गर्भवती बन्छे, बिरामी बन्छे, जसलाई उ अब माया गर्न सक्तैन। एउटा घटनाले उसको हृदयमा आँधी सृष्टि गरिदिएको छ र उसको स्थिरता र मान्यताहरू चकनाचूर पारिदिएको छ। 'ललितादित्य दे मर्तन्द' का मामा ख्याति र सम्पत्ति नष्ट भएकोले मानसिक सन्तुलन पनि गुमाउँछ र त्यसले आफ्नी पत्नी र अंगीकृत पुत्रको जीवनलाई पनि प्रभाव पर्छ, यसरी आएको परिवर्त्तनलाई अंगीकृत पुत्रले थाहा पाउँछ र सहायता पुरयाउन व्यग्र बन्छ तर सक्तैन। 'तापु दा आदमी' को सुजन चुनावमा हार्छ र स्वयं आफू र परिवारका कष्टको विषय बन्छ। 'तूंत' को लोग्ने पत्नीको एउटा पत्र देखपछि उसित बिरानो बन्छ र उसलाई मार्छ। 'रिश्ते' को जीवनभाइ आफ्ना दल त्याग्न सक्तैन र सबैतिर खेदो गरिइन्छ अनि उसको परिवार र उ आफै पनि कष्ट भोग्छ। प्रश्न गर्न मन लाग्छ, मानिस किन यथार्थलाई सामना गरेर बाँच्न सक्तैन। ती किन आफूमा संकुचित बन्छन् र आफू लगायत आफ्ना हितैषीहरूलाई कष्ट पुरयाउँछन्? वास्तविकतालाई सामना गर्न अनिच्छुक, काल्पनिक भावनामा संलग्न र असफलताको अत्यधिक आत्म-पीड़नले कोरीं लाउँछ।

बन्धु शर्मा मर्मज्ञ शहरिया, आफ्ना असल कथाहरू 'परशम', 'रंगली चिरि' र 'बावा भैरो' मा असल शिल्पी छन्। तिनीहरूमा, शाहकी पत्नीकाँ आफूले बन्धक राखेकी आफ्नै शाल हेर्ने उत्कट इच्छा र सामाजिक मान्यताका विवशताको तनावमा परेकी वृद्धा स्त्री बुआको मानसिक स्थिति; एउटी रंगीन चरीले त्यसको बचेरा आफ्नी आमाकां ल्याइदिनेछ भनी सपना देख्ने सानो शिशुको विस्मय-सौन्दर्य; बाल्यकालको रोमाञ्चको विलुप्तिमा क्षयको अनुभव; मन्दिर-संगीतकारको भावना, जो वृद्ध भएको छ, जसको सेवाको आवश्यकता छैन र जसले अब मन्दिर-संगीतकारको विशेष पोशाक लगाउने छैन; एउटी केटीको आत्म-हत्याको उत्तरदायी एउटा मान्छेको मानसिक प्रतिक्रिया व आफ्ना प्रेमिकाको अर्कैसित विवाह हुने क्षय रोगीको जस्तै असंदिग्ध मनोवैज्ञानिक कौतूहल छ।

ओ० पी० शर्माका कथाहरू निर्धन, साधरण मानिसहरू र तिनीहरूका समस्याहरूसित सम्बन्ध राख्दछन्—बदलँदो अवस्था, पारम्परिक पेशाबाट विस्थापित मानिसहरू, पुराना मान्यता र स्वार्थलाई अतिक्रमण गर्ने नव सभ्यता,

एउटा सैनिकको स्वार्थत्यागले प्रज्वलित मानिसका साधरण स्वार्थपन, युद्धको विभीषिका अनि अपंग बने'र पनि हाँस्दै बाँच्ने मानिसका साहस, नानी जन्माउन सकिन भन्ने बहानामा पत्नीलाई पिट्ने लोग्नेको निर्दयता अनि परिस्थितिको दुर्भाग्य यस्तो बनाइदिन्छ कि पत्नी साँच्चै गर्भवती बनेकी समयमा पिटेकोले भ्रूण हत्या हुन्छ, उमेर पुगेकी मातृहीन छोरीको विवाहको निम्ति चिन्तित एउटा दरिद्र गाउँलेको व्यग्रता, घनघोर वर्षामा घर भत्किएर आफ्नी छोरी पुरिएको एउटा काश्मिरी श्रमिकमाथि आइपरेको संकट र पूरा घर-भाड़ा लिएर कोठाको छानु मरम्मत नगरिदिने जमीन्दारको निष्ठुरता; विवाह गर्न नखकिने एउटी विधवीप्रति एउटा टोंगावालाको प्रेम, विरामी भइरहने, पागलपन र अपुग, पानीमा डुबेकी एउटी केटीको सौन्दर्य र अज्ञानता र जसको एउटा वृद्ध मानिससित विवाह भएको छ, पत्नीले त्यागेपछि ओध्यान परेको एउटा मानिसको पश्चाताप जसले सदैव पत्नीलाई दुर्व्यवहार गर्थ्यो, गाउँलेहरूलाई शहरको आकर्षण, काली रूपवती केटीको विवाहको समस्या इत्यादि। ओम प्रकाश शर्माले 'चनुक्करिचदर' (पत्नी सिकस्त, भाइ अपंग र पिता ज्यादै वृद्ध भएको एउटा पिउनको पीड़ा र वेदनाको पृष्ठभूमिको रूपमा एक धूमिल साँझमा सिमसिम पानीमा एउटा सुनसान कार्यालयको वातावरण) या जस्तै वातावरण सृजन र आफ्ना कथाहरूका निम्ति, डुब्दो केटीको कथामा शारदीय दृश्य जस्तै स्वरूपको भावभूमि तयार गर्न अनि आफ्ना कथा 'भेर' मा तान्त्रिको ढक्कीमा एक दिनको जस्तै शब्द-चित्रहरू खिच्न पनि, वाग्धारामय डोग्रीको प्रभावकारी प्रयोग गर्छन्। अज मजाको विषय के छ भने तिनको वास्तविकता र भावुकताको त्याग। यहाँ मान्यताहरू र प्रतिफलतः कष्टको संघर्ष सृष्टि गर्ने पुरानामाथि नयाँको प्रभावले परिपूर्ण घटनाहरूका संसार छ।

ओम गोस्वामीका कथाहरूमा जीवनको अपरिपक्वताको चित्रण सदृश्य गुण पाइन्छ। त्यहाँ ग्राम्य जीवनको सरल-सौन्दर्य र शहरिया जीवनको भ्रष्टाचार र जटिलता अनि ग्राम्मिण र शहरिया मिश्रण उपनिवेशको फोहोर र दुर्गन्धको विरोधी चित्रण छन्। तिनको अभिव्यक्तिमा तीव्रता र बहावको स्वाभाविकताले संयुक्त तिनको संक्षिप्त सशक्त गद्यमा मांसपेशी र हाड़हरू छन् जसले तिनका कथाहरू पठनमा आनन्ददायी छन्। तिनी पाठकका समक्षमा पात्रहरू र घटनाहरूलाई टिप्पणी र नैतिकताहीन प्रस्तुत गर्छन् अनि यो प्रौढ़हरूदेखि युवा लघुकथाकारहरू छुटयाउने विशेषता हो। सामाजिक सचेतता छ—अस्पृश्यताका समस्याहरू र समाजको निर्धन वर्गमाथि धनीवर्गका लगातार चाप (राजपरत), पीढ़ी अन्तराल (छिन्न) आफ्ना शक्ति र योग्यतामा नारी जागृति (तिरिया चलित्तर), मिलावट (चन्द्रगुप्त मोर्य), निर्धनता र भोक ('रिजक' र चोर) र विवाह (मंगल चुन्दि)।

तिनीहरूका सामाजिक सचेतताको पछि सुधारकको आदर्शवादप्रति केही झुकाव छ। तिनी सामाजिक निर्माणमा भौं प्वाल, नवीन आकर्षण र व्यवहारमा पुराना मूलगत विवशता देख्छन्। 'तिरिया चलित्तर' कथामा जस्तै ओम गोस्वामीका कथाहरूमा ठाउँ ठाउँमा नरेन्द्र खजुरियाका प्रभाव दृष्टिगोचर हुन्छ। तर, तिनी अझ पर पुगेको देखिन्छ। 'हशिये दे नोटेस' मा तिनले शैली र स्वरूपमा नयाँ प्रयोग प्रस्तुत गरेका छन् तर आधारभूत आग्रह त्यही छ—सामाजिक चाप, तनाव र परिवर्तनको वातावरणमा मानव जीवनका अंगहरू का प्रस्तुति। शान्त स्थितिमा संकलित क्षणहरूका रूपमा यी टिप्पणी छन्। 'न्हेरे दा समुन्दर' कथाहरू अनुभवका अंशहरू हुन् अनि कोही पात्रहरू सामाजिक असमानता र विकारहरू, अन्धविश्वास र हिंसा, मानव असहायपन, मान्यताको परिवर्त्तन र जीवनको शैलीद्वारा भएको तनावलाई प्रकाश पार्न जीवन-सागरबाट निकालिएका छन्।

४

यी पाँच वर्षमा, नाटक क्षेत्रमा मौलिक कृतिभन्दा अनुवादहरू धेरै प्रकाशित भएका छन्। शेक्सपियरको म्याक्बेथ (अंग्रेजी) प्रा० सत्य पाल शास्त्रीद्वारा अनुदित र त्यही नाममा प्रकाशित छ। 'मृच्छकटम' (संस्कृत) शुद्रकको, रामनाथ शास्त्रीले अनुवाद गरेर 'मिट्टी दि गड्डि' नाममा प्रकाशित गरेका छन्। शम्भु मित्रको 'कंचनरंग' (बंगाली) जितेन्द्र शर्माद्वारा अनुदित 'सुन्न ते स्वार्थ' शीर्षकमा छापियो। गोर्कीको 'लोअर देथ्थस' रामनाथ शास्त्रीद्वारा अनुदित र 'पातालवासी' को नाममा प्रकाशित भयो। शान्ता गान्धीको एउटा गुजराती लोक-नाटक 'जसमा ओदन' डोग्रीमा कविरतनद्वारा अनुवाद गरिएको छ र डोग्री तीन महीने 'नमी-चेतना' को अंकमा प्रकाशित छ। चक्रधर शास्त्रीद्वारा डोग्रीमा अनुदित भाषको 'दूत वाक्य' 'नाटक डोग्री दा ते कविता नूरपुरे दि' मा प्रकाशित भयो अनि नरेन्द्र खजुरियाको हिन्दी नाटक 'रास्ता', 'काँटे और हाथ' कुलदीप सिंह जन्द्रहियाद्वारा अनुदित 'न्हेरे रास्ते चनन होये' प्रकाशित भयो। एकांकी नाटकका दुइवटा संकलनहरू पनि प्रकाशित भए—एउटा 'डोग्री एकांकी' शीर्षकमा जे० एण्ड के० अकादमी आफ आर्ट, कल्चर एण्ड ल्वांग्वुएजेसद्वारा र अर्को 'पैंखा' हिमाचलबाट छापियो। प्रसिद्ध डोग्री लघु कथाकार मदन मोहन शर्माले 'एक जनम होर' शीर्षकमा एउटा रेडियो नाटक संकलन प्रकाशित गरे। 'अस भाग जगाने आले आं' मा नरेन्द्र खजुरियाले गरेका कामलाई ओम गोस्वामीले नानीहरूका निम्ति सात एकांकीको एउटा पुस्तक 'डोग्री बाल एकांकी' थपेर अघि बढ़ाए। यस अवधिमा केवल दुइवटा मात्र पूर्णांकी नाटकहरू प्रकाशित भए—मदन मोहनको 'जनावर' र नरसिंह देव जम्वालको 'मण्डलिक'।

'मण्डलिक' एउटा पौराणिक नाटक हो किनकि यसको विषय-वस्तु राजा

मण्डलिक पनि तथाकथित दन्त्यकथाका व्यक्ति वीर गुग्गाको विषयमा एउटा लोकप्रिय डोग्री कविता छ। कृष्ण जन्माष्टमीको मोलियल्ट सम्पूर्ण डुग्गरमा गुग्ग नवमीको पर्व मनाइन्छ अनि जम्वालद्वारा नाटकीय रूप दिइएको 'मण्डलिक' मा कथा यस्तो छ दूध-नेराका राजा देवका दुइ पत्नीहरू हुन्छन्, वशाला र कशाला, अनि दुवै दिदी-बहिनीका नानी हुँदैन। जेठी, वशाला, उच्च विचारकी, उदार-हृदया निष्ठा र भक्ता हुन्छे जब कि कशाला कपटी, धोखाबाज र छली हुन्छे। पछिल्लोले धोखा दिएर दिदीको प्रार्थनाको फलस्वरूप एउटा छोरा पाउने वरदान गुरु गोरखनाथ बाट लिन्छे। वशाला ठगिन्छे र उसको हृदय भग्न बन्छ। गुरूले उसलाई सान्त्वना दिन्छन् र भन्छन् कि उसको भाग्यमा छोरा थिएन तर उसको गम्भीर साधना र पुत्र-प्राप्तिको इच्छा देखेर, उनले देव-देवीलाई वशालाको निम्ति एउटा पुत्रको वरदान मागिदिन्छन्, जो १८ वर्षसम्म बाँच्छ। यही नानी गुग्गा हुन्छ। कशालाका दुइ छोराहरू जन्मन्छन् जो अल्पमति र मन्द-बुद्धिका हुन्छन्। वासक नाग गुग्गासित ईर्ष्या गर्छन् अनि उसलाई नष्ट गर्न चाहन्छन् किनकि उसको वंश नष्ट गरिदिनेछ भनी उसलाई कुरा लगाइएको हुन्छ। उ गुग्गलाई नष्ट गर्ने चेष्टा गर्छ तर गोरखनाथले उसको रक्षा गर्छ। गुग्गा वा मण्डलिक एक सुन्दर युवक हुन्छ र गौढ़ बंगालको राजकुमारी सिरगलालाई विवाह गर्छ। उ पत्नीसित दाम्पत्य-सुख भोग गर्न राज्यदेखि बाहिर गएको समयमा गजनीका राजाले उसको राज्यमाथि आक्रमण गर्छ र राज्यको सब धन-सम्पत्ती र प्रसिद्ध गाई कपाला लैजान्छ अनि उसको पिता गर्छ। सिरगलाले कुनै खबर पनि मण्डलिकसम्म पुग्न नदिएकी हुनाले उ यी सब गतिविधिदेखि अनभिज्ञ हुन्छ। वशालाको नोकर्नी तुलसु छद्मवेषमा आउँछिन् र उसलाई सब कुरा अवगत गराउँछिन्। उ शीघ्रतासाथे सिरगलासित फर्कन्छ र आफ्ना राज्यमा पस्नभन्दा अघि गजनीमा जान्छ र लुटिएका सम्पत्ती र गाई फर्काएर ल्याउँछ। ठीक त्यस समयमा उ १८ वर्षको हुन्छ र हृदय गति आकस्मिक बन्द भएर मर्छ।

नाटकमा मूल पात्र मण्डलिक लगायत पात्रहरू ओझेल छन्। साँचो नाटकको तत्व यसमा कमै पाइन्छ। यो लोक-कथालाई नाटकीय रूप दिइएको मात्र हो जहाँ पण्डित प्युली र वासकको सहायक ककोरिले हँसाउने प्रयास गर्छ, छोराको निम्ति आमाको स्नेह, सौताको ईर्ष्या, दुई वंशका शत्रुता र धार्मिक प्रथाहरूमाझ सिरगल झूठो रोमाञ्चको वातावरण उत्साहित गर्छ।

'जनउर' एउटा सामाजिक मनोवैज्ञानिक नाटक हो जसले एउटा अपंग वृद्ध मानिसको रित्तोपन, नैराश्य र अतृप्त कामेच्छालाई उदांगी पार्छ। नाटकको मूल पात्र एउटा सैनिक कप्तानले दोस्रो विश्वयुद्धमा आफ्नो एउटा खुट्टा गुमाउँछ र अपंग बनिन्छ। एउटी दुई वर्षकी टुहुरी केटी गीतालाई उसले आफ्नी छोरी जस्तै पालन-पोषण गर्छ जो अब तरुणी भएकी छे र जो एउटा युवक अनिललाई प्रेम गर्छे

र उसैंसित विवाह गर्न चाहन्छे। त्यो अपंग वृद्ध मानिस उसले छोड़ेर गएकी सामना गर्न सक्तैन र आत्म-हत्या गर्ने विचार गर्छ। यो स्थितिसित नाटक शुरू हुन्छ र पहिलो दृश्यमा उसलाई रक्सीको प्रभावमा गीतालाई हेलेन र उर्वशीसित तुलना गर्दै उसकी शारीरिक सम्पत्ती गणना गर्दै बर्बराएको अनि आफू बाँचुञ्जेल सम्म गीतालाई नछुने शर्तमा आफ्नो घरेलु नोकरसित उसकी विवाह गरिदिने निश्चय गरेको देखाइन्छ। तर, नाटकको विकाससंग उसका गीतालाई ल्याइदिने आफ्नो साथी राधेश्यामले उसको विचारलाई खण्डन गर्छ, नोकर आफैं हट्छ, त्यो केटो आफू एउटा खट्टा गुमाएर युद्धबाट फर्केपछि आफूसित विवाह गर्न अस्वीकार गर्ने तर अर्कोसित विवाह गरेकी केप्टनको एक समयको मंगेतरकै छोरो हुन्छ, जो पछि विधुवी बन्छे अनि आफ्नो तरंगी योजनालाई कतैबाट पनि सहयोग नपाएपछि आफ्ना सम्पत्तीको आधा अंश नोकरलाई र आधा गीताको नाममा इच्छा-पत्र लेखिदिएर र गीतालाई स्वेच्छाले विवाह गर्ने स्वतन्त्रता प्रदान गरेर आफैंलाई गोली ठोक्छ। केप्टन र राधेश्यामको बीचमा लामो दिक्क लाग्दो संवाद छ जो बोलिरहन्छ, नाटकको गतिमा कुनै योग नदिने देशको राजनैतिक विषयमा बात-चीत गर्छन्, तर प्रथम दृश्यमा आफ्ना अतृप्त दमित कामेच्छा र गीतालाई सदैव साथमा राख्न चाहने तरंगी योजनालाई मार्ग दिन केप्टनको वेहोशी व्यवहारले सृष्टि गरेको तनावबाट यो संवादले मुक्ति प्रदान गरेको मानिन्छ। जीवनको प्रत्येक मिनटबाट आनन्द लिने केप्टनको विचार र उसको अतृप्त इच्छाको दारूण अवस्थाको यसमा व्याख्या छ। तनाव र उसको अतृप्त आकांक्षाको अपेक्षाको बीचमा उसको अन्तिम पतन अनि गीतालाई आफूसितै राख्न चाहने उसको इच्छाको सबैतिर खण्डन साँच्चै नै करुण छ।

५

१९६० तिरका प्रारम्भिक कालतिर तीन स-साना उपन्यासहरूका प्रकाशन-पछि प्राय: एक दशकसम्म डोग्री उपन्यास क्षेत्रमा कुनै गतिविधि भएन। १९७० मा स्व० श्रीवत्स विकलको 'फूल बिना डाली' को प्रकाशन प्रशंसनीय गतिविधि थियो। यसलाई १९७२ मा दुइ उपन्यासहरूका प्रकाशनले अनुसरण गर्‍यो—पिशोरीलाल गुप्तको 'जिस्स अइलाइ न्हेरा पेइ गेया' (रमन प्रकाशन बतोता) र कुमारी शकुन्तला शर्मा विरपुरीको 'वद-सीस' (राम प्रकाशन, बिरपुर)

पिशोरीलालको उपन्यासमा खुबै साधरण कथानक, थोरै पात्र-पात्राहरू र परिस्थिति छन् अनि यसमा उपन्यासकारको पहाड़ी डोग्रा समाजको निरीक्षण आत्म-परक छ—निष्ठूरता र हल्का झटकामा पनि हृदयमा उद्भव हुने दया। धेरै समयसम्म टाढ़ो रहेर घर फर्केको एउटा डोग्रा सिपाहीले घरमा खुट्टा टेक्ना-साथ उसकी आमाको मृत्यु हुन्छ। यति दिनको अवधिसम्म छोरालाई पर्खेपछि उ

आएपछि मर्छे। श्यामुले आफ्ना साथी रामुकी बसइन्तीमाथि सासूको अत्याचार देख्छ; उसलाई एउटा कोठामा बन्द गरिन्छ, आधा-पेट राखिन्छ, उसलाई पतिसित भेट गर्न निषेध गरिन्छ अनि बोल्न वा रून दिइन्दैन। उ गाउँको पण्डितको छोरो र उसकी गृहिणी इश्शरीको नाताको हठ देख्छ किनकि उसले चम्कीला बाईहरू र काजलको मांग पूर्ण गरिदिन सक्तैन। उ एउटी केटीलाई प्रेम गर्छ जो अर्कोलाई बेचिन्छ। कथानक वा चरित्र विकासमा धेरै लेख्नु केही छैन, उपन्यासको भाषा मुग्धकारी छ।

पारम्परिक कट्टर मूल्य प्रथा र रूढ़ीगत व्यवस्था र परम्पराको चापमा केही नवीन मान्यताका विकासक्रमको भारग्रस्त डोग्रा निम्न मध्यमवर्ग समाजको एउटा विशिष्ट भागको वृहत्तर तुलिका छ 'फुल बिना डाली'। सोमा मूल पात्रा हो, अनि उ जाफूमा परिर्त्तनलाई साकार बनाउँछे। उपन्यासले त्यो वीजको अंकुरण प्रदर्शित गर्छ। यो १७ वर्षकी तरुणी डोग्रा युवतीको रूपमा सोमाको परिचयसित शुरू हुन्छ, जसले १५ वर्षको उमेरमा आफ्नी आमालाई गुमाउँछे, प्रथम दर्जामा मेट्रिकुलेसन पास गरेकी छे, अनि घरकी जेठी छोरी हुनाले घर सम्हाल्छे, बुद्धा दुइ भाइहरू र एउटी बहिनीको स्याहार-सुसार गर्छे अनि प्रसव समयमा उसकी मृत्यु-सितै कथा समाप्त हुन्छ। बीचमा रमेशसित उसकी मंगनी गरिने प्रस्ताव हुन्छ, आफ्नी आमाले सोमालाई आक्षेपयुक्त संकेत गरेकी हुनाले रमेश उसलाई आमाकै दृष्टिले हेर्न थाल्छ र समय समयमा सघाउँछ, ब्रीजसित उसको विवाह हुन्छ जो आकस्मिक विरामीले मर्छ, तर मर्न अघि विवाह बन्धनदेखि उसलाई मुक्त गरिदिन्छ र आफ्नो मृत्युपछि उसलाई पुनः विवाह गर्न भन्छ; त्यसपछि उ शिक्षिका बन्छे, र आफू जस्तै शिक्षक स्वदेशसित विवाह गर्छे, जसलाई उसले विरामी अवस्थामा स्याहार-सुसार गर्छ र प्रेम गर्छ। सोमाको चरित्र र उसले अन्तमा विजय गरेकी प्रतिकूल वातावरणले शरत्चन्द्र चट्टोपाध्यायको उपन्यासको सम्झना गराउँछ। सोमा, शिव र सुन्दर, माटोको परम्परामा आधारित, स्वार्थ-त्यागी र स्व-सुधारक र आफ्ना सबैलाई सहायता पुर्‍याउने, यतिसम्म कि आफूले आर्जन गरेकी रूपियाले नन्दा-देवरलाई पनि सहायता गर्ने आदर्श पात्रा हो। उपन्यासकारले उसलाई विधवा-पुनर्विवाहको समस्याका आफ्ना सुधारवादी आग्रह वाहन र डोग्री उखान 'जिन्दें गि दांगां तो मोयें गि भांगां' को एउटा दृष्टान्त-को रूपमा सृजना गरेका छन्। केही वर्ष अघिसम्म मात्र पनि विधवा-पुनर्विवाह सोच्नसम्म नहुने पछौटे कट्टर समाजमा पुनर्विवाह गरेर सोमाले एउटा नवीन पथलाई प्रज्ज्वलित पार्छे र एउटा उदाहरण स्थिर गर्छे। कृष्णको चित्रको सट्टामा स्वामी दयानन्दको चित्र राखेर रमेशले सोमालाई आर्य समाजी बनाउँछ किनकि आर्य समाजले पुनर्विवाहको अनुमति दिन्छ जुन कट्टर हिन्दुवादले दिंदैन; तैपनि सोमा हृदयले कृष्ण-भक्ता र सदैव जस्तै धार्मिक रहन्छे।

शकुन्तला शर्माको उपन्यासले नाता र विवाहको समस्या छान-बीन गर्ने प्रयास गर्छ र 'फूल बिना डाली' को सोमाभन्दा डोग्रा नारीलाई अझ मुक्त देखाउँछ। यो उपन्यासको मूल पात्रा शकुन हो, जो आफ्ना शिक्षक प्रथम प्रेमीद्वारा विश्वासघात गरिएपछि विवाह गर्दिन अनि एउटा जीवनवृत्ति लिएर स्वतन्त्ररूपले जीवन यापन गर्छे। उपन्यासको ताना-बाना बुन्ने नाताको विविध अंशहरू छन्—मूल पात्रा शकुन र वाचकको सम्बन्ध, अनि उसकी गुरु वेद, जसले उसलाई प्रेम गर्ने बहाना गर्छ तर पछि अर्कै सुन्दरी र धनी केटी सतीशलाई विवाह गरयो, वेद र उसकी पत्नी सतीशको सम्बन्ध र वेदको दु:ख, शकुन र ललितको बीचको सम्बन्ध, जसले उसलाई दिदी भन्छ, ललितकी आमा जानकी र ललितको पिताको सम्बन्ध, जानकी र उसको प्रेमी र दोस्रो पति सइनको नाता। शकुनले विवाह गर्दिन र डाक्टरको जीवनवृत्ति लिन्दे तर वेदप्रतिको प्रेम बचाइराख्छे। जानकी आफ्ना पतिलाई त्याग्छे र अर्को मानिससित बस्न थाल्छे जसलाई सायद उ प्रेम गर्छे। उसले आफ्ना छोरोलाई माया गर्छे तर आफ्ना पितालाई त्यागेकीमा छोरोले उसलाई क्षमा दिदैन। छोरो विरानो भएकोमा उसलाई दु:ख लाग्छ। वेद आफ्नी प्रेयसीको आह्वानलाई अस्वीकार गरेर अनि प्रेमभन्दा अन्य वस्तुलाई प्रधानता दिएर विवाह गरेकोमा सुखी छैन। गठनको दृष्टिकोणले उपन्यास सुष्ठ छैन, तर विषयमा यो बढ़ी यथार्थिक, पूर्ण र कालानुकूल छ।

'नमी चेतना', 'शिराजा', 'सारा साहित्य' र 'फूलवारी' का अंकहरूद्वारा प्रत्यक्ष छ कि हालमा प्रशस्त मात्रामा डोग्री गद्य लेखन भएको छ। तरै पनि १९७०-७४ मा पुस्तकाकारमा केवल सातवटा मात्र प्रकाशित भएका छन्—(१) 'रजत जयन्ती'—डोग्री संस्थाद्वारा १९७० मा संस्था, स्थापनाको रजत जयन्तीको उपलक्षमा प्रकाशित डोग्रा जीवन, कला, साहित्य, भाषा, इतिहास इत्यादि विभिन्न पक्षमा लेखिएका रचनाका संकलन (२), 'चुभ्मं ते हास्से' डोग्रीमा केही हास्य-व्यंगका गद्यावली; (३) डा० वेद कुमारीको 'काश्मिर दर्पण'; (४) प्रा० रामनाथ शास्त्रीको 'बावा जित्तू', काश्मिरको संस्कृत बपौती र बावा जित्तु-माथि लोक कविताको ऐतिहासिक प्रवृत्ति र साहित्यिक गुणमाथि गरिएका शोध-कार्यका दुइवटा संकलन; (५) चञ्चल शर्माका साहित्यिक समालोचनाका आठ-वटा निबन्धका संकलन 'नजर अपनि अपनि', जसमा तीनवटा डोग्री उपन्यास, मदनमोहन र ओ० पी० शर्माका कथाहरू र चरण सिंह र अलमस्तका कविताहरू चर्चा गरिएका निबन्धहरू समकालीन लेखकहरूका समालोचनाका दिशातर्फ प्रशंसनीय प्रयास हुन्; (६) डा० संसारचन्द्र का हास्य र व्यंगका १२ निबन्धका संकलन 'बुराइ दे लड्डू'; अनि (७) एक व्यक्ति, एक कवि, एक उपन्यासकार र एक लघुकथाकारको रूपमा विकलमाथि लेखिएका रचनाहरूका संकलन—'श्री वत्स समारिका'। यसमा तिनका विषयमा केही कविताहरू पनि छन्।

७

डोग्रीमा अनुवाद कृतिलाई पनि अवहेलना गरिएको छैन। अघि नै चर्चा गरिएका नाटकहरू बाहेक डोग्रीमा अनुदित र प्रकाशित अन्य कृति हुन्— (१) संस्कृतको 'हितोपदेश', (२) अंग्रेजीबाट गोर्कीका कथाहरू र संस्मरणहरू, (३) हिन्दीबाट 'मृगनयिनी' उपन्यास, (४) हिन्दीबाट 'सामान्य भाषा विज्ञान', (५) र (६) 'श्रीमद् भागवत गीता' संस्कृतबाट—एउटा श्रेष्ठ पठानिया र अर्को चक्रधर शास्त्रीको र (७) देखि (१०) सम्म चार स-साना पुस्तिकाको रूपमा संस्कृतको 'उपनिषदहरू', एउटा 'कथोपनिषद', एउटा 'केनोपनिषद', एउटा 'तयात्रियोपनिषद्' र तीनवटा अर्थात् 'ऐतरेय', 'प्रश्न' र 'इशावश्य' एउटै पुस्तक 'त्रयउपनिषद' शीर्षकमा संकलित छन्। संस्कृत मूल र डोग्री अनुवाद भएको यी उपनिषदहरू प्रा० रामनाथ शास्त्रीद्वारा सम्पादित र धर्मार्थ ट्रस्ट, जम्मुद्वारा प्रकाशित हुन्।

अध्याय आठ

# सिंहावलोकन

१९७० तिरका मध्यतिर डोग्री साहित्य विकासको शोचनीय अवस्थामा हुन्छ। यसको वृद्धिको निम्ति केही अनुकूल र केही प्रतिकूल कारकहरू छन्। प्राप्ति, परिपूर्णता र आशाको अभिप्राय छ। नैराश्य, अपर्याप्तता र निराशाको भावना पनि छ।

यसमा कुनै सन्देह छैन कि डोग्री साहित्यको वृद्धिको निम्ति आज स्थिति अनुकूल छ। डोग्रीप्रतिको साधरण उदासीनताको व्यवहार शनैः-शनैः द्रविभूत हुन थालेको छ अनि धेरै मानिसहरूले अब आफ्ना मातृभाषाप्रति रुचि लिन लागिरहेका छन्। गत दशकमा लेखक र पाठकका संख्यामा महत्वपूर्ण वृद्धि भएको छ अनि साहित्यिक गतिविधिको क्षेत्रपनि जम्मुका स-साना शहरहरूमा मात्र होइन तर हिमाचल प्रदेश र दिल्ली सम्म फैलिएको छ।" जम्मु एण्ड काश्मिर कल्चरल एकाडेमी, डोग्री रिसर्च इन्सटिच्युट, जम्मु डोग्रा मण्डल र डोग्री संस्था जस्ता संस्थानहरूले डोग्रीको हितको निम्ति आवश्यकताको समयमा ठूलो सहायताको सेवा गरेका छन्। एकाडेमी, हिमाचल प्रदेश, डोग्रा हिमाचल संस्कृति संगम, दिल्लि जस्ता नया संस्थानहरू अनि डोग्री साहित्यको विकासमा रुचि राख्ने व्यक्तिहरूका बढ़दो संख्याले यसमा अझ बढ़ी योगदान प्रदान गर्लान भन्ने आशा गरिन्छ। यो शताब्दीको प्रथम पैंतीस वर्षमा केवल दुइवटा मात्र डोग्री पुस्तकहरू लेखिएका थिए—पं० हरदत्त शास्त्रीको भक्ति-गीतका संकलन 'डोग्री भजनमाला' र प्रो० गौरी शंकरद्वारा अनुदित 'गीता' को डोग्री गद्यानुवाद 'श्रीमद्‌भगवत गीता।' यसपछिको ३५ वर्षमा डोग्रीमा १७३ वटा पुस्तकहरू प्रकाशित भए। गत पाँच वर्षमा सामयिकीहरू लगायत प्रायः १०० प्रकाशनहरू थपिए। जम्मु र काश्मिर विश्वविद्यालयले सञ्चालन गरेको डोग्री-प्रवीणताका परीक्षाहरू निकै लोकप्रिय हुंदैछन्। डोग्री भाषा र संयुक्त पहाड़ी अभाषिकाहरूमा शोधकार्यको निम्ति जम्मु र काश्मिर, पंजाब, हिमाचल र कुरुक्षेत्रका विश्व-विद्यालयहरूले प्रोत्साहन दिइरहेका छन्। जम्मुबाट अर्को डोग्री पत्रिका 'अम्बर'

प्रकाशित हुन शुरू गरेको छ। हिमाचल प्रदेश सरकारको जन-सम्पर्क विभाग र हिमाचल एकाडेमी अफ आर्ट, कल्चर एण्ड ल्यांग्वुएजेसद्वारा प्रकाशित दुइवटा हिन्दी पत्रिकाहरू 'हिमप्रस्थ' र 'समसि' ले पनि यस अञ्चलको भाषा र साहित्यको गतिविधिका वर्णन दिन्छन्।

तैपनि, आज डोग्री लेखकको चिन्ताको विषय के छ भने डोग्रीमा लेखकहरू र पाठकहरू खुबै कम छन्। डुग्गर धेरै अशिक्षित भएका पछौटे अञ्चल हो। अझसम्म डोग्रीलाई विद्यालयहरूमा उच्चतर माध्यमिक स्तरसम्म पनि शिक्षाको माध्यम बनाइएको छैन। डोग्रीमा पाठ्य-पुस्तकहरू, अर्द्ध-शिक्षित वा प्रौढ़हरूका निम्ति पुस्तकहरू छैनन्, शिशुहरूका निम्ति पुस्तकहरू छैनन्, भने पनि हुन्छ (नरेन्द्र खजुरिया र ओम प्रकाशका दुइ पुस्तकहरू बाहेक) दैनिक समाचारपत्र र मासिक पत्रिका छैन। यद्यपि डोग्रीको एउटा व्याकरण हिन्दीमा पाइन्छ, शब्दकोष छैन; जे० एण्ड के० कल्चरल एकाडेमीले एउटा (शब्दकोष) तयार गर्ने काम लिएको छ अनि यो चांडै नै प्रकाशित हुने आशा छ। आफ्ना मातृ-भाषाप्रति रुचि नलिने डोग्राहरू धेरै संख्यामा छन्, तीमध्ये पनि कतिले डोग्रीलाई लेखन र पठन योग्य ठान्दैनन्। विद्यालयहरूमा शिक्षाको माध्यम डोग्री बनाउनु र विशेष रूपले तयार गरिएका डोग्री पुस्तकहरूसित प्रौढ़ शिक्षाको कार्यक्रम अघि बढ़ाउनु, यी दुइ उपायद्वारा डोग्रीका पाठकहरूका संख्या वृद्धि गराउन सकिन्छ। डोग्री माध्यमका अध्येयताहरूले स्वाभाविक नै डोग्रीमा पुस्तकहरू माग्छन् अनि एक पल्ट पाठकका संख्या धेरै भए पछि तिनीहरूका निम्ति पुस्तकहरू र पत्रिकाहरू लेखिन्छन्।

डुग्गरमा प्रायः ३५ भाषिकाहरू छन् र जसमध्ये डोग्री र कांगड़ी दुइ प्रमुख भाषिकाहरू हुन् अनि तिनीहरूमा घनिष्ठ सादृश्यता र सामान्य विशेषताका एउटा ठूलो क्षेत्र छ। दुवैको प्रयोग साहित्यिक उद्देश्य हो, तर कांगड़ीभन्दा बढ़ी जम्मुको डोग्री। १९४० तिर एक भद्र मानिसले गीताको भद्रवाही अनुवाद गर्ने प्रयास गरे तर त्यसपछि त्यो भाषिकामा अरु केही भएको छैन। चमेयालीमा प्राचीन लेखनका नमूनाहरू पाइन्छन्। मानिसहरूले अरु भाषिकामा पनि लेखन शुरू गरेका छन् यद्यपि अहिलेलाई त्यो लेखन पद्य रचनामा सीमित छ। जम्मु र हिमाचल प्रदेशका प्रायः ५० लाख जनताले बोल्ने भाषाको प्रस्तावनाको रूपमा डोग्रीलाई मान्यता दिइएको छ। त्यसर्थ, भाषाको समस्याप्रति एउटा संगठित र यथायोग्य आग्रहको आवश्यकता छ। यस दिशा तर्फको प्रथम काम हुन्छ सम्पूर्ण डोग्रा अञ्चलको भाषिकाविषयक मात्रचित्र तयार गर्नु अनि बोलिएका भाषिकाका नमूनाहरू वैज्ञानिक आधारमा संकलन गर्नु त्यसपछि सादृश्यता, सामान्य विशेषता र सामान्य शब्द-भण्डारलाई जोर दिंदै समस्या समाधान गर्नु। एक भाषिकाभन्दा अर्को असल हो, वा एक देखि अर्को पृथक हो वा एकदेखि अर्को पृथक राखिनुपर्छ

भनी विचार गर्ने प्रवृत्तिलाई रोक्नु आवश्यक छ। प्रथम अखिल-भारत डोग्री लेखक सम्मेलनले यो अञ्चलमा बोलिने भाषिकाहरूका वैभिन्यतालाई मानि लियो अनि यस्तो प्रस्ताव पारित गर्यो कि यी भाषिकाहरूका समन्वय र एकीकरण प्रक्रिया बिस्तारै र स्वाभाविक रूपले हुनुपर्छ, जब कि शब्द-विन्यास र उच्चारणमा बढ़ी प्रामाणिकता ल्याउन प्रयास जारी राख्न पर्छ र सबै स्थानीय विभेदलाई पूर्ण सुविधा दिइनु पर्छ। डोग्रा अञ्चलमा बोलिने भाषाको नामकरण विषयमा कति ठाउँमा विवाद उठाइयो त्यसर्थ जम्मु र काश्मिर राज्यको डोग्रा अञ्चलमा बोलिने भाषालाई 'डोग्री' भनिन्छ अनि हिमाचलका डोग्राहरूद्वारा बोलिने भाषालाई 'पहाड़ी' भनिन्छ। सम्मेलनले डोग्री-पहाड़ी भाषाको विकासलाई राजनैतिक, भावुकता र शब्दार्थ विषयका विवादहरू अवरोधक नबनिने अनि त्यो अञ्चलका जनताले आफ्ना मातृ-भाषालाई 'डोग्री' 'पहाड़ी' वा अरु कुनै नामले बोलाए पनि त्यो भाषाको पूर्ण विकास र सम्पन्न हुने हेतुको वाधा नबनोस् भन्ने कामना गरे। भाषा जीवित र फस्टाउँदो वस्तु हो अनि मुख्यतः बोलिने शब्दमात्र रहेको, सामान्य सांस्कृतिक वंशपरम्परा, सामाजिक र ऐतिहासिक पृष्ठभूमि भएको ३५ विविध तत्वहरूका मिश्रणबाट, भिन्न-भिन्न ठाउँमा स्थानीय विविधताले बोलिंदै यो प्राचीन भाषाले लिखित भाषाको रूप लिएको हेर्न रोचक हुन्छ।

. अन्तमा डोग्रीले कस्तो आकृति र स्वरूप लिनेछ सो अहिले भन्न सकिंदैन। जम्मु बाहेक, जम्मु र काश्मिर राज्य र हिमाचल प्रदेशमा साहित्यिक गतिविधिका अन्य केन्द्रहरू खोलिनेछन् र प्रत्येक केन्द्रले आफ्नै पाराको विशिष्ट भाषिक रूप र डोग्री वा पहाड़ीको आफ्नै प्रकारको रूप विकास गर्ला। साहित्यिक गतिविधिको तीनवटा केन्द्रहरू भएको मलायलम वा एक भन्दा बढ़ी केन्द्र भएको कन्नाडाको जस्तै यस्ता पूर्व दृष्टान्त छन्।

यद्यपि, डोग्रीमा संकोचपूर्ण साहित्यिक गतिविधिको प्रमाण, जम्मुको महा-राजा रणजितदेवका राजसभा दत्तुद्वारा सुशोभित भएको समय १८वौं शताब्दीको उत्तरार्द्धमा पहिल्याउन सकिन्छ तथापि डोग्री साहित्य विशेष केवल तीन दशक पुरानो हो। काश्मिरी साहित्य पाँच शताब्दीले जेठो हो तापनि मात्रा र गुणमा डोग्री साहित्य काश्मिरी साहित्यभन्दा कम छैन अनि डोग्रीका केही उत्कृष्ट रचना-लाई पाँच शताब्दी जेठो अन्य भारतीय भाषाहरूका उत्कृष्ट रचनासित तुलना गर्न सकिन्छ। एउटा भाषाको परिपक्वता, प्रतिष्ठा र जैवशक्तिको चिह्न आवश्यक रूपमा उमेर होइन।

धेरै जसो भारतीय भाषा साहित्यहरूले रामायण, महाभारत र हिन्दु पुराणबाट प्रोत्साहन र विषय प्राप्त गरे; भक्ति-गीत र स्थानीय उपाख्यानहरूले तिनीहरूका प्रारम्भिक रचनाका एउटा मुख्य तत्वको रूप लिए अनि पछिबाट अंग्रेजी साहित्यको प्रभावले तिनीहरूका विकास र आधुनिकरणमा महत्वपूर्ण

भूमिका निभायो। डोग्री लोक विषयहरू, गीता, दुर्गा सप्तसती र भर्तृहरिका अनुवाद अनि रामायण र लोकप्रिय वेदान्तका विषयबाट शुरूवात भयो। अघिल्ला अवधिका डोग्री लेखकहरूले संस्कृत, हिन्दी र उर्दू साहित्यहरू राम्ररी अध्ययन गरेका थिए अनि तिनीहरूका आफ्नै लेखन यो सत्यद्वारा प्रभावित र स्थिरण गरिएका थिए। यसले संस्कृत र हिन्दीका अनुवादहरूका प्रबलता हिन्दी र उर्दू साहित्यिक स्वरूपमा ढाल्नु र डोग्री गजलका प्रादुर्भावले यसको लेखा-जोखा गर्छ।

केही संस्थाहरू र व्यक्तिहरूले भारतीय भाषाका विकासको निम्ति प्रमुख भूमिका निभाएका छन् जस्तै तेलेगुको सम्बन्धमा साहिति समिति, मराठीको निम्ति मामा वारेरकर, बंगालीको निम्ति बंकिम चन्द्र च्याटर्जी र रवीन्द्रनाथ ठाकुर, उड़ियामा पञ्च शाखा, पाँच साथीहरु (बलरामदास र अन्य), र अगरवाल, बेजबरुआ, गोस्वामी र गोहाइ बरुआ आसामीमा। डोग्रीको निम्ति डोग्री साहित्यको विकासमा डोग्री संस्था र रामनाथ शास्त्री जस्ता यसका बढ़ी सक्रिय सदस्याहरूद्वारा प्रमुख भूमिका निभाइएको छ।

स्टेट कल्चरल एकाडेमिज, राज्य सरकारहरू र विश्वविद्यालयहरूले पंजाबी, मराठी, तामिल, गुजराती जस्ता भारतीय भाषाहरूका विकासमा ठूलो सहायता प्रदान गरेका छन्। जे० एण्ड के० कल्चरल एकाडेमीले आफ्ना प्रकाशन कार्यक्रम र लेखकहरूलाई आर्थिक सहायता र पुरस्कारहरूद्वारा डोग्री साहित्यको विकासमा ठूलो सहयोग प्रदान गरेको छ। जम्मु र काश्मिर र हिमाचल प्रदेशको कल्चरल एकाडेमिज र विश्वविद्यालयहरूले ती अञ्चलका मातृभाषामा लेखन-लाई वृद्धि र विकास गराउन सहयोग प्रदान गर्नेछ भनी आशा गरिन्छ। यी दुइ राज्यका शिक्षा विभागले उच्चतर माध्यमिक स्तरसम्म शिक्षाको माध्यम मातृ-भाषा बनाएर, मातृभाषामा पाठय पुस्तकहरू तयार पार्न लगाएर अनि राज्यका शिक्षण-संस्थानका पुस्तकालयहरूलाई डोग्री प्रकाशन क्रय गर्न प्रोत्साहन प्रदान गरेर भाषाको विकास गर्न सहायता प्रदान गर्न सक्नेछन्।

भारतीय भाषा-साहित्यको मंचमा डोग्रीले के ल्याउँछ? सायद धेरै दिन सक्तैन। यसले आफ्नो सम्पन्न लोक साहित्य, केही सुन्दर र भावपूर्ण कविताहरू, सामाजिक संकलपका केही स्मरणीय लघु कथाहरू, केही निबन्धहरू र केही नाटक र उपन्यासहरू। लोक साहित्य गीत र पद्यमालामा, लोक कथामा, उखान र वाधाहरूमा समुदायको जीवनको एउटा भण्डार हो। गीतहरू विशेषत: संगीतमय र हृदयको अवाध प्लावमान हुन्छ। लिखित साहित्य खुबै थोरै छ र यसमा साहित्यिक गुण पाउन नसकिएला। यसमा एउटा भारतीय समुदायको भूमि र मातृभाषाको सौन्दर्य, पीड़ा, निर्धनता र भोकको विरुद्धमा प्रतिवाद, जनताको पछौटेपन र अज्ञानता, जमीन्दारी सामाजिक व्यवस्थाको पक्षपात र शोषण अनि घस्रँदो सामाजिक परिवर्त्तन प्रति बढ्दो सचेतताको खोजको निम्ति सत्प्रयास छ।

यद्यपि आज १०० भन्दा बढ़ी व्यक्तिहरू कविता लेखिरहेछन्, तर प्राय: २० जनाको कृति मात्र अर्थपूर्ण छ र प्राय: १० जनाको मात्र उत्कृष्ट कृतिमा उच्च स्तरीय साहित्यिक गुण छन्। कवितालाई सन्तोषजनक रूपमा अनुवाद गर्न सकिन्दैन। परमानन्द अलमस्त, यश शर्मा र किशन समायल्पुरीका शब्द-संगीत र गीतका रमणीयता अर्को भाषामा प्रतिपादन गर्न सकिन्दैन तर तिनीहरूका गीत सुन्ने र पढ़ने डोग्राहरूले तीहरूमा धेरै सौन्दर्य पाएका छन्। वेद दीप डोग्री गजलका कारिगर हुन् अनि तिनका केही उत्कृष्ट गजलहरूमा एउटा अद्भुत परिव्याप्त वेदना र दीर्घ लुप्त प्रणयको चिन्ता छ। रामनाथ शास्त्री, वेददीप, केहरि सिंह मधुकर, पदमा, मोहनलाल सपोलिया, नरसिंह देव जम्वाल, ओ० पी० शर्मा, सन्तोष खजुरिया र स्वर्गीय चरण सिंहका उत्कृष्ट कविताहरूमा चिरस्थायी गुणहरू छन् र तीहरूलाई अन्य भारतीय भाषाका उत्कृष्ट कवितासित सहजै तुलना गर्न सकिन्छ। स्वरूपका पूर्वधारणा समालोचनाका अनुपस्थिति र गुणग्राही र दोषग्राही श्रोताका आवश्यकता नै आजसम्म धेरै जसो डोग्री कविताका मुख्य कमजोरीहरू छन्। सामान्यतया डोग्री कविता कवि सम्मेलनको स्तरदेखि अझ पर जानु नै छ, उपर्युल्लिखित कमजोरीहरू हटाउनु छ, भावुकतावाद र नारा-वाद त्याग्नु छ अनि केही बौद्धिक परिपक्वता प्राप्त गर्नु छ। कवि सम्मेलनमा बाहुल्य रहने दोषग्राहीहीन मूल्यांकनलाई ज्ञानप्राप्त आलोचनाले हटाउँछ अनि कविहरू स्वयं एक गम्भीर अन्तर्वाध्यताले लेखछन् न कि श्रोतालाई खुशी बनाउन।

डोग्री लघु कथाले अत्यधिक प्रगति गरेको छ; बी० पी० साठेको 'पेहला फूल' र ललिता मेहताको 'सुइ धागा' देखि लिएर मदन मोहन शर्मा, नरेन्द्र खजुरिया, वेद राही र ओम प्रकाश शर्मा, बन्दु शर्मा, छत्रपाल र ओम गोस्वामीका उत्कृष्ट कथाहरूसम्म, एउटा लामो उछाल हो। साठेका कथाहरू लोक-कथा परम्पराको खुबै नजीक छन् अनि ललिता मेहताका कथाहरू बढ़ी भावुक छन्। तर, वेद राही, मदन मोहन शर्मा, नरेन्द्र खजुरिया, ओम गोस्वामी छत्रपाल र ओ० पी० शर्माका उत्कृष्ट कृतिहरू शिल्पकारिताको गुण, बढ़ी सामाजिक सचेतता बढ़ी तीव्र राग, बृहत्तर मनोवैज्ञानिक अन्तर्दृष्टि र एउटा भाव, एउटा वातावरण एउटा पात्र वा एउटा स्थिति वा सामाजिक समस्या चित्रण सृजनार्थ डोग्री भाषाको शब्दार्थका सूक्ष्म अन्तरको निपुण प्रयोगले परिलक्षित छ। केही प्राप्य उपन्यासहरू जीवन र डोग्रा जीवनका समस्याहरू का वर्णनको सन्तोषजनक प्रयास हुन्। डोग्रा समाजको जमीन्दारी सामाजिक व्यवस्था र स्वतन्त्रता पश्चात् परिवर्त्तनको झोंकाले समाजको यी अवरोधलाई बढ़ार्ने शुरूवात सूक्ष्मरूपले चित्रण गरिएका छन् अनि यी उपन्यासका प्रमुख पात्रहरूलाई यथार्थिक भए तपनि कोमलतासाथ चित्रण गरिएका छन्, अनि कथानकले शिथिल भए तापनि उपन्यासकारको उद्देश्य पूर्तिलाई सहायता पुरयाउँछ।

यतिञ्जेलसम्म डोग्री काल्पनिक कथाको क्षेत्र साह्रै सीमित छ—विशेषतः सामाजिक समस्याहरूले गर्दा ग्रामिण। डुग्गरमा विचित्र देखिने समाधान परिवर्तरहेका सामाजिक जीवन र समस्याहरू ठूलो अंशमा छन्। विषय, शैली र स्वरूपमा भरखरै देखिएका केही प्रयोगहरू अझै पनि बढ़ी विकसित साहित्यका विधामा गरिएका नव-प्रयोगदेखि टाढ़ै छ।

यतिञ्जेल लेखिएका डोग्री नाटकहरू अव्यवसायिक र कटमेरो छन्। बावा जित्तु र शरपञ्च जमीन्दारी डोग्रा विगतको डोग्रा वीरहरूका आदर्शमूर्त नाटकीय प्रतिरूपहरू हुन्, बावा जित्तु र दत्त रानू, दुवै सामाजिक न्यायको हेतुमा बनिएका शहीद हुन्। यिनीहरूका कथानक र मण्डलिकको पनि साह्रै कमजोर छ, भावुकताको पौल छ अनि नाटकीय तत्वहरू सीमित छन्। 'नम ग्रान', 'देहरि' र 'धारां दे अथ्रू' सामाजिक उद्देश्यका नाटकहरू हुन् अनि उति सन्तोषजनक छैनन्। डोग्रा एकांकी नाटकहरू असल छन्। नाटक लेखन कठिन विषय हो अनि डोग्री मञ्च अझ पनि पछाड़िएको छ। असल उदाहरणहरू थोरै छन्। डोग्रीले साँच्चै असल नाटकहरू उत्पन्न गर्न अझ समय लाग्नेछ जुन असल साहित्य पनि हुनसक्छ।

भाषा र यसको साहित्यको विकासमा गद्यको महत्वलाई डोग्री लेखकहरूले विलम्बसाथ बुझे। यद्यपि केही व्यक्तिहरूले डोग्री भाषा, डोग्री संस्कृति, डोग्री कला र मूर्तिकला, ऐतिहासिक र शोधकार्यका विषयमा रचनाहरू लेखेका छन् तथापि आजसम्म निबन्धका पुस्तकहरू खुबै कम प्राप्य छन्। श्यामलाल शर्माले डोग्री भाषामाथि विस्तृत रूपले लेखेका छन् अनि केदारनाथ शास्त्री, संसार चन्द र विद्या रतन खजुरियाले ऐतिहासिक स्मारकहरू, डोग्री कला र चित्रकलामाथि लेखेका छन्। यी प्रत्येक लेखकले, डोग्रा इतिहास विषयमा एउटा रचना लेख्ने गोवर्द्धन सिंह र डोग्री भाषा र संस्कृतिको क्षेत्रमा समस्या जाँच्ने शोध विदुषी डा० वेद कुमारी जस्ता लेखकहरूले डोग्री भाषामा आ-आफ्ना विशेषताका विषयहरूमा बढ़ी विस्तारपूर्वक लेखे प्रशंसनीय कार्य हुने थियो। डोग्री गद्यको विकासमा त्यो साँच्चै एउटा साँचो योगदान हुनेथ्यो। त्यसरी नै शिक्षकहरूले आ-आफ्ना शिक्षण विषयमा डोग्रीमा चाखलाग्दा पुस्तकहरू लेखन सक्थे। शक्ति शर्मा, विश्वनाथ खजुरिया र लक्ष्मीनारायणले गरेका कृत्यलाई अघि बढ़ाउन आवश्यक छ अनि साहित्यिक मूल्यांकनमा यदाकदाको प्रारम्भिक प्रयासहरूलाई, डोग्री साहित्यको लेखा जोखा गर्न र साहित्यिक समालोचनाको सिद्धान्तलाई विकास गराउन, यथाक्रम संगठित आग्रह विकास को निम्ति विस्तार गराउन आवश्यक छ।

कुनै भाषाको गद्यको विकासमा पत्रकारिता लेखन एउटा प्रमुख योगदानको कारक हो। अभाग्यवश, आजसम्म डोग्रीमा पत्रकारिताको गतिविधि खुबै सीमित छ। सबै जस्तो अन्य भाषाका धेरै मासिक र साप्ताहिक मात्र होइन तर दैनिक पत्रहरू पनि छन्। आशा गरिन्छ कि यो दशकमा डोग्री पत्रिकाका संख्यामा वृद्धि हुनेछ।

# ग्रन्थ-सूची


१. एन इन्ट्रोडक्सन टू डोग्री फोक लिटरेचर एण्ड पहाड़ी आर्ट—लक्ष्मी नारायण एण्ड समसर चन्द ।

२. एन इन्ट्रोडक्सन टू मॉडर्न डोग्री लिटरेचर—नीलाम्बर देव शर्मा ।

३. केम्ब्रीज हिस्टोरी आफ इन्डिया, I

४. केटलॉग अफ द ख्रिष्टियन वर्नाकूलर लिटरेचर अफ इण्डिया ।

५. छम्ब स्टेट गजेटियर ।

६. डोग्राज—ले० क० डब्ल्यू० बी० कनिंगहाम ।

७. डोग्री भाषा—प्रो० गौरी शंकर ।

८. डोग्री भाषा और व्याकरण—वंशीलाल गुप्त ।

९. डोग्री फोक लिटरेचर—शिवनाथ (काश्मिर एफियर्स त्रयमासिक)

१०. डोग्री ल्यांग्वुएज एण्ड लिटरेचर ए सर्भे, शिवनाथ, डोग्री संस्था, जम्मु द्वारा प्रकाशित ।

११. डोग्री साहित्य दर्पण। १९६७ मा प्रथम डोग्री सम्मेलनमा पठित पत्रादिका संकलन ।

१२. अर्ली इण्डियन इम्प्रीण्टस्—केथरिन स्मिथ डाएल ।

१३. गजेटियर अफ इन्डिया, I

१४. गजेटियर अफ जम्मु एण्ड काश्मिर स्टेट ।

१५. गजेटियर अफ मण्डी एण्ड सुकेत स्टेट्स ।

१६. गजेटियर अफ शिमला हिल स्टेट्स ।

१७. गुरदासपुर डिस्ट्रीक्ट गजेटियर ।

१८. हमारा साहित्य (हिन्दी)—जे० एण्ड के० कल्चरल एकाडेमी द्वारा प्रकाशित ।

१९. हिमाचल के लोक गीत—जन-सम्पर्क विभाग, हिमाचल प्रदेश द्वारा प्रकाशित ।

२०. जागदियां जोतां (उर्दू)—वेद राही ।

२१. कांगड़ा वार्षिकी

२२. कांगडा के लोक गीत (हिन्दी)—एम० एस० रणधावा ।
२३. कांगड़ा डिस्ट्रिक्ट गजेटियर ।
२४. कांगड़ा के लोक गीत (उर्दू)—दूनी चंद ।
२५. कांगड़ी लोक गीत—गौतम व्यथित
२६. ल्यांग्वुएज हण्ट इन द हिमालायज—डा० सिद्धेश्वर वर्मा ।
२७. लिंग्वुइस्टिक सर्वे अफ इन्डिया-भोल० IX—ग्रियर्सन ।
२८. नमी चेतना, डोग्री पत्रिका—१९५० का र १९६७ देखि १९७५ सम्मका अंकहरू ।
२९. निबन्धावली—भोल० I, II—डोग्री रिसर्च इन्स्टीच्यूट, जम्मु द्वारा प्रकाशित ।
३०. नोट्स अन डोग्रा हिन्दु राजपुत कम्युनिटि—ठाकुर लक्ष्मण सिंह चरक ।
३१. आउट लाइन्स अफ इण्डियन फिलोलजि एण्ड अदर फिलोलजीकल पेपर्स—जोहन बीम्स ।
३२. पिपल अफ जम्मु एण्ड काश्मिर, देयर ल्यांग्वुएजेस एण्ड कल्चर—प्रो० गौरी शंकर
३३. प्लेस अफ डोग्री इन द ल्यांग्वुएजेस् अफ इण्डिया—डा० सिद्धेश्वर वर्मा
३४. रेखा डोग्री पत्रिका—१९६२-६३ मा प्रकाशित
३५. सारा साहित्य—१९६० देखि १९७४ सम्मका अंकहरू
३६. सेलेक्सन अफ डोग्री पोएट्री—जे० एण्ड के० कल्चरल एकाडेमीद्वारा प्रकाशित निम्न शीर्षकहरू
(क) नीहारिका
(ख) अरुणिमा
(ग) प्रातकिरण
(घ) मधुकण
(ङ) मग धुलि
३७. स्याडो एण्ड सनलाइट—डा० करण सिंह
३८. शिराजा (हिन्दी पत्रिका)—जे० एण्ड के० कल्चरल एकाडेमीद्वारा प्रकाशित ।
३९. शिराज (डोग्री पत्रिका)—ऐजन
४०. सियालकोट डिस्ट्रिक्ट गजेटियर
४१. सम एस्पेक्टस अफ डोग्री लिंग्वुइस्टिकस्—प्रो० गौरी शंकर
४२. ट्राभल्स् इन काश्मिर एण्ड पंजाब—बेरोन चार्ल्स हुगेल ।
४३. योजना—विशेष साहित्य अंक

# अनुक्रमणिका